अध्यात्म रामायणका श्लोकहरूको भाषान्तर हो। भक्तहरूका चौथ लक्षण यसमा भनिएको छ। बाल्मीकि भन्नुहुन्छ—'प्रभु, तपाईं निवासका निमित्त मसँग ठाउँ सोध्नुहुन्छ, तर तपाईं कहाँ हुनुहुन्न ? नाथ, तपाईं लीला गरिरहनुभएको छ। तपाईं चित्रकूट पर्वतमा निवास गर्नुहोस्।'

श्रीमद्‌भागवत समाधिभाषामा छ। बाल्मीकि रामायण पनि समाधिभाषामा छ।

चित्त भनेकै चित्रकूट हो। अन्तःकरणले परमात्माको स्वरूपको सतत् ध्यान गर्नु। तब त्यसलाई चित्त भन्छन्। परमात्माको चिन्तन सतत् होस् तब चित्त भनिन्छ। चिन्तन गर्नु चित्तको धर्म हो। निश्चय गर्नु बुद्धिको धर्म हो। सङ्कल्प गर्नु मनको धर्म हो। एउटै अन्तःकरणका यी भेद हुन्। पाप हुन्छ अज्ञानबाट। परमात्मा यदि चित्तमा आए तब जीव कृतकृत्य हुन्छ।

लक्ष्मण वैराग्य हुन्। सीता पराभक्तिकी स्वरूप हुन्। राम परमात्मा हुन्। जहिले पनि सङ्कल्प गर, शुभ नै गर। सधैं यो भनिठान परमात्मा चित्तमा बस्नु हुन्छ।

रघुनाथजी मन्दाकिनीका किनारमा पुग्नुभयो। यहाँ अत्रि ऋषिको आश्रम छ। उहाँ वयोवृद्ध ऋषि हुनुहुन्छ। उहाँको गङ्गा स्नानको नियम थियो तर जान सक्नुहुन्नथ्यो। त्यसकारण अनसूयाले गङ्गाजीसँग प्रार्थना गर्नुभयो 'मेरो आश्रममा प्रकट होइदिनुहोस्। उनको प्रार्थनाबाट प्रसन्न भएर गङ्गाजी वहाँ प्रकट भइदिनुभयो।'

तुलसीदासजीलाई चित्रकूटको घाटमा रघुनाथजीको दर्शन भयो।

चित्रकूट के घाट पर भइ सन्तन की भीर।
तुलसीदास चन्दन घिसे, तिलक करैं रघुवीर॥

तुलसीदासजीले जब रामलाई चिन्न सक्नुभएको थिएन सो समयमा हनुमानजीले सुगाको रूप लिएर यो दोहा तीन पटक सुनाएको थियो।

विचार गर्नुहोस्—पापको मूल चित्तमा छ। पाप हुन्छ अज्ञानबाट। यस चित्तमा यदि रघुनाथजी आउनुभयो भने चित्त विशुद्ध भइहाल्छ।

गुहक सेवा गरिरहेछन्। रामको आगमनको समाचार भिल्ल, किरात आदिमा फैलियो। रामचन्द्रजीको दर्शनका निमित्त सबैजना आउनथाले। उनको दर्शन गर्दैमा जड़ चेतन बन्दछ र चेतन जड़जस्तो हुनेछ। कुशलमङ्गल सोधपूछ भयो। प्रभुजी, तपाईंको दर्शनद्वारा हाम्रो कल्याण भयो, पाप छुटेर गयो, स्वभाव बदलियो, जीव सुध्रियो। यहाँका वन, पहाड़, गुफा आदि सबै हामीले देखे-चिनेजस्ता भएका छन्। हामी सबै तपाईंका सेवक हौं, तपाईं जहाँ चाहनुहुन्छ हामी लैजाने छौं।

रामचन्द्रजी चित्रकूटमा बस्नुभयो। त्यसबेलादेखि चित्रकूटका वृक्ष फूल र फलले पूर्ण भएर हल्लिन थालेका छन्। प्रतिदिन कैयन् ऋषि-मुनिहरू रामजीको दर्शनका निमित्त आउने-जाने गर्थे।

रामचन्द्रको वर्णन कसले गर्न सक्छ। एक-एक अक्षर महापातकका नाशक हुन्।

चरितं रघुनाथस्य शतकोटिप्रविस्तरम्।
एकैकमक्षरं पुंसां महापातकनाशनम् ॥

मन्त्री सुमन्त्रलाई अयोध्या फर्कने आज्ञा भयो। गुहक चित्रकूटबाट नफर्किएसम्म सुमन्त्र गंगाकिनारामै बसिरहेका थिए। 'रामलाई कहाँ छाड़ेर आयौ भनेर अयोध्याका प्रजाले सोधे म के उत्तर दिउँला। राजा दशरथले पनि प्राणै त्यागिदिनुहोला।'

सुमन्त्रको रथका घोड़ाहरूले पनि रामचन्द्रजी जुन दिशातर्फ जानुभएको थियो त्यसैतर्फ टकटकी लगाई हेरिरहेका थिए, उनीहरूले पनि संझे हाम्रा मालिक हामीलाई छोड़ेर त्यसैतर्फ कहीं जानुभयो होला। उनीहरूले खानुपिउनु पनि छोड़िदिएका छन् भने उनका माता-पिताको व्याकुलताको झन् कुरै छोड़िदिऊँ। उनीहरू अब बाँच्नै कसरी सक्लान्?

गुहक आएर सुमन्त्रसँग भन्नथाले—'मन्त्रीजी, तपाईं स्वयं ज्ञानी हुनुहुन्छ। अब तपाईंले धैर्य धारण गरेर अयोध्या फर्किनुहोस्। साथमा चार भिल्ल सेवक पनि पठाए।'

मध्य रात्रिका समयमा सुमन्त अयोध्या पुगे। म कसैलाई पनि आफ्नो मुख देखाउन्नँ। कसैले सोध्यो भने म के उत्तर दिऊँ? तैपनि उनी कैकेयीको आवासमा गए। महाराज दशरथको दर्शन भएन तब कैकेयीसँग सोधे—'महाराज कहाँ हुनुहुन्छ?'

जब रामचन्द्रजी वनतर्फ लाग्नुभएको थियो त्यसैवेला दशरथले अह्राउनुभएको थियो अब म कैकेयीको आवासमा बस्न सक्दिनँ। मलाई कौशल्याको आवासमा लैजाओ। त्यसकारण उहाँ कौशल्याको आवासमा हुनुहुन्थ्यो।

रामविरहमा जसका आँखाबाट दुइ थोपा आँसु पनि झर्न सकेन भने, त्यसको मन शुद्ध हुन सक्दैन।

एउटी दासीले मन्त्री सुमन्तजीलाई कौशल्याको आवासमा लिएर आई।

राम वियोगमा पाँच दिन बितिसकेको छ। दशरथजीको मुहारमा मृत्युको छायाँ पर्न थालेको छ। मन्त्रीले नजीकै गएर राजालाई दण्डवत् प्रणाम गरे। दशरथजीले आँखा खोलेर हेर्नुभयो र सोध्नुभयो—'मेरा राम कहाँ छन्? कहाँ छन् मेरा राम? कहाँ छोड़ेर आयौ मेरा रामलाई? सीता फर्किएर आएकी छन् कि छैनन्? मलाई त्यहीं लैजाऊ जहाँ मेरा राम छन्।'

दशरथजीको व्याकुलता देखेर सुमन्त्रका आँखाबाट आँसु झर्न थाले, उनले भने—'महाराज! तपाईं स्वयं ज्ञानी हुनुहुन्छ। धैर्य धारण गर्नुहोस्। मैले रामचन्द्रजीको समाचार ल्याएको छु। उहाँले भन्नुभएको छ मेरा पिताजीलाई मेरो प्रणाम भनिदिनु र उहाँकै प्रतापबाट हामी वनमा सकुशल छौं। महाराज, म कति निर्दयी छु रामलाई छोड़ेर बाँची-बाँची फर्किएर आइरहेछु।'

सीताजीले पनि मसँग भन्नुभएको थियो—'मन्त्रीजी, तपाईं मेरा पितासमान हुनुहुन्छ। म अयोध्या फर्किएर जान सक्दिन। आफ्ना पतिका विना म बाँच्न सक्दिनँ। मेरा ससूराज्यूमा मेरो दण्डवत् पुगोस्।'

नाविक केवटले पनि उहाँहरू सबैको सेवा गरे। निषादराजले पनि उनीहरूको बड़ो सेवा गरे। मचाहिं फर्कीआएँ मजस्तो निष्ठुर अरू को हुनसक्दछ ?

सुमन्त्रको कुरा सुन्नासाथ राजा, 'हे राम, हे राम,' भन्दै तल लड़े। कौशल्या व्याकुल भइन्। तैपनि राजालाई धैर्य गर्न भन्दैछन्।

राम विरह एउटा ठूलो सागर हो जसलाई पार गर्न बड़ो कठिन छ। तपाईं कर्णधार हुनुहुन्छ। यदि तपाईंले धैर्य गरिदिनुभएन भने अरू सबैको के होला ?

दशरथजीले भन्नुभयो—'मेरो छातीमा वेदना भइरहेछ। मलाई श्रवणकुमारका माता-पिताले श्राप दिएका थिए पुत्र विरहमा मृत्यु हुनेछ।' सबै कुरा यस बखत उहाँलाई संझना भयो र सुनाइदिनुभयो। दशरथजी विलाप गर्दै भन्नथाल्नुभयो—'मलाई त्यहीं लैजाओ जहाँ मेरा राम छन्। आफ्नी स्वास्नीको कुरामा लागेर मैले आफ्नो सुयोग्य पुत्रलाई वनवास पठाइदिएँ।' मध्यरात्रिको समय थियो, राजाले 'राम-राम' भन्दै देह त्याग गरे।

राम राम कहि राम कहि राम राम कहि राम।
तनु परिहरि रघुवर विरह राउ गयउ सुरधाम॥

दशरथजीको रामप्रेम र रामविरह यति हार्दिक थियो जो उनको प्राणपखेरू उड़िगयो।

सबै विलाप गर्न थाले। सारा नगरमा कोलाहल मच्चियो। गुरु वशिष्ठ सान्त्वना दिन लाग्नुभयो। उहाँले सेवकहरूलाई आज्ञा दिनुभयो—'कैकेय देशमा जाउ र भरत शत्रुघ्नलाई भन्नु कि गुरुजीले उनलाई छिटो बोलाएको छ।'

भरत-शत्रुघ्न आइपुगे। उनलाई बाटामा अपशकुन पनि धैरै भए। सबै बजार र कारबार बन्द थियो, मानिसहरूले श्याम वस्त्र धारण गरेका थिए। भरतजीले केही चाल पाउन सकेनन् यो सबै के हुँदैछ। भरतको आगमनको समाचार पाएपछि कैकेयी बड़ो आनन्दले दगुर्दै उनको स्वागत गर्न आइन्। भरतले सोधे—कहाँ हुनुहुन्छ मेरा पिताजी ? कुशलै हुनुहुन्छ ?

कैकेयी—'तिमीलाई के भनूँ ? सारा साम्राज्य गइसकेको थियो तर मैले बचाएँ। मन्थराको राय अनुसार तिम्रो पितासँग मैले वरदान माँगे, त्यसकारण यो राज तिम्रो हो। पिताजीले वरदान दिएर व्याकुल हुनुभयो र उहाँले प्राणत्याग गर्दिनुभयो।'

भरत—'त्यस समय मेरा दाजु राम कहाँ हुनुहुन्थ्यो ? अब किन देखिनुहुन्न ? कहाँ हुनुहुन्छ उहाँ ?'

कैकेयी—'उनी त वनमा छन्। मेरो वरदानका अनुसार उनलाई वनवास दिइयो।' सारा कुरा थाहा पाएपछि भरतको हृदय दुःखले भरियो। आफ्ना आमाका प्रति उनका मनमा बड़ो क्रोध र तिरस्कार उम्लिएर आयो। 'मेरा दाजुलाई वनवास दिँदा तिमीलाई लाज लागेन? यस्तो अशुभ वरदान माग्दा तिम्रो जिब्रो किन नकाटिएको?'

शत्रुघ्नले मन्थरालाई देख्नासाथ एकलात हिर्काइदिए।

भरत-शत्रुघ्न कौशल्याकहाँ आए। आमाको विरहसंतप्त रूप उनले हेर्न सकेनन्। भरतजीलाई मूर्च्छा आयो। भरतजी कौशल्या मातालाई भन्न लागे—'माता, राम कहाँ हुनुहोला? सबै अनर्थको मूल मै हूँ। कैकेयीको वरदानमा यदि मेरो रन्चमात्र पनि सम्पत्ति छ भने मलाई मातृ-पितृहत्याको फल मिलोस्।'

कौशल्या—'बाबु, धैर्य गर। शोकको त्याग गर। राम हाँस्दै वनमा गएका छन्। तिम्रो पिताले प्राण त्याग गर्नुभयो। मेरो भाग्य रिसाइरहेछ। मै हुँ यस अनर्थको कारण। अझ पनि मेरो प्राण किन बाँकी रहेको?'

प्रातःकाल भएपछि सरयू नदीको किनारामा महाराज दशरथको पार्थिव देहको अग्निसंस्कार गरियो।

दशरथ महाराजको आज्ञा थियो 'रामलाई वनवास दिनमा यदि भरतको पनि सम्मति रहेको भए उसको हातबाट अग्निसंस्कार नगराउनू।'

दशरथका रानीहरू पनि डढ़ेर सती जान खोजिरहेका थिए तर भरतजीले उनलाई त्यसो गर्न दिएनन्।

पन्द्रदिनका पछि शोकसभाको आयोजना भयो। वशिष्ठसहित कैयौं ऋषि पनि वहाँ उपस्थित थिए। सबैभन्दा पहिले वशिष्ठजीले महाराज दशरथको गुणगान गर्नुभयो र शोकाञ्जलि दिनुभयो। फेरि उहाँले राजकुमार रामको धैरै-धैरै प्रशंसा गर्नुभयो र भरतलाई भन्नुभयो पिताजीको आज्ञा शिरोधार्य गरेर रामले वनगमन गरेका छन्, दशरथजी स्वर्ग जानुभयो। त्यसकारण भोलि तिम्रो राज्याभिषेक गरिदिनेछु।

तर भरतलाई यो कुरा मञ्जूर भएन। उनलाई धैरै संझाइयो।

विधाताको गति अति क्रूर छ।

जसले ब्राह्मणको शरीर पाएको छ र पनि वेदशास्त्र जान्दैन भने र आफ्नो धर्म छोड़ेर विषय-भोगमा मात्र लीन रहन्छ भने त्यस्ताको शोक गर्नुपर्छ।

शोक त्यो वैश्यको गर्नुपर्ला जसले आफ्ना साथमा धन छँदा-छँदै पनि न दान गर्छ, न अतिथि सत्कारै गर्छ, न भक्ति गर्दछ।

शोक त्यस गृहस्थको हुनुपर्छ जो मोहवश आफ्नो कर्ममार्गको त्याग गर्दछ।

त्यस संन्यासीको शोक गर्नुपर्छ जसले ज्ञान-वैराग्यलाई छोड़ेर सांसारिक प्रपञ्चमा फँसेको छ।

त्यो नारी शोचनीय छ, जो आफ्नो पतिलाई छल्दछे, जो कुटिल, कलहप्रिय र स्वेच्छाचारिणी छे।

सर्वाधिक शोचनीय त्यो हो जो आफ्नो समय र सम्पत्तिको दुरुपयोग गर्दछ, अर्काको अनिष्ट गर्दछ, आफ्नो शरीरको पोषण र लालनमा मात्रै भुल्दछ र जो नाममात्र पनि हरिभक्ति गर्दैन।

महाराज दशरथका निमित्त किन शोक गर्ने ? साँचो राम-प्रेम उहाँको मात्र थियो जो रामगमनको दुःखले उहाँको प्राण गयो। उहाँको यो लोक पनि सुध्रियो र परलोक पनि।

भरत ! वनवासको अवधि समाप्त भएपछि रामको पुनरागमनपछि तिमीलाई जे इच्छा लाग्छ गर्नु। आज अयोध्या अनाथ छ। यसलाई तिमीले सनाथ पार्नु छ।

कौशल्याले पनि भरतलाई उस्तै आज्ञा दिइन्।

भरतजी उत्तर दिन खड़ा भए। रामसीताको स्मरणले गर्दा उनका आँखाबाट बलिन्द्र आँसु झर्न लागे। उनी भन्दछन्—पिताजी स्वर्ग जानु भयो र रामचन्द्रजी वन जानुभयो। अब मेरो राज्याभिषेक भएर मलाई कुनचाहिँ आनन्द र सुख पाइएला ? अयोध्याका प्रजालाई पनि के चाहिँ लाभ होला ? सबै अनर्थको कारण मै हुँ। जगत्‌मा म पापीजस्तोको जन्म नभएको भए बेस हुन्थ्यो। मेरा पिताजीलाई सद्‌गति प्राप्त भएको छ। उहाँका निमित्त मलाई धेरै दुःख छैन। मलाई जो दुःख छ, त्यो यो हो मेरै कारण दाजुलाई वल्कल धारण गरी नाङ्गो पाउ वनमा भट्कनु परिरहेछ।

रघुनाथजीका विना सबै कुरा व्यर्थ छ। मलाई त्यसै वेला शान्ति मिल्ला जब मैले आफ्ना दाजु-भाउजुको दर्शन पाउँला। कैकेयीको यो छोरो कैकेयीभन्दा पनि अधम छ। रामजन्द्रजीको सेवा गर्नैमा मेरो जीवनको सफलता छ।

जुन राज्यासनमा कहिले महाराज भगीरथ बस्दथे, त्यसमा बस्ने पात्रता ममा छैन। मलाई आज्ञा र आशीर्वाद दिनुहोस्। म भोलि रामचन्द्रकहाँ जान्छु। तपाईंहरू प्रार्थना गर्नुहोस् उहाँ मेरै साथ अयोध्या फर्केर आउनुहोला। म उहाँसँग आफ्ना पापहरूको क्षमायाचना गर्नेछु। उहाँ मेरो स्वामी हुनुहुन्छ, म उहाँको सेवक।

राम-सीताको स्मरण गर्दै भरतका आँखाबाट आँशु बगिरहेका थिए। जनतालाई विश्वास भयो भरतजी प्रेमको मूर्ति हुनुहुन्छ। सबै रामको दर्शन गर्नका निमित्त भरतजीका साथ जान तयारी गर्न थाले।

भरत चरित्रमा तुलसीदासजी पनि समाधिस्थ हुनुभएको थियो।

सभा विसर्जित हुन थाल्यो। नगरका आबाल वृद्ध-स्त्रीपुरुष सबै रामचन्द्रजीको दर्शनार्थ आतुर थिए, त्यसकारण वनगमनको तयारी गर्न थाले। सबैका मनमा एकै भाव जागिरहेको थियो जो कहिले भोलि बिहान होला र कहिले हामी वनतर्फ प्रस्थान गरौंला।

प्रातःकालमा राजदरबारका आँगनमा सारा नगर उम्लिएर आयो। सबैलाई आशा लाग्यो राम-सीता आज अयोध्या फर्किएर आउनेछन्। भरतजीले भने 'जो सँगै जान चाहन्छन् उनीहरू आउन सक्दछन्।'

ऋषि वशिष्ठजी र अरुन्धती पनि रथमा विराजमान भए। अहिलेसम्ममा कैकेयीको शिरबाट पनि कलिको भूत ओर्लिसकेको थियो र उनी रामको दर्शनका निमित्त आतुर भइसकेकी थिइन्। भरतका निमित्त स्वर्णरथ तयार गरियो तर उनी त्यसमा चढ्न चाहेनन्। अनि मानिसहरूले भन्न थाले—'यदि तपाईं रथमा चढ्नुहुन्न भने हामी पनि पैदलै हिँड्छौं। माता कौशल्याले भरतलाई संझाइन् यदि तिमी रथमा सवार हुँदैनौ भने तब अयोध्याका सारा प्रजालाई कष्ट हुनेछ।' कौशल्याको आज्ञाबाट भरत रथ चढे।

भरतजी आदि शृंगवेरपुरको नजिकै आए तब गुहकका सेवकहरूले समाचार दिए भरत आफ्नो चतुरंगिणी सेनाका साथ आइरहेछन्। गुहकले सोचे भरत सेनाका साथ राम-लक्ष्मणसँग युद्ध गर्न आइरहेछन्। यदि यस्तो नभएको भए सेनालाई पनि किन साथै ल्याएको। गुहकले भिल्ल सेनालाई आज्ञा दिए 'कसैलाई पनि वारि आउन नदिइयोस्।'

एउटा वृद्ध भिल्लले गुहकलाई आएर भन्यो—भरत शायद रामचन्द्रजीलाई मनाउन आइरहेछन्। गुहकले सोचे—यो पनि संभव हुन सक्छ। हतार-हतारमा झगड़ा गर्नु ठीक छैन। उनी आफ्ना मन्त्रीसाथ भरतलाई भेट्न आए।

सबभन्दा अगाड़ि वशिष्ठको रथ थियो। गुहकले उहाँलाई साष्टाङ्ग प्रणाम गरे। वशिष्ठले भरतलाई भन्नुभयो—'भरत रामको अन्तरङ्ग सेवक तिमीसँग भेट्न आइरहेछन्।' भरतको दृष्टि निर्गुण छ उनलाई प्रसन्नता भयो दाजुको सेवक भेट्न आइरहेछन्।

भरतको मनोभावको परीक्षाका निमित्त राजा गुहक आफू सत्त्विक, राजसिक र तामसिक तिनै प्रकारको भोजनसामग्री लिएर आएका छन्। कन्दमूल सात्त्विक भोजन, मिष्टान्न राजसिक भोजन र माँस-मदिरा तामसिक भोजन हुन्। यिनी तीनमध्ये जसमाथि भरतको दृष्टि सर्वप्रथम पर्ने छ। त्यही भाव भरतको मनमा छ भन्ने हामी संझन सक्ने छौं।

तर हेर्नु होस् भरतले यी तीनै मध्येमा एउटामा पनि दृष्टि हालेनन् किनभने उनी निर्गुण हुन्।

मनुष्यको परीक्षा आहार-विहारबाट हुन सक्छ।

भरतको मुखबाट बस् राम-नाम उच्चारण भइरहेको थियो। गुहकलाई विश्वास भयो भरतजी लड्न होइन भेट्नका निमित्त आइरहेछन्। राजा गुहकले भिल्लहरूलाई आज्ञा दिए अयोध्याका

प्रजाको राम्ररी स्वागत गर। भिल्लहरूले तरह-तरहको फल र कन्दमूल लिएर आएर स्वागत गरे।

भरतजीले गङ्गालाई प्रणाम गर्दै भने, 'माता, म आज केही मागिरहेछु।'

जोरि पानि बर मागउँ एहु।
सीय राम पद सहज सनेहु॥

'मेरो यही भावना छ। मलाई यही वरदान देऊ। मलाई रामचरणप्रेमको दान गर।' उनको प्रार्थना सुनेर गङ्गाजीले आवाज दिनुभयो—'तिमी चिन्ता नगर। सबैको कल्याण हुनेछ।'

गुहकले भरतलाई त्यो अशोक वृक्ष देखाए जसको छायामुनि श्रीरामले विश्राम गर्नुभएको थियो। भरतले त्यस वृक्षलाई पनि प्रणाम गरे। श्रीरामको कुशको ओछ्यान देखेर उनको हृदय मनभरि भयो। 'मेरी भाउज्यूलाई कति कष्ट सहनु परिरहेछ। कैकेयी यी सबै कष्टहरूको कारण मै हुँ।'

सारा रात सबैले त्यहाँ विश्राम गरे। बिहान भयो। भरतजीले भने—'यस स्थानबाट रामचन्द्रजी पैदलै अगाड़ि जानुभएकाले म पनि पैदलै हिँड्ने छु। सबैको रथ अगाड़ि लैजाओ।'

अगाड़ि-अगाड़ि सबै रथ चल्न थाले र पछि-पछि भरत, शत्रुघ्न र गुहक राजा पैदल हिँड्न थाले। भरतको दशा करुणाजनक छ। उनी शत्रुघ्नको काँधको सहाराले, 'हे राम, हे राम' भन्दै अगाड़ि बढ़िरहेछन्।

धन्य छ भरतलाई। पिताजीबाट प्राप्त राज्यलाई अस्वीकार गरेर दाजुलाई मनाउन गइरहेछन्।

भरतको भक्ति दास्यभक्ति हो। उनी जस्तो ठूलो भाग्यवान् को होला? भरतजीलाई रामचन्द्रजी सदा संझनुहुन्छ।

जग जप् राम, राम जपु जेही।

स्वयं ईश्वर जसलाई स्मरण गर्छन् उसैको भक्ति सच्चा भक्ति कहिन्छ।

जीव ईश्वरलाई संझना गरोस्, यो सामान्य साहजिक कुरा भयो। तर स्वयं ईश्वर जुन जीवलाई संझन्छन् त्यसलाई धन्य छ। उसको भक्ति धन्य छ।

भरतजीको पैतालामा हिँड्दा-हिँड्दा फोका उठ्यो तर उनले सवारीमा नचढ्ने प्रतिज्ञा गरेका छन्।

तिनीहरू सबै प्रयागराज आइपुगे। भरतजीले प्रणाम गर्दै भने—'तीर्थराज, म अरू कुरा केही चाहन्नँ, मेरो एक मात्र माग यही हो।'

अरथ न धरम न काम रुचि, गति न चहँहुँ निरबान।
जनम जनम रति रामपद, यह वरदान न आन॥

मानिसहरूले भरतजीलाई भने मुनि भरद्वाजको आश्रममा जानुपर्छ। भरतले कैकेयीलाई भने—'कैकेयी, तिमीले मेरो मुखमा कालो पोतिदिएकी छौ। म सन्तहरूलाई आफ्नो मुख कसरी देखाउँला?'

तीर्थको नियम छ जबसम्म वहाँ साधु-सन्तको सङ्गत गरिँदैन, तबसम्म तीर्थयात्रा फलवती हुन पाउँदैन।

भरतजी भरद्वाजमुनिको आश्रममा आउनुभयो। मुनिले भरतलाई भने—'शोक नगर। यो ईश्वरको लीला हो। तिमी बड़ो भाग्यशाली छौ। भगवान् रामचन्द्र तिमीलाई प्रतिदिन संझनुहुन्छ, तिमीजस्तो भाइ अरू कोही छैन भनेर। भातृप्रेमको आदर्श स्थापित गर्नलाई आज तिमी रामलाई मनाउन गइरहेछौ, यो राम्रो कुरा हो।'

सबै साधनहरूको फल रामदर्शन हो। साधन गर्नाले मलाई रामदर्शन भयो। तर रामजीको दर्शनको फल चाहिँ भरतजी हुन्। म तिम्रो दर्शनबाट कृतार्थ भएँ। रामको दर्शन पाएपछि सोचेको थिएँ उनको दर्शनको फल के पाइएला। अब मैले बुझें रामदर्शनको फल हो भरत-दर्शन।

भरतजीले वहाँ कुराकानी गरे। यी सबै अनर्थहरू र दुःखहरूको कारण मै हुँ।

भरद्वाज ऋषिले भरतलाई भने—'राक्षसहरूको वध गर्नका निमित्त मात्र रामचन्द्रजीले यी सबै लीलाको रचना गरेको हो। त्यसकारण तिमीले शोक गर्नुपर्दैन।'

भरद्वाजले अणिमा आदि ऋद्धि-सिद्धिहरूको आह्वान गरेर भरत र उनका साथ आएका सबै मानिसहरूको राम्ररी स्वागत गरे। रामजीको दर्शनार्थीको राम्ररी स्वागत हुनु कुनै आश्चर्यको कुरा भएन।

भरतको भ्रातृप्रेमको परीक्षा लिनका निमित्त भरद्वाज मुनि रात्रिका समयमा वहाँ आए। भरतजीले कुशको आसन बनाई नासिकामा दृष्टि स्थिर गरेर सीतारामको जप गरिरहेका थिए। अणिमा सिद्धिले उनलाई भोजन र विश्राम गर्न बिन्ती गरे तर भरतजीले भन्नुभयो—'राममिलन पछि मात्र मैले सच्चा शान्ति पाउनेछु।'

भरतको रामप्रेमको वर्णन कसले गर्न सक्छ? यो वाणीको सामर्थ्य बाहिरको कुरा भयो।

प्रातःकाल भरद्वाज फेरि वहाँ आए। रातभर भरतले शय्याको स्पर्श गरेनन्। भरतजीको यस्तो कठोर तपश्चर्याले मुनिको हृदय मनभरी भयो। ठूलो आवाजमा भने—'भरतदर्शन रामदर्शनको फल हो।'

भरद्वाजमुनिले धेरै सिद्धिहरू बताउनु भयो तर भरतजी उनमा फँसेनन्।

चखेवा र चखेवी रातको समयमा साथ-साथै बस्दैनन्। यदि यिनलाई पिँजड़ाभित्र राख्यो भने पनि रात्रिका समयमा यी संयोग गर्दैनन्। ऋषिको परीक्षा लिनाको इच्छा पिँजड़ा हो। सिद्धिहरू

भोगविलासका वस्तुहरू चखेवी हो। भरतजी हुन् चखेवा। भरतजीले ती भोगविलासका सामग्रीहरूको मनले पनि स्पर्श गरेनन्।

जसलाई भक्तिको रङ्ग लाग्छ, उसलाई सांसारिक भोग रोगको समान लाग्छ। जबसम्म सांसारिक माया मीठो लाग्छ तबसम्म जीवलाई भक्तिको रङ्ग लाग्दैन, भोग र भक्ति एकसाथ बस्न सक्दैनन्।

मानिसहरू मान्दछन् भक्ति गर्नु बड़ो सजिलो छ, तर भक्ति गर्नु बड़ो कठिन काम छ। यो टाउकाको भारी हो। त्यसवेला नटवर भगवानसँग सम्बन्ध हुन्छ, जब सांसारिक विषयसुखहरूको मनबाट पनि त्याग भएर जान्छ अनि भक्तिको रङ्ग लाग्न सक्छ।

काम शब्दमा दुइ अक्षर छन् क+आम। 'क' को अर्थ हो सुख र 'आम' को अर्थ हो 'काँचो'। अर्थात् कामको अर्थ हो कच्चा सुख, काम सच्चा सुख होइन। कामलाई हृदयबाट बाहिर निकालिदिनुहोस्। हृदयको सिंहासनमा ठाकुरजीलाई स्थापित गर्नुहोस्।

एउटा सेठको पुत्र वेश्याको चक्करमा परेछ। सेठले उसलाई भन्यो—'तैंले त्यसको कुसङ्गत छोड़िस् भने तेरो विवाह कुनै असल कन्यासँग हुने थियो।'

पुत्र—'पिताजी, पहिले मलाई त्यस्ती केटी पाइयोस् अनि म वेश्यालाई छोड़िदिनेछु।'

पिता—'विचार गर। वेश्याको सङ्ग नछोड़ीकन कुनै असल घरकी कन्या पाउन कसरी सकिन्छ।'

हाम्रो पनि यही हालत छ। हामी विषयभोगको त्याग गर्ने इच्छा या कोशिश गर्दैगर्दैनौं र भन्छौं भक्तिबाट आनन्द पाईदैन। आनन्द पाइयोस् पनि कसरी।

भोग बाधक छैन तर भोगासक्ति बाधक छ। भोगवासनामा फँसेको मन ईश्वरबाट टाढ़ा भाग्दछ।

भरतको त्याग अति उत्तम छ। अष्टसिद्धिहरू सेवा गर्नलाई तयार छन् तर भरत उनीहरूतिर दृष्टिसम्म पनि लाउँदैनन्। वैराग्यको विना भक्ति रुन्छे। वैराग्य छैन भने भक्ति थोतो हुन्छ। भरतको एउटै इच्छा छ रामको दर्शन।

**मोहि लागी लगन हरि दर्शन की।**

यो भागवत-कथा ज्ञान र वैराग्यलाई पुष्ट गर्नलाई हो।

भरत सीतारामका विना विकल छन्। भोगका अनेक पदार्थ आफ्ना समक्ष छन्, तर उनको मन त्यसतर्फ जाँदै जाँदैन।

सबै भोग पदार्थ सुप्राप्य भए पनि जसको मन त्यहाँ जाँदैन, त्यही सच्चा वैष्णव हो। त्यही सच्चा भक्त हो।

## जनम जनम रति रामपद यह वरदान न आन।

भरतजी त्रिवेणी गङ्गासँग भिक्षा मागिरहनु भएको छ मलाई अरू कुनै इच्छा छैन। म मोक्ष माग्दिनँ। अर्थ, धर्म, कामको पनि इच्छा छैन। अब मलाई रामदर्शनको मात्र इच्छा छ।

ज्ञानी पुरुष मुक्तिको इच्छा राख्दैनन्। जो भक्ति-रसमा डुबेको छ, त्यसलाई मोक्षको आनन्द तुच्छ लाग्छ, वेदान्त भन्दछ, आत्मा सदा मुक्त छ, उसको अरू मुक्ति के होला? भगवान् मुक्ति दिनुहुन्छ तर भक्ति छिटै दिनुहुन्न।

साधुगण भरतजीको प्रशंसा गर्छन्। आफ्नो वैराग्यभन्दा उनको वैराग्य श्रेष्ठ छ।

भरतजी आगाडि बढे। दसौं दिनमा उनको रामसँग मिलन हुने भइरहेछ। सूर्यनारायण अस्ताचलतर्फ लागे। भरत—'सीताराम, सीताराम' भन्दै अगाडि बढ़िरहेछन्। चित्रकूट पर्वत देखियो तब मानिसहरूले साष्टाङ्ग प्रणाम गर्न थाले। त्यस दिन चित्रकूटको फेदीमा सबैको विश्राम भयो।

यता सीताजीले भरत भेट गर्न आइरहेको सपना देखिन्। उनका साथ अयोध्याका प्रजा पनि छन्। सासूजीको पोशाक शोकसूचक छ। रामजीले सपनाको कुरा सुनेपछि भन्नुभयो—'यो स्वप्न मङ्गलमय छैन। कदाचित् कुनै दुःखद समाचार सुन्नुपर्ला।'

प्रातःकाल भयो। भरतजीले पर्वतमाथि जानलाई वशिष्ठजीको आज्ञा माग्नुभयो, तर उहाँ व्याकुल भएर यो सोचिरहनु भएको थियो मैले आफ्नो कालो मुख रामजीलाई कसरी देखाउँला। मलाई देख्नासाथ मुख बटार्नुभयो भने? होइन, होइन, उहाँले यस्तो कहिल्यै गर्नुहुन्न। उहाँले मलाई अवश्य स्वीकार्नुहुनेछ, तर फेरि भाउज्यूले मलाई भेट्नबाट उहाँलाई रोकिदिनुभयो भने? अहँ, उहाँले पनि यसो गर्नुहुन्न। भरतजी 'सीताराम, सीताराम' भन्दै जान थाल्नुभयो।

भिल्लहरूले यस्तो देखेपछि दगुर्दै रामचन्द्रजीकहाँ आएर भन्नलागे—'कुनै भरत नाउँको राजा तपाईंसँग भेट गर्न आइरहेछन्। साथमा चतुरङ्गिणी सेना पनि छ। यही कारणले हाम्रा पशुहरू भयले भागिरहेछन्।'

रामचन्द्रजी सोचमा डुब्नुभयो। लक्ष्मणको मनमा यो प्रश्न उठ्यो उनलाई भेट्नै आउनुपर्ने थियो भने आफ्ना साथ सेनालाई किन ल्याएको हो। त्यसो तर उनी साधुजस्ता थिए, तर राज्य-प्राप्तिपछि उनको मति भ्रष्ट भयो कि? उनी आफ्नो बाटो निष्कण्टक गर्नलाई मात्र आइरहेका छैनन्? सत्ता मानिसलाई स्वार्थी र अन्धो बनाइदिन्छ। लक्ष्मणजी क्रोधित भए, तर रामचन्द्रजीले उनलाई संझाउँदै, शान्त गर्दै भन्न लाग्नुभयो—'लक्ष्मण, भरतलाई यदि ब्रह्मलोकको राज्य प्राप्त भए पनि उसलाई सत्ताको मदले प्रभावित गर्न सक्ने छैन। भरतजस्तो भाइ जगत्मा न भएको छ न कहिल्यै होला।'

भरत सीतारामको जप गर्दै आइरहेछन्। उनका प्रेमले चित्रकूटका पत्थर पनि मानौं सचेत जस्ता भएका छन्, भरतले टाढ़ैबाट देखे राम आँगनमा बस्नुभएको छ र ज्ञानवार्ता भइरहेछ।

सीता र लक्ष्मण सेवामा उपस्थित छन्। भरत असमञ्जसमा पर्छन्। म पापी हुँ, उनका सामुन्ने कसरी जाऊँ ?

आफूले आफैंलाई धैर्य दिँदै भरतजीले रामका नजिक गएर साष्टाङ्ग दण्डवत् प्रणाम गरे। लक्ष्मणजीले यो देखेर रामचन्द्रजीलाई भने—'भरत तपाईंलाई प्रणाम गरिरहेछन्।' रामचन्द्रजीले भन्न थाल्नुभयो—'कहाँ छ मेरो भरत ?' उहाँले भरतलाई उठाएर आफ्ना हृदयमा लाउनुभयो।

चित्रकूट पर्वतमा जीव र शिवको मिलन भयो।

चित्रकूटमा भगवान्, लक्ष्मण र जानकीका साथ निर्वासित छन्। लक्ष्मण वैराग्य हुन्, सीताजी पराभक्ति र चित्रकूट चित्त। यस किसिमबाट भगवान् वैराग्य तथा पराभक्तिका साथ चित्तका अन्तरमा विराजमान हुनुहुन्छ। भरत जीव हो त्यसैले भेट्न भनी गएको। त्यस भेटको चिन्तन या कल्पना पनि पापनाशक छ। प्रभुमिलनको इच्छा तीव्र भयो भने सुख भयो।

मेरो भरत दुःखी छ, यस विचारले रामको मुखबाट एक शब्द पनि निस्किरहेको छैन।

दुःख हाम्रा आफ्ना कर्महरूकै फल हो। जतिसुकै दुःख आइपरे पनि प्रभुलाई नभन। सधैं यो सोच म आफ्नो सुखका निमित्त कृष्णलाई कहिल्यै कष्ट दिनेछैन। सदा भगवान्‌को सुविधाको मात्र विचार गर।

भरतका साथ वशिष्ठजी र माताजी पनि हुनुहुन्छ। भरतले सीताजीलाई प्रणाम गरे तब उनले आशीष दिइन्। अब भरतलाई विश्वास भयो उहाँले मेरो पापलाई क्षमा गरिदिनुभएको छ।

रामचन्द्रजीले वशिष्ठजीलाई प्रणाम गर्नुभयो र कैकेयीसँग भेट गर्नुभयो। कैकेयी दुःख र पश्चातापबाट कातर भएकी छन्। रामजीले उनलाई संझाउनु भयो—'मनमा क्लेश नमान्नु। तपाईंको केही दोष छैन। यो केवल विधिको लीला हो।' उहाँले सबै माताहरूसँग भेट गर्नु भयो र धैर्य धारण गर्न भन्नुभयो।

सासूज्यूको दुःखबाट सीताजी व्याकुल हुनुभएको छ र कौशल्याको हृदय पनि सीताजीको तापसी वेश देखेर मनभरि भएको छ।

कौशल्याले दशरथजीको महाप्रयाणको कुरा सुनाउनुभयो। रामचन्द्रजी विलाप गर्नलाग्नुभयो। पिताजीको प्रेमलाई संझिएर रोइदिनुभयो।

रामचन्द्रजीले पिताजीको श्राद्ध गर्नुभयो।

भरतलाई एउटै मात्र चिन्ता छ राम-सीता फर्कने हुन् वा होइनन्। मैले आफ्नो मुखले भनौं पनि कसरी। वशिष्ठजी भरतको परीक्षा लिन चाहनुहुन्छ। त्यसकारण उहाँले भन्नुभयो तिमी उनलाई बिन्ती गर।

भिल्लहरूले अयोध्याका प्रजाहरूको स्वागत गरे। मानिसहरूले उनलाई सौगात दिइरहेछन् तर भिल्लचाहिँ केही स्वीकार गर्दैनन्। रामचन्द्रको आगमनको पहिले यदि उनलाई केही दिएको

भए अवश्य लिँदा हुन् तर रामचन्द्रजीको दर्शन भएको हुनाले उनको मनोवृत्ति बदलिन गएको छ, रघुनाथको दृष्टि चमत्कारी छ। रघुनाथजीको दर्शनले पाप छुटिसकेको छ। चोरी, मारकाट, हिंसा आदि पनि छुटिसकेका छन्।

रामचन्द्रजीको दर्शनले यदि चित्रकूटका अनपढ़ आदिम भिल्लसम्मको जीवन सुध्रिन्छ भनेर हाम्रो जीवन सुध्रन सक्दैन भने योभन्दा ठूलो दुर्भाग्य अरू के हुन सक्छ? रामचन्द्रको दर्शनले स्वभाव सुध्रनु आश्चर्यको कुरा भएन। अरे ! उनको नाम जपले पनि स्वभाव बदलिन सक्छ।

यता प्रजाजन व्याकुल छन्। रामचन्द्रजीको फिर्ती सवारीका विना उनलाई शान्ति मिल्नेछैन। उनीहरू भन्दछन् भरत र शत्रुघ्न तिमीहरू वनमै बस। हामी राम-लक्ष्मण-सीतालाई आफ्ना साथै अयोध्या लाने छौं।

भरतजीले भने—'गुरुजी, मैले आफ्नै मुखले कुरा खुस्काइसकें। यदि रामचन्द्रजी अयोध्या फर्कन तयार हुनुहुन्छ भने म चौध वर्ष के सम्पूर्ण जीवन वनमा बिताउन तयार छु।'

कौशल्याले यो कुरा सुनेर भनिन्—'यो पनि कुनै कुरा हो? मेरा निमित्त राम र भरत दुवै समान छन्। म कसैलाई गुमाउन चाहन्नँ।'

वशिष्ठजीले भन्नुभयो—'मानिस मलाई ब्रह्मनिष्ठ सम्झछन्। आज भरतलाई देखेर मलाई लाग्छ उनी मभन्दा कैयौं गुना श्रेष्ठ छन्। राम, भरतको सुखको उपाय बताऊ।'

राम—'भरतले जे भन्छन् त्यो गर्न तयार छु उनले आफ्ना मनमा रत्तीभर सङ्कोच नराखून्। म उनलाई अप्रसन्न गर्ने छैनँ।'

भरतलाई लाग्यो रामचन्द्रले उनको सबै पाप क्षमा गरिदिनु भएको छ। उहाँले मन कहिल्यै पनि दुखाएको छैन। भरतजी अगाड़ि भन्नुहुन्छ—'म तपाईंको सेवक हुँ। तपाईंको आज्ञा शिरोधार्य छ। तपाईंको राज्याभिषेकको सारा प्रबन्ध मैले गरेरै आएको छु। तपाईंकै राजतिलक होस्। अयोध्या फर्किएर तपाईंले सबैलाई सनाथ तुल्याउनुहोस्। राम-लक्ष्मण-सीता अयोध्या फर्कनुहोस् र म शत्रुघ्नका साथ वनवास गर्नेछु। या लक्ष्मणका साथ शत्रुघ्नलाई पनि अयोध्या पठाइदिनुहोस् र मलाई सेवालाभ दिनुहोस् अथवा हामी तीनै भाइ वनमा रहौं र तपाईं सीताजीका साथ अयोध्या जानुहोस्। रामचन्द्रजीले भन्नुभयो—चौध वर्ष अहिल्यै पूरा हुने हो र?

सोही समयमा राजा जनकजीका दूत पनि वहाँ आए। प्रातःकाल महाराजा जनक पनि आइपुग्नु भयो। उहाँको स्वागत भयो। धेरै कुराकानी भए। आफ्नी छोरीको तपस्विनीको वेश देखेर उनको मनभरि भयो।

कौशल्याले भनिन्—'यस भरतलाई संझाइदिनुहोस्। उ वनमा चौध वर्ष कसरी बस्न सक्ला? उसले राम विरह सहन सक्दैन। भरतलाई सन्तोष होस्, यस्तो केही गरिदिनु पऱ्यो।'

जनकजी—'म ब्रह्मज्ञानी हुँ, तर उहाँको प्रेमका सामुन्ने मेरो बुद्धि पनि कुण्ठित भएको छ। म सीतालाई आफ्ना साथ लिएर जाऊँ ? छोरी, तिमीले दुवै कुलको उद्धार गर्‍यौ, दुवै कुललाई पवित्र गरिदियौ।'

सीताजी—'मेरो पतिको वनवास, मेरो पनि वनवास हो। पिताजी, म तपाईंसँग जान सक्तिनँ। तपाईं धेरै आग्रह नगर्नुहोस्।'

अब अन्तिम मिलन भयो, भरत आज्ञा मागिरहेका छन्।

रामचन्द्रजी—'भरत, मैले आजसम्म तिम्रो मन दुखाएको थिइनँ, तर आजको कुरा भिन्नै हो। हामी दुवैले पिताजीको आज्ञा पालन गर्नु छ। एक आज्ञापालन मैले गर्नु छ र दोस्रो तिमीले।'

भरतजी—'नाथ, म एक्लै कसरी जाउँला ? मलाई केही अवलम्बन दिनुहोस्।'

भरतलाई रामचन्द्रजीले आफ्नो स्मरणको स्वरूपमा आफ्ना चरणपादुका दिनुभयो। भरतले त्यसलाई आफ्नो शिरमा लगाए। बन्धु प्रेमको आदर्श स्थापित गर्नका निमित्त भरत 'सीताराम' 'सीताराम' रट्दै अयोध्या फर्किए। भगवान्‌को चरणपादुकालाई सिंहासनमा स्थापित गरे।

भरतजी गोमुख यावक व्रत गर्छन्। गाईलाई जे खान दिइन्छ, त्यो गोबरका साथ बाहिर निस्केर आएपछि गहुँतमा उमालिन्छ। त्यस्तो खाना दिनमा उनी एक पटक खान्थे। रामचन्द्रजीको तपश्चर्या भन्दा पनि भरतजीको तपश्चर्या अधिक श्रेष्ठ छ। उनको प्रेम यस्तो प्रबल छ जड़ पादुका पनि मानौं चेतन भएका छन्।

राम-वियोगीको जीवन कस्तो हुनुपर्छ। त्यसको आदर्श भरतले जगत्‌का समक्ष प्रस्तुत गरिदिएको छ। हामी पनि राम-वियोगी हौं। भरतसमान जीवन बन्न पाएमा राम भेटिनु हुन्छ। भरतको जीवन हाम्रा निमित्त अनुकरणीय छ।

भरत, रामको पादुकासँग प्रत्येक कुरामा आज्ञा माग्नुहुन्छ।

कुनै अप्ठ्यारो परेका वेलामा कुनै जीवनसँग परामर्श गर्नु असल हो, तर भगवानसँग परामर्श गर्नु भनेको झन् उत्तम हो। जीवको राय भरसक रागद्वेषले भरिएको हुन सक्छ, त्यसकारण भगवान्‌सँग सरसल्लाह गर्नु बढ़िया हुन्छ। तिमीलाई यदि कुनै अप्ठ्यारोले दुःख दिइरहेको छ भने भगवान्‌को शृङ्गार, भोग र आरती गरेर शान्तिसँग हात जोड़ी यस महामन्त्रको जप गर। यो श्लोक महामन्त्र हो। यसको जप गर्दै भगवान्‌को चरणमा निधाऊ। त्यो श्लोक हो—

कार्पण्यदोषोपहतहस्वभावः पृच्छामि त्वां धर्मसंमूढचेताः।

भगवान्‌ले तिमीलाई स्वप्नमा बाटो देखाइदिनु हुनेछ।

रामचन्द्रजी शय्यामा सुत्नुहुन्थ्यो, भरतजी भूईंमा सुत्नुहुन्छ।

रामचन्द्रजीले चित्रकूटलाई छोड्ने निश्चय गर्नुभयो। उहाँ अत्रि ऋषिको आश्रममा आउनुभयो। अनसूयाले सीताजीको बड़ो प्रशंसा गर्नुभयो। त्यहाँबाट उहाँ सुतीक्ष्णको आश्रममा जानुभयो। यो प्रसङ्ग दिव्य छ।

सुतीक्ष्णमुनि अगस्त्यका शिष्य हुनुहुन्थ्यो। विद्याभ्यासको समाप्ति भएपछि उहाँले गुरुजीसँग गुरुदक्षिणा माग्नुहोस् भनी प्रार्थना गर्नुभयो। अगस्त्य ऋषिले भन्नुभयो—'तिम्रो कल्याण होस्। केही पाउँला भन्ने आशाले मैले तिमीलाई विद्यादान दिएको होइन। यदि हुन सक्छ भने मलाई कहिले कुनै दिन रामचन्द्रजीको दर्शन गराऊ।'

सुतीक्ष्णले आज रामचन्द्रजीको दर्शन गर्नुभयो। उहाँले रामजीलाई भन्नुभयो—'हिँड्नुहोस्, म बाटो देखाइदिन्छु।'

रामचन्द्रजीले लक्ष्मणसँग भन्नुभयो—सुतीक्ष्ण बाटो देखाउनका निमित्त होइन, आफ्नो प्रतिज्ञा पूरा गर्न हाम्रो साथ लागेका हुन्। सुतीक्ष्णले सबैलाई अगस्त्य ऋषिको आश्रममा लिएर गए।

ओंकारको भावार्थ राम नाममा मिसिएको छ।

सुतीक्ष्ण ऋषि अगस्त्यमुनिलाई भन्नुहुन्छ—'गुरुजी प्रणाम। मैले दर्शन गराउनलाई रामचन्द्रजीलाई लिएर आएको छु।' ऋषि दगुर्दै आउनुभयो र दर्शन गरेर कृतार्थ हुनुभयो।

त्यहाँबाट सबै अगाड़ि बढ़े। गोदावरी नदीको किनारामा आएपछि त्यहाँ पंचवटीमा बस्न आश्रम बनाइयो।

पंचवटीको अर्थ हो, पाँच प्राण। परमात्मा पाँच प्राणमा विराजमान हुनुहुन्छ। संसार-अरण्यमा घुम्नेलाई वासनारूपी शूर्पणखा भेटिन्छे। राम तर उसतर्फ हेर्दा पनि हेर्नुहुन्न। शूर्पणखा मोहको स्वरूप हो। त्यो रावणकी बहिनी हो। सिँगारिएर रामका नजिक आई र भन्न लागी—'म कुमारी छु। मेरो मन तिमीमै हराउन गएको छ। म तिमीसँग विवाह गर्न चाहन्छु।' शूर्पणखा कामवासना हो।

रामचन्द्रजी—'तिमी जस्तै मेरा भाइ लक्ष्मण अविवाहित छन्। उनीकहाँ जाऊ। म चाहिँ एक-पत्नीव्रतको पालन गर्छु।'

शूर्पणखा रिसले चूर भई। 'तिमी आफ्नी सीताको कारण मेरो उपेक्षा गरिरहेछौ।' उसले विशाल आफ्नो राक्षसी रूप धारण गरी।

वासना पनि शूर्पणखा जस्ती पहिले सुन्दरी लाग्छे तर अगाड़ि गएर उसको वास्तविक रूप सामुन्ने आउँछ र जीव फँस्छ। त्यो आरम्भमा सुकुमारी लाग्छे, तर अगाड़ि गएर भयङ्कर हुन जान्छे। त्यसको अँठ्याइबाट फुत्कन गाह्रो हुन्छ।

लक्ष्मणजीले शूर्पणखाको नाक कान काटेर राखिदिए। ऊ रुँदै कराउँदै रावणकहाँ पुग्छे। रावणले सोद्धछ—'के भयो, कसरी तेरो यस्तो दशा भयो?'

शूर्पणखा—'दशरथका दुइ छोरा पंचवटीमा बसिरहेछन्। उनका साथमा एक सुन्दरी स्त्री पनि छ। म तिमीलाई भनेर उसलाई लिन गएकी थिएँ, तब मेरो यस्तो दशा भयो।'

रावण उसलाई सान्त्वना दिन लाग्यो।

यता रामचन्द्रजीले सीताजीलाई भन्नुभयो—'देवी ! अब लीलाको समय आइपुगेको छ। तिमी अग्निमा गएर निवास गर।'

त्यसैले लेखिएको छ, रावणले जुन सीतालाई लिएर गएको थियो ती सीता होइनन्, सीताको छायाँ मात्र थियो।

रावण मारीचका साथ पंचवटी आयो। मारीचले कपटसँग कनक-मृगको रूप धारण गऱ्यो। सीताजीले त्यो सुवर्णमृग देखेर रामजीलाई भनिन्—'मलाई यसको छालाको वस्त्र लगाउन इच्छा छ। तपाईंले यसको शिकार खेल्नुहोस्।'

रामले भागिरहेको मृगमा बाण चलाए तब त्यो 'हे लक्ष्मण' भन्दै धराशायी भयो।

यता सीताले लक्ष्मणको नाउँको स्वर सुनिन् र तुरुन्तै लक्ष्मणलाई आफ्ना पतिको सहायताका निमित्त दौड़ाइन्। लक्ष्मण आश्रमको बाहिर निस्के तब रावणले भिक्षुकको रूप लिएर सीताजीको हरण गऱ्यो।

रावण सीताजीलाई रथमा चढ़ाएर आकाशमार्गबाट गइरहेको थियो। बाटामा जटायुले सीताजीको आर्त्तनाद सुने र उनले रावणसँग युद्ध गरे। उनले रावणलाई सोधे 'तेरो मृत्यु कहाँ छ?' रावणले छल गर्ने अवसर पाइहाल्यो। उसले झूठमूठ भन्दियो 'मेरो गोड़ाको बूढ़ी औंलामा छ।' जटायु जसै औंलो काटन भनी निहुरेका थिए रावणले उनको पखेटा काटिदियो।

लक्ष्मणलाई आएको देखेर रामले उनलाई सोध्नुभयो—तिमीलाई आफ्नी भाउजुको रक्षा गर्नू भनेर छोड़ेकोमा यहाँ किन आएको?

लक्ष्मणजी—'म वहीं बस्न चाहन्थें तर भाउजुको आग्रहको कारणले आउनुपऱ्यो र उहाँले ठूलो दाज्यूलाई सबै कुरा सुनाउनुभयो।'

रामचन्द्रको सेवा गर्नु बड़ो कठिन छ। लक्ष्मणसँग रामले भन्नुभयो—'आउँदो जन्ममा म तिम्रो सेवा गर्न आउनेछु।' लक्ष्मणको दोस्रो जन्म भयो बलरामको।

दुवै भाइ आश्रममा फर्किएर आए। देख्छन् तब सीताको कहीँ पत्तो छैन।

एकनाथजीले सीता-वियोगको वर्णन बड़ो राम्ररी गर्नुभएको छ। रामजी 'सीते, सीते' भनेर विलाप गर्न थाल्नुभयो। लक्ष्मणले उहाँलाई बारम्बार धैर्य दिएर संझाइरहेका थिए।

राम भन्नुहुन्छ—'यी पृथ्वी मेरी सासू हुन्। जहिले पनि दृष्टि वहाँमा पर्छ तब उनले मलाई आफ्नी पत्नीको रक्षा गर्ने शक्ति थिएन भने विवाह किन गऱ्यौ भनेर मानौं गाली गरेजस्तो लाग्छ।

जब आकाशतर्फ दृष्टि जान्छ तब भगवान् सूर्यनारायणले बड़ो दुःखसाथ मेरो कुलमा यो कस्तो कुपुत्र जन्म्यो जसले आफ्नी पत्नीको पनि रक्षा गर्न सकेन भनी मलाई भनेको जस्तो लाग्छ।'

दुवै भाई सीतालाई खोज्दै घुमिरहेका वेलामा एक ठाउँमा घाइते जटायुलाई देखे। जटायुले भने—'रावणले मेरो यो दशा गर्दिएको छ।' उसैले सीतालाई उठाएर दक्षिण दिशातर्फ लगेको छ।

रामचन्द्रजी—'यदि तिम्रो इच्छा छ भने तिमीलाई म ठीक गरिदिऊँ ?'

जटायुले मानेनन् र भने—'मृत्युका समय मुखबाट जसको नाउँ उच्चारण भएपछि अधमले पनि मुक्ति पाउँछ भने त्यस्तो तपाईं मेरो समक्ष उपस्थित हुनुहुन्छ तब फेरि मलाइ कुनचाहिँ इच्छा पूरा गर्नु छ, जसका निमित्त यो शरीरलाइ कायम राखूँ ?'

जाकर नाम मरत मुख आवा।
अधमउ मुकुत श्रुति गावा॥
सो मम लोचन गोचर आगे।
राखहुँ देह नाथ केहि खांगे॥

जटायुले गिद्धको देह छोड़िदिए र हरिधाम गए। जुन गतिलाई योगी इच्छा गर्छन्, त्यो उत्तम गति रामजीले जटायुलाई दिनुभयो।

त्यसकारण शिवजी पार्वतीसँग भन्नुहुन्छ—'पार्वती, ती मानिसहरू साँच्चिनै अत्यन्त दुर्भागी छन्, जो हरिलाई छोड़ेर सांसारिक विषयहरूसँग प्रेम गर्दछन्।'

सुनहु उमा ते लोग अभागी।
हरि तजि होहिं विषय अनुरागी॥

त्यहाँबाट उहाँ शबरीको कुटीमा आउनुभयो।

यो शबरी अगिल्लो जन्ममा कुनै राजाकी रानी थिई। ऊ धनले चाहिँ सेवा गर्न सक्थी तर तनले होइन। एक पटक ऊ प्रयागराज गई। त्यहाँ कैयौं महात्माहरूसँग मिलन भयो। अगिल्लो जन्ममा कुनै सच्चा सन्तसँग सत्सङ्ग होस् भन्ने इच्छा गर्दै उसले त्रिवेणीमा आत्मविसर्जन गरी। त्यही रानी भिल्ल जातिमा शबरीको रूपमा जन्मी।

शबरीको विवाहको दिन आयो। उसका पिताले भोज दिन तयारी गरे। धेरै खसीहरू पनि ल्याइयो, जसको मासुहरूको पनि उपयोग हुनेवाला थियो। शबरीले सोची—मेरो कारणले मात्रै यो हिंसा हुन गइरहेछ। हुँदैन, हुँदैन यस्तो हुनु हुँदैन। उसले मध्यरात्रिको समयमा घर छोड़ेर हिंड़ी।

शबरी पम्पासरोवरका किनारामा आई र मातङ्ग ऋषिको आश्रम नजिकै बस्न थाली।

यी मातङ्ग ऋषि वर्षमा एउटा हात्तीको शिकार गर्थे र त्यसको मासुको भक्षण गर्दै वर्षभरि बिताउँथे। अरू ऋषिहरूले उनको निन्दा गर्थे। उनी भन्थे—'तपाईं कति जीवको हिंसा गर्नुहुन्छ, तर म वर्षमा एउटै जीवको मात्र हिंसा गर्छु।'

शबरी त्यहाँ आई। सारा दिन कुनै वृक्षमा बसिरहन्थी रातिको वेलामा सन्तहरूको सेवा गर्थी।

सत्कर्महरूको प्रचारबाट पुण्य नष्ट हुन्छ।

कसैलाई देखाउन निमित्त होइन, भगवान्‌लाई प्रसन्न गर्नका निमित्त सेवा गर।

जुन बाटाबाट ऋषिमुनिहरू स्नान गर्न जान्थे, त्यो बाटोको सफाइ रात्रिको समयमा शबरीले गर्थी, कसैलाई पत्तो थिएन। उसलाई मातङ्ग ऋषिले सोधे, 'तिमी कुन जातिकी हौ ?' शबरीले सत्य कुरा भनिदिई 'म किराँत कन्या हुँ।'

मातङ्ग ऋषिले सोचे—'यो हीन जातिकी छ, तर हीन कर्म गर्ने होइन।' उनले भने—'छोरी, तिमी मेरो आश्रममै बस्नु।' शबरी शुद्ध थिई। मानिस निन्दा गर्थे ऋषि भएर पनि भिल्ल कन्यालाई आफ्नो साथमा राखेको छ। ऋषिले उसलाई राम-मन्त्रको दीक्षा दिए।

एक दिन मातङ्ग ऋषि ब्रह्मलोकमा जाने तयारी गर्न लागेको देखेर शबरीलाई बड़ो दुःख लाग्यो। ऊ भन्न थाली—'पिताजी, तपाईं नजानुहोस्। तपाईं जानुभयो भने मेरो के होला ?'

ऋषिले भने—'मैले तिमीलाई राम-मन्त्रको दीक्षा दिएको छु। श्रद्धा राख्नू। एक-न-एक दिन तिम्रो कुटीमा रामचन्द्रको आगमन हुनेछ। कहिले आउने, त्यो चाहिँ म पनि भन्न सक्दिनँ, तर अयोध्यामा उनको प्राकट्य भइसकेको छ।'

जप, तप, दान, तीर्थ सबै कुरा गरेर पनि यदि कुनै सच्चा सन्तको कृपा भएन भने त्यतिञ्जेलसम्म भक्ति सफल हुने छैन।

वैष्णव आशामा बाँच्दछन् मेरा प्रभुले मलाई स्वीकार गर्नुहुनेछ। बड़ो उत्साहसाथ सेवा स्मरण गर्दै रहू। मन नलागेदेखि सत्कर्म गर।

शबरीलाई श्रद्धा थियो राममाथि कहिले हो तर आउने पक्का छ। ऊ वनबाट बयर आदि फल ल्याउने गर्थी। सारा दिन प्रतीक्षा गर्दथी र बेलुका मात्र खान्थी। ऊ सोच्दथी—'म पापिनी हुँ, त्यसैले उहाँ मकहाँ आउनुहुन्न।'

रामको प्रतीक्षा गर्दा-गर्दा अब ऊ बूढ़ी भइसकेकी छ, तैपनि ऊ आशामा बाँचिरहेकी छ। मेरा गुरुजीले भन्नुभएको छ नि, रामजीका निमित्त ल्याएको फल ऊ ऋषिकुमारहरूलाई बाँड़िदिन्थी। घटघटमा राम हुनुहुन्छ। तपश्चर्या गर्नाले सिद्धि अवश्य पाइन्छ।

शबरी सारा दिन राम-मन्त्र जपिरहन्थी। उसको जीव संयमी र सेवामय थियो। उसको निष्ठा दिव्य थियो। यस्ता घरमा राम नगए कस्ताका घरमा जानुहोला ?

राम-लक्ष्मण पंपा सरोवर आए तब ऋषिमुनिहरूले उनको स्वागत गरे। उनीहरूले आफूकहाँ लैजाने प्रयत्न गरे। तर रामजीले भन्नुभयो—'पहिले म शबरीको कुटीमा जान्छु।'

सबै ठाउँहरूमा सदा जो मलाई खोज्छ, उसलाई म पनि खोज्दछु र उसकहाँ जान्छु।

जुन समयमा राम-लक्ष्मण शबरीको कुटीमा पुगेका थिए, त्यस समयमा ऊ राम-मन्त्रको जप गरिरहेकी थिई। शबरीले दुवैलाई स्वागत गरी र बस्नलाई राम्रो आसन दिई। 'म त्यसो तर जातिहीन छु, तर पनि तपाईंको शरणमा आएकी छु।'

राम—'म अरू कुनै प्रकारको पनि सम्बन्ध चाहन्नँ। सबभन्दा ठूलो हो प्रेम सगाइ।'

शबरी बयरको दुना लिएर आई र चाखी चाखीकन सबैलाई दिन थाली कहीं अमिलो नपरोस् भनेर। ऊ भगवानको दर्शन पाएपछि यति भावावेशमा थिई उसलाई यो पनि विचार भएन ऊ भगवान्‌लाई जूठो बयर ख्वाइरहेकी छ। रामजीले बयरहरूको प्रशंसा गर्नुभयो।

मिठास तर प्रेममा मात्र छ।

प्रेम कलङ्कित नहोस्। ईश्वरलाई मात्र उनका निमित्त प्रेम गर।

महापुरुष वर्णन गर्छन् शबरीको बयर खाएर रामजीले थुकेको बयरको दाना फ्याँकिदिएकीमा तीमध्येबाट द्रोणाचल पर्वतमा सञ्जीवनी वनस्पति उत्पन्न भयो। यही सञ्जीवनीबाट लक्ष्मणजीको जीवनदान पाइएको थियो।

अतिशय भजन गर, सच्चा साधु सन्तहरूमा विश्वास राख, शबरीको चरित्र मानव मात्रका निमित्त आश्वासन रूप छ। भगवान् अवश्य भेटिनुहुन्छ।

श्रीरामले शबरीलाई सोध्नुभयो—'तिम्रो के इच्छा छ?' शबरीले भनिन्—'यस पंपासरोवरको बिग्रिएको जललाई तपाईंले शुद्ध गरिदिनोस्।' कुनै समयमा एउटा ऋषिले शबरीलाई लात्तीले हिर्काएको थियो र यस सरोवरको जल बिग्रिएको थियो।

रामजी मानिसहरूलाई भन्नुहुन्छ यस जललाई शुद्ध गर्ने शक्ति ममा छैन। यदि शबरीको चरण-तीर्थका जलको अञ्जुली यस सरोवरमा दियौ भने केही काम बन्न सक्छ।

'शबरीलाई त्यस सरोवरमा स्नान गराइयो र फलतः सरोवरको जल शुद्ध भयो।' रामले शबरीको उद्धार गरिदिनुभयो। रामको दर्शन गर्दै शबरी योगाग्निमा विलीन भइन्।

रघुनाथजी अब ऋष्यमूक पर्वतको नजीक आए। त्यहाँ सुग्रीव बस्दथे। त्यहाँ पहिले हनुमानजीसँग भेटभयो। हनुमानजीले प्रभुको परिचय लिए र सुग्रीवसँग मैत्री गराइदिए।

जबसम्म ईश्वरको जीवसँग मैत्री हुन पाउँदैन तबसम्म जीवन सफल हुन पाउँदैन र यस्तो मैत्री हनुमानजी अर्थात् ब्रह्मचर्यको विना हुन पाउँदैन।

रामनाम अमृतभन्दा पनि श्रेष्ठ छ। रामनाम भवरोगको औषधि हो। तर संयमका विना त्यो पनि प्रभावपूर्ण हुन सक्दैन।

## रामनाम तो सब कहे, दशरथ कहे न कोइ।

जबसम्म हनुमानजी सिफारिश गर्नुहुन्न तबसम्म रामचन्द्र आफ्नो बनाउनुहुन्न।

परमात्मा जीवमात्रको सच्चा मित्र हो। ईश्वरका साथ मैत्री गर्नाले जीवन सफल हुन्छ। सांसारिक मित्रले यस्तै जगत्‌मा सुख दिन सक्दछ तर परलोक र अन्तकालमा सुख दिन सक्दैन।

जीवले यदि ईश्वरससँग मैत्री गऱ्यो भने उहाँले उसलाई आफ्नो तुल्याउनु हुन्छ। उहाँले उसलाई पनि ईश्वर बनाइदिनुहुन्छ। उहाँ अति उदार हुनुहुन्छ। उहाँ जब दिन थाल्नुहुन्छ तब धेरै उदार भएर दिनुहुन्छ। जीवलाई जब केही दिने प्रसङ्ग आउँछ तब सोची-विचारीकन, आफूलाई धेर-थोर बाँकी राखेर दिइन्छ। विश्वलाई सृष्टि गर्नेले दिँदाखेरि कहिले पनि सोच्दैन आफ्ना निमित्त केही बाँकी राख्नुपर्ला।

मैत्री परमात्मासँग मात्र गर। परमात्मासँग मैत्री त्यसले मात्र गर्नसक्छ जसले कामलाई आफ्नो शत्रु बनाउँछ। कृष्ण र काम, राम र रावण एक साथ बस्न सक्दैनन्।

रामचन्द्रजीले सुग्रीवलाई आफ्नो मित्र बनाउनु भयो किनभने सुग्रीवलाई हनुमानजीले आफ्नो तुल्याउनुभएको छ।

हनुमानजी ब्रह्मचर्यको स्वरूप हुनुहुन्छ। ब्रह्मचर्यको मैत्रीले जितेन्द्रिय बनाउने छ र अनि परमात्माका साथ पनि मैत्री हुनेछ। संयम र धर्म-मर्यादाको पालन गऱ्यौं भने राम-राज्यको समयमा जस्तै कसैलाई डाक्टर-वकीलको आवश्यकता पर्ने छैन। हनुमानजीलाई जसले मित्र बनाउँदैन, उसलाई रामले आफ्नो पनि मित्र बनाउनु हुन्न। परमात्मासँग प्रेम नगरीकन जीवन सुन्दर हुन पाउँदैन। प्रेम नगरीकन मानिस बाँच्न सक्दैन। कोही धनसँग, कोही स्त्रीसँग, कोही बालकहरूसँग प्रेम गर्दछ तर प्रेम गर्ने योग्य चाहिँ एउटा परमात्मा मात्र हो। परमात्माका सिवाय अन्य कसैसँग गरिएको प्रेमले जीवलाई अन्तमा रुवाउँछ।

जगत् अपूर्ण छ र जीव पनि अपूर्ण छ। परमात्मासँग मैत्री भएपछि मात्र जीवन परिपूर्ण हुन्छ। परमात्मासँग प्रेम गर्नेलाई उहाँ पूर्ण बनाउनुहुन्छ। ईश्वर उसैलाई मात्र भेटिनुहुन्छ जो उहाँसँग पूर्णतः प्रेम गर्छ। त्यस्ता व्यक्तिलाई मात्र प्रभुले आफ्नो मान्नु हुन्छ। ईश्वरका साथ प्रेम गर्नु छ भने अरूहरूको प्रेम छोड्नुपर्छ। लौकिक प्रेमलाई विस्तार-विस्तार घटाउँदै जाऊ र प्रभुका साथ प्रेम बढ़ाउँदै लैजाऊ।

हनुमानजीले सोधेपछि रामजीले आफ्नो परिचय दिनुभयो। हनुमानजीले प्रणाम गरेर स्तुति गरी भन्नुभयो—'यस पर्वतमा वानरराज सुग्रीव बस्नुहुन्छ, उहाँका साथ मैत्री गर्नुहोस्। उहाँ तपाईंको दास हनुहुन्छ। त्यसपछि सबै सुग्रीवकहाँ आए।'

रामजीले सुग्रीवलाई सोध्नुभयो—'तिमी यति दुःखी किन देखिन्छौ ?'

उद्धवको ज्ञानगर्व अब बिस्तार-बिस्तार मेटिँदैछ। उद्धव भए सूधा। उद्धवको ज्ञान भक्तिरहित थियो। त्यसकारण श्रीकृष्णले उनलाई व्रज पठाइदिनुभो। उद्धवजी नन्द-यशोदाको यस्तो प्रेममूर्तिलाई देखेर आनन्दित भए।

दधिमन्थनपछि नन्दजीको घरतर्फ हेरेर प्रणाम गर्ने नियम गोपिनीहरूको थियो। आज नन्दका आँगनमा उनीहरू प्रणाम गर्न आए तब त्यहाँ रथलाई देखेर उनलाई अक्रूरको घटना संझना भयो। 'हाम्रो कृष्णलाई लैजाने अक्रूर लाग्दछ, फेरि आएछ। किन आयो त्यो ?'

विरह-व्याकुलता ललिता कृष्णाको नाउँ रट्दै गइरहेकी थिइन् तब विशाखाले भनिन्— 'हेर, कृष्ण स्वार्थी र कप्टी थिए, राजा बन्नासाथ हामी सबैलाई बिर्सिदिए। अब मन लगाएर घरको कामकाज गर्नु छ।'

ललिता—'म जब-जब कृष्णलाई बिर्सन खोज्छु उत्ति-उति संझना हुन्छ। हिजो म इनारमा पानी भर्न गएकी थिएँ तब बाँसुरीको स्वर सुनियो। मैले यताउति हेरें, कृष्ण वृक्षको हाँगामा बसी बाँसुरी बजाइरहेछन्। म कृष्णको दर्शनका निमित्त यति बहुलाई जस्ती भएँ गाग्रोलाई डोरीले बाँध्नुको सट्टा आफ्नो बालकलाई बाँधेर इनारमा खसालिदिएँ। कृष्णले यो देखे तब उनी हाम्फालेर तल आए, बालकलाई बाहिर झिकिदिएर मलाई गाली गर्न थाले। उनले मलाई घरसम्म पुऱ्याइदिए। म उनलाई कसरी बिर्सन सक्छु।'

एउटी अर्की गोपिनीले भन्न थालिन्—मानिस जे भनून् मलाई तर कृष्ण यहीं देखिन्छन्। उनी मथुरा गएकै छैनन्। हिजो बेलुका पानी भर्न जमुनाजी जानुपऱ्यो। अँध्यारो हुन लागेको थियो। म डराइरहेकी थिएँ गाग्रो उनले मेरो टाउकामा राखिदिए र कुरा गर्दै घरसम्म पुऱ्याइगए। उनी भन्दै थिए उनी यहाँ व्रजमै बस्छन्। मलाई उनका कुराहरू बराबर संझना हुन्छन्। म उनको स्वरूप बिर्सन सक्दिनँ। उनका साथ कुरा नगरीकन मलाई आनन्दै लाग्दैन।

ठूला-ठूला साधु र योगीजन समाधि लगाएर संसारलाई बिर्सने भगीरथ प्रयत्न गर्छन् र पनि उनलाई सफलता पाइन्न। उनको तृप्ति प्रभुमय हुन पाउँदैन। तर यता यी गोपिनीहरू प्रयत्न गरेर पनि संसारलाई संझना गर्न सक्दैनन्। एकपल पनि कृष्णलाई बिर्सन सक्दैनन्। प्रभुलाई बिर्सन खोज्दा पनि सफल हुँदैनन्।

सबै वस्तुको अभाव अनुभव गर्न सकिन्छ तर आत्माको होइन। श्रीकृष्ण गोपिनीहरूका आत्मा हुन्, त्यसकारण उनीहरूले कसरी बिर्सन सक्छन् ?

गोपिनीहरू यसप्रकार कृष्णका विषयमा कुरा गरिरहेका थिए उद्धव स्नानादिबाट निवृत्त भएर, भगवान्‌ले दिनुभएको पीताम्बर र वैजयन्ती माला लाएर आए। गोपिनीहरूलाई उनले प्रणाम गरेर आफ्नो परिचय दिँदै भने—'म तपाईंहरूका मथुरावासी श्रीकृष्णको अन्तरङ्ग सखा हुँ र तिमीहरूलाई उहाँको सन्देश लिएर आएको छु।'

सुग्रीव—'मेरो भाइ बालीले मेरो धन सम्पत्ति र पत्नी खोसेर मलाई घरबाहिर निकालिदिएको छ।'

जो मित्रको दुःखले दुःखी हुन्छ, त्यो मात्र सच्चा मित्र हो।

सुग्रीव र बालीका बीच युद्ध भयो। राम सुग्रीवको पक्षमा हुनुहुन्थ्यो। उहाँले एक वृक्षको आड़ लिएर बालीलाई तीर छोड्नुभयो तब बालीले भन्यो—

अवगुन कवन नाथ मोहि मारा।

तपाईंले धर्मको रक्षाका निमित्त अवतार धारण गर्नुभएको छ। मैले केही अपराध गरेको छैन र पनि तपाईंले मेरो वध किन गर्न चाहनुहुन्छ ? धर्मको रक्षाका निमित्त अवतार लिनुभएर पनि अधर्माचरण गर्नुभएको छ।

रामचन्द्रजी—'बाली, आफ्नो दोष तिमी देख्दैनौ मलाई दोष दिइरहेछौ। भाउजू, वैनी, बुहारी र आफ्नी छोरी एकसमान हुन्। तैपनि तिमीले आफ्नो भाइकी दुलहीमा कुदृष्टि लगायौ। तिमी पापी हौ। त्यसकारण तिम्रो उद्धार गर्नका निमित्त तिम्रो वध गरिरहेछु।'

स्वदोषको दर्शन विना ईश्वरको दर्शन पाईंदैन। परदोषदर्शन परमात्माको दर्शनमा बाधारूप हुन्छ।

बालीले भन्नलाग्यो—'प्रभु, यदि म पापी छु भने मलाई भन्नुहोस् कुनचाँहिँ ग्रन्थमा यस्तो लेखेको छ पापीलाई पनि तपाईंको दर्शनको लाभ हुन सक्छ। उल्टै भनिएको छ—'

जनम जनम मुनि जतन कराहीं।
अंत राम कहि आवत नाहीं॥

मुनिगण जन्म-जन्मान्तरमा कति प्रकारको साधना गर्दै रहन्छन् र पनि अन्तकालमा उनको मुखबाट राम-नाम उच्चारण हुन पाउँदैन।

म पुण्यशाली छु र तपाईंको दर्शन यस समयमा गरिरहेछु, तपाईंको दर्शनले अब म पापी पनि रहिनँ। तपाईंको दर्शनले पापहरूको नाश हुन्छ। तपाईंको दर्शन देवहरूलाई पनि दुर्लभ छ तापनि म तपाईंको दर्शन गरिरहेछु।

भगवान् रामले भन्नुभयो—'मेरो दर्शन तिमीलाई भयो, त्यो तिम्रो प्रतापले भएको होइन। तिमी सुग्रीवका दाइ भएकाले म तिम्रो उद्धार गरिरहेछु। तिमीले सुग्रीवको कारणले मात्र मेरो दर्शन पाइरहेछौ।'

भगवान्को कुरा सुनेर बालीले सुग्रीवलाई प्रणाम गरेर भन्यो—तिम्रो कारणले मलाई भगवान्को दर्शन गर्ने सौभाग्य प्राप्त भयो।

सुग्रीव बालीसँग भन्न लागे—'होइन, होइन तिम्रो कारणबाट मलाई भगवान्‌को दर्शन मिल्यो, यदि तिमीले मलाई घरबाट ननिकालिदिएको भए प्रभुदर्शन मैले पनि कसरी पाउन सक्दो हुँ ?'

बालीले देह छोड़िरहेका वेलामा सुग्रीवले भगवान्‌सँग प्रार्थना गर्दै भने—'मेरो दाइको पापलाई क्षमा गरिदिनुहोस्।'

वैर र वासनाले मृत्युलाई बिगार्छ। जसले वैर र वासनालाई आफ्नै मनमा राखेर मर्दछ त्यसले सद्गति पाउँदैन। आफ्नो कर्तव्य कसैसँग वैर नराख्नु हो।

राम-राम जपै बालीले प्राण त्याग गऱ्यो। सुग्रीवलाई किष्किन्धाको राज्य दिइयो।

रामको अनाशक्ति पनि कस्तो छ।

रावणको हार भयो र लङ्काको राज्य रामले पाए तापनि उहाँले भन्नुभयो—'मलाई धन या राज्यको आसक्ति छैन। लङ्काको राज्य विभीषणलाई दिएँ।' कंसको मृत्यु भएपछि मथुराको राज्य कृष्णको हातमा आयो, उहाँले उग्रसेनलाई दिनुभयो।

राम र कृष्ण जस्तो बोल्दछन् त्यस्तै आचरण गर्छन्। श्रीकृष्णले अर्जुनलाई युद्ध भूमिमा छ शास्त्रहरूको सार एकै घण्टामा सुनाउनुभएको थियो। भगवान्‌को ज्ञान पनि कस्तो छ ? अर्जुनले भनेका थिए, 'तपाईंले जे भन्नुहुन्छ सोही गर्नेछु।'

ज्ञानको शोभा व्याख्यान होइन, क्रियात्मक भक्तियोग हो।

रामका समान जगतहितार्थी कोही छैन। यस्तो कुरा भगवान् शङ्करले पार्वतीसँग भन्नुभएको थियो। देवता, मनुष्य र मुनि सबैको यो रीति छ आफ्नो स्वार्थका निमित्त मात्र सबैसँग प्रीति गर्छन्।

सुर नर मुनि सबकी यह रीति।
स्वारथ लागि करहिं सब प्रीति॥

भगवान् राम प्रवर्षण पर्वतमा बस्नुभयो। हनुमानजी आफ्ना वानरसेनाका साथ आए। रामजीले आफ्नो औंठी हनुमानजीलाई दिँदै भन्नुभयो—'यो सीताजीलाई दिनू र मेरो विरह तथा बलको साराकुरा सुनाएर तुरुन्त फर्कनू।' हनुमानजीले आफ्नो वानरसेनाका साथ दक्षिणका तर्फ प्रस्थान गरे। उनी जाम्ववन्तका साथ आए। त्यहाँ सम्पातिले उनलाई समाचार दिए—सीताजीलाई अशोक वनमा राखिएको छ। समुद्र तर्न कठिन थियो। राम-नाम र संयमको बलविना समुद्रपारि जान सकिन्न।

हनुमानजीले आवेशपूर्वक भने—'यदि तपाईंले भन्नुहुन्छ भने सारा लङ्कालाई समुद्रमा डुबाइदिन्छु।'

जाम्ववन्त—'धैर्य गर। यदि लङ्कालाई डुबाइदियौ भने सीताजी पनि डुब्नेछिन्।'

अनि हनुमानजी आकाशमार्गबाट उड़ेर समुद्रपार गर्नलागे। बाटामा सुरसाले रोक्ने कोशिश गरेकी थिई। हनुमानजीले उसको नाश गरे। हनुमानजी लङ्का आइपुगे। बेलुकीको समय थियो। लङ्का-दर्शन गर्न भनी निस्के। त्यहाँको वैभव अलौकिक छ।

मध्य रात्रिका समय लङ्कामा प्रवेश गर्न लागेका थिए। लङ्किनीले रोक्नथालेकी थिई तर हनुमानजीले उसलाई मारिदिए। मर्ने वेलामा लङ्किनीले भनेकी थिई—'मलाई ज्योतिषीले भनेका छन् तँलाई कसैले मार्‍यो भने संझिनु रावणको मृत्यु पनि हुन लागिरहेछ। हनुमानजीलाई लङ्किनीले यो पनि भनेकी थिई लङ्कामा घुम्ने समयमा रामजीलाई आफ्ना हृदयमा सँधै राख्नु। शायद राक्षसीहरूको बिहारलाई देखेर मनमा विकार नआओस्।'

## हृदय राखि कोशलपुर राजा।

मानव समाजमा बसेर मानव बन्नु सजिलो छैन। एकान्तमा बसेर ब्रह्मचिन्तन गर्नु सजिलो छ। जनसमाजका मध्यमा विलासी मानिसहरूका साथ बसेर निर्विकार भएर बस्नु बड़ो कठिन छ। शरीरबाट पाप नभए पनि, मनबाट चाहिँ भइहाल्छ।

हनुमानजीलाई कसले उपदेश दिनसक्छ। उनी सकल विद्याका आचार्य हुन्। तैपनि लङ्किनीले भनेको कुरालाई बेवास्ता गर्नु भएन। हनुमानजीलाई लाग्यो, 'मैले आँखाद्वारा यो दृश्य देखें। होइन, होइन, आँखाले चाहे देख्यो होला तर मनले चिन्तन गरेकै छैन।' हनुमानजी तर बाल-ब्रह्मचारी हुनुहुन्छ।

त्यहाँबाट उनी इन्दजीतको दरबारमा आए। त्यहाँ सुन्दरी सुलोचनालाई देखेर उनले सोचे, 'यिनी शायद सीताजी होलिन्। होइन, यिनी सीताजी होइन।'

एकनाथजी महाराजले सुन्दरकाण्डमा बड़ो राम्रो वर्णन गरेका छन्।

हनुमानजी साक्षात् शिवजीका अवतार थिए। पार्वतीजीले अवतार ग्रहण गर्नुहोस् भनी आग्रह गर्नुभयो तब शिवजीले भन्नुभयो—'होइन, मलाई ब्रह्मचारी बस्नु छ।'

पार्वतीजीले भन्नुभयो—'म तपाईं नभैकन बाँच्न सक्दिनँ।' त्यसकारण शिवजीले हनुमानको रूप लिनु भयो र पार्वती बनिन् उनको पुच्छर। यो योगमाया सबैको घरमा जान्छे।

हनुमानजीको पुच्छर बढ्दैगयो। रावणको धेरै फजिहत भयो।

हनुमानजीले सारा रात सूक्ष्म दृष्टिबाट भ्रमण गरे। तर सीताजी कहीं पनि देखिनु भएन। प्रातःकालमा विभीषणको दरबारमा प्रवेश गरे। त्यहाँ उनले विभीषणलाई व्यूँझने बित्तिकै रामको स्मरण र उच्चारण गरेको देखे। हनुमानजी सोच्न लागे—'यी राक्षसहरूको बस्तीमा यो को वैष्णव रहेछ?' हनुमानजी ब्राह्मणको रूप लिएर विभीषणको नजीक गए। विभीषणले उनलाई सोधे—'तपाईं को हुनुहुन्छ? राम होइन? बिहानै तपाईंको दर्शन पाएँ, अब मेरो सारा दिन राम्ररी बित्नेछ र कल्याण हुनेछ।' हनुमानजीले सबै कुरा भने र सीताजीको ठेगाना सोधे।

विभीषण—'तपाईंको दर्शन पाएपछि मलाई विश्वास भयो रामजीको दर्शन मलाई अवश्य हुनेछ। म अधम हुँ तर तपाईंको कारण रामले मलाई अवश्य आफ्नो तुल्याउनुहुनेछ।'

राती सुत्नुभन्दा अघिबाट र बिहान उठ्नेबित्तिकै प्रभुस्मरण र शुभ विचार गर।

हनुमानजी अशोक वन आए। त्यहाँ सीताजी समाधि अवस्थामा बसेर राम-राम जपिरहनु भएको थियो। उहाँको शरीर दुर्बल भइसकेको थियो। हनुमानजीले उहाँलाई मनैमन प्रणाम गरेर रूखको हाँगामा बसेर रामकथा सुनाउन थाले। 'तपाईंलाई खोज्न कति वानर पठाइएका छन्। तिनमध्ये एउटा म पनि हुँ। म रामचन्द्रजीको दूत हुँ। आज मेरो जीवन सफल भयो। साक्षात् आद्याशक्ति सीताजीलाई प्रणाम गर्छु।'

सीताजी—'भाइ, को हौ तिमी ? प्रत्यक्ष किन आउँदैनौ तिमी ? मेरो अगाड़ि आऊ।'

हनुमानजीले अगाड़ि आएर माताजीलाई प्रणाम गरे। 'माताजी म हुँ रामचन्द्रजीको दूत। मलाई आज बड़ो आनन्द आइरहेछ।' उनले रामचन्द्रजीको समाचार सबै सुनाए। 'उहाँले तपाईंको वेवास्ता गर्नुभएको छैन उहाँ छिटै यहाँ आइरहनुभएको छ।'

आमा ! मलाई भोक लागिरहेछ, यहाँ फल धेरै छन्, तर राक्षसहरूले पहरा दिइरहेछन्।

सीताजीले भनिन्—'तल झरेको फल मात्र खानू, टिपेर नखानू।'

हनुमानजीले विचार गरे—'आमाले फल टिप्न रोकेको छ, तर वृक्षहरूलाई हल्लाएर फल खसाल्नु हुन्छ होला।' उनले वृक्षहरूलाई हल्लाएर फलको आहार गरे।

सन्त तर भोजन गर्दाखेरि पनि भजन गरिराख्छन्। अन्नको निन्दा गर्नु पाप हो।

हनुमानजीले दिव्य बानरको स्वरूप धारण गरेर पुच्छरलाई आफ्नो काम गर्नू भनी अन्हाए। पुच्छरले धेरैजसोलाई मार्‍यो, कति राक्षसीहरूको संहार गर्‍यो। यत्तिकैमा इन्द्रजीतले त्यहाँ आएर ब्रह्मास्त्र छोड़े। हनुमानजीले ब्रह्मास्त्रको सम्मान गरे। इन्द्रजीतले हनुमानजीलाई बाँधेर राजसभामा ल्याए। रावणले हनुमानलाई सोधे—'ए बाँदर, कहाँबाट आएको होस् तँ ? किन आएको ?'

हनुमानजी—'ए दशानन, म तिमीलाई उपदेश दिन भनेर आएको हुँ। शिवजीलाई प्रसन्न गर्न भनी तिमी तपस्वी भएका थियौ। तर तिमीले अर्काकी स्त्री सीताजीलाई बन्दी बनायौ। रामचन्द्रजीको शरणमा आऊ। उहाँले तिम्रो पाप सबै क्षमा गरिदिनुहुनेछ।'

तर रावण के संझन्थ्यो ? त्यो महा अहङ्कारी थियो। उसले आफ्ना सेवकहरूलाई भन्यो—'यस बाँदरको पुच्छरमा शक्ति छ। सल्काइदेओ यस पुच्छरलाई।' सेवक हनुमानजीको पुच्छरलाई बेर्न थाले। हनुमानजीले पुच्छर बढ़ाउँदै गए। लङ्काको सारा बजारको लुगा समाप्त भयो। कपड़ाहरूलाई घिउतेलमा भिजाए र फेरि त्यसलाई सल्काइदिए।

हनुमानजीले भने—'यो तर पुच्छर-यज्ञ भइरहेछ। रावण, अब मुखले अलिकति हावा लगाऊ।' रावण फुक्न भनी गएको उसको दाह्री सल्कियो।

हनुमानले कैयौं घरमा उफ्री-उफ्री गएर आगो लगाइदिए।

राक्षसीहरू दगुर्दै सीताका नजिक आएर भन्न लागे—'तपाईंकहाँ जो पुरुष आएको थियो त्यसको पुच्छरले सारा लङ्का सल्काइरहेछ।'

सीताजी प्रार्थना गर्न थालिन्—'हे अग्निदेव! यदि मैले आफ्ना पतिका सिवाय अन्य कुनै पुरुषको पनि चिन्तन गरेकी भए र पातिव्रतको पूर्णतः पालन गरेकी छु भने तपाईं शान्त हुनुहोस्।' अग्निदेव चन्दनभन्दा शीतल भए।

लङ्का सल्किरहेको थियो। हनुमानजीले समुद्रकिनारबाट आइहेर्दा उनलाई यो चाहिँ राम्रो भएन भन्ने लाग्यो। अशोक वन पनि यदि सल्कियो भने? समुद्रमा स्नान गरेर उनी अशोक वनमा आए। वहाँ हेर्छन् तर एउटा वृक्ष पनि सल्केको थिएन। सीताजीसँग भेट गरे। सीताजीले आशीष दिइन्, 'अष्टसिद्धिहरू तिम्रो सेवा गर्नेछन् र सारा जगत्मा तिम्रो जय-जयकार हुनेछ।' तर यी आशीषहरूले हनुमानजीलाई सन्तोष भएन। उनले रामसेवाको आशीष मागे। हनुमानजी अमर छन्, काल उनका सेवक छन्।

हनुमानजी त्यहाँबाट जान थाले तब ब्रह्माजीले उनको पराक्रमका सारा कुराहरू पत्रमा लेखिदिए। हनुमानजी यति नम्र हुनुहुन्छ त्यस कार्यको वर्णन आफ्ना मुखबाट नगर्ने भनेर यो पत्र लेखिदिए।

हनुमानजी रामजीकहाँ आए। लक्ष्मणले पत्र पढेर रामजीलाई सुनाए। हनुमानजीले भने—'प्रभु, यो सबै तर यहाँकै प्रताप हो। कृपा गर्नुहोस् म अभिमानी नबनौं।' रामजीले सोच्नुभयो—'हनुमानजीलाई—म दिऊँ भने के दिऊँ?' हनुमानजीलाई अँगालो मारिदिनुभयो।

रामचन्द्रजीले त्यहाँबाट विजयादशमीका दिन प्रस्थान गर्नुभयो र समुद्रका किनारमा आइपुग्नुभो। उहाँको नियम थियो प्रतिदिन शिवजीको पूजा गर्ने। त्यहाँ कुनै शिवलिङ्ग पाइएन र हनुमानजीलाई काशीबाट शिवलिङ्ग ल्याउने आज्ञा दिनुभयो। हनुमानजीलाई फर्कंदा अबेर हुन गएकाले रामजीले बालुवाको शिवलिङ्ग बनाउनुभयो र पूजा गर्नुभो। त्यही शिवलिङ्ग 'रामेश्वर' हो। 'जसले रामेश्वरको दर्शन गर्ला, त्यो देह त्याग गरेपछि मेरो धाममा आउनेछ।'

जे रामेश्वर दरसनु करिहहिं।
ते तनु ताजि मम लोक सिधरिहहिं॥

यता लङ्कामा रावणले नगरवासीहरूको सभा बोलायो। विभीषणले भने—'रामजीको शरणमा गएर सीताजीलाई सकुशल फर्काई देऊ।'

रावणले रीसमा विभीषणलाई लत्याई दियो। धन्य छन् विभीषण, लात्ती खाएर ठूलो दाज्यूलाई वन्दना गरे। 'तपाईंलाई जे ठीक लाग्छ, सोही गर्नुहोस्। म श्रीरामको शरणमा गइरहेछु।'

विभीषणले लङ्का त्याग गर्नासाथै सबै राक्षस आयुष्यहीन भए।

साधु पुरुषको अपमान सर्वनाशको कारण हुन सक्छ।

विभीषण वानर सेनाका पास आए। उनी सोचिराखेका थिए 'मलाई यहाँ स्वीकार गर्ने हुन् वा होइनन्। रावणका भाइ हुनाको कारणले मेरो तिरस्कार त हुने होइन। हुँदैन, हुँदैन, प्रभु त अन्तर्यामी हुनुहुन्छ। मेरो मनोभाव शुद्ध छ, त्यसकारण उहाँले मलाई आफन्त गराउनु हुनेछ।'

सुग्रीवले भगवान्लाई समाचार पठाइदिए रावणका भाइ विभीषण आएका छन्। मलाई लाग्छ यी राक्षसहरूका माया हुन् तिनी हाम्रो भेद जान्न चाहन्छन्।

राम—'तर विभीषणले के भन्छन् त्यो भन।'

सुग्रीव—'राघवं शरणं गतः।'

हनुमानजी वकालत गर्न थाले—'उनको हृदयमा छलकपट छैन। उसलाई हामीले आफन्त बनाउनुपर्छ।'

राम—'सुग्रीव, विभीषणको स्वागत गर र यहाँ ल्याऊ। जुन वेला जीव मेरा सामुन्ने आउँछ, उसका करौड़ौं जन्महरूको पाप नष्ट हुन्छ।'

जो मनुष्य मनबाट निर्मल छ, उसले मलाई प्राप्त गर्छ। मलाई छल कपट र छिद्रान्वेषण मन पर्दैन।

निर्मल मन जन सो मोहि पावा।
मोहि कपट छल छिद्र न आवा॥

सुग्रीवले विभीषणलाई लिएर आए र विभीषणले भने—'नाथ, म तपाईंको शरणमा आएको छु। मेरा दाजुले लात्ती हानी तिरस्कृत भएको छु।'

रामजीले आफ्नो आसनबाट उभिएर विभीषणको सत्कार गर्दै भन्नुभयो—'तिमी मेरा भाइ लक्ष्मणका समान मलाई प्रिय लाग्छौ। लङ्काको राज्य तिमीलाई दिइनेछ।'

विभीषणले सोचेका थिए 'रावणको मृत्युपछि प्रभुले मलाई लङ्कापति बनाउनुहुनेछ।' आज उनको इच्छा पूर्ण भयो।

सुग्रीवले रामजीलाई भने—'तपाईं बड़ो चाँडो गर्नुहुन्छ। विभीषणलाई लङ्काको राज्य दिने वचन दिनुभयो तर रावण शरणमा आएर सीताजीलाई सुम्पिदियो भने तपाईंले उसलाई के दिनुहुन्छ।'

रघुनाथजी—'म जब पनि केही बोल्छु सोची-विचारीकन मात्र बोल्छु। यदि रावण शरणमा आयो भने म उसलाई अयोध्याको राज्य दिनेछु।'

विभीषण शरण आयो, करायो लङ्काधीश।
यह सुनी रावण शरण आए तो करहुँ कौशल्याधीश॥

रावण यदि शरणमा आयो भने उसलाई अयोध्याको राज्य दिएर हामी सबै भाइ वनवास गर्नेछौं।

समुद्रमा पत्थरको पुल बाँधियो। पत्थरमा राम नाम लेख्नाले पत्थर उत्रिन्छ।

रामनामले यदि जड़ पत्थर उत्रिन सक्छ भने मनुष्य किन उत्रन सक्दैन। विश्वासपूर्वक, श्रद्धापूर्वक रामनामको जप गऱ्यौ भने भवसागर पार तर्न सक्ने छौ, यस कलियुगमा यसको सिवाय अन्य कोही उपाय छैन। पत्थरसम्म रामनामबाट उत्रिन सक्छ भने मानिसको के कुरा?

रामचन्द्रजीले लङ्कामा प्रवेश गर्नुभयो। अङ्गदलाई सन्धिका निमित्त पठाइयो। अनेक राक्षसहरू मरे। लक्ष्मणले कपटद्वारा इन्द्रजीतको शिर उड़ाइदिए। सुलोचनाले सती हुन खोजिन्। उनले रावणसँग आफ्ना पति इन्द्रजीतको मस्तक मागिन्। रावणले भन्यो—'त्यो मस्तक रामसँग छ। जाऊ उसैकहाँ।'

तब सुलोचनाले भनिन्—'मलाई शत्रुका पास किन पठाइ रहनु भएको? म राम्री छु, त्यसकारण वहाँ केही अनर्थ भयो भने?'

रावणले रामचन्द्रजीको प्रशंसा गर्दै भन्न लाग्यो—'रामले तिमीलाई मातासमान मान गर्नुहुनेछ। तिम्रो स्तुति गर्नुहुनेछ अरू म के भनूँ? रामलाई आफ्नो शत्रु मान्दछु तर उहाँ मलाई शत्रु मान्नुहुन्न। रामको शरणमा जाऊ। उहाँले तिमीलाई इन्द्रजीतको मस्तक अवश्यै फर्काइदिनु हुनेछ।'

सुलोचना रामजीकहाँ आई। उसले 'मेरो पतिको हात आँगनमा आयो र पत्र लेखिदियो' भनी। उसलाई सोधे 'जड़ हात कसरी लेख्न सक्छ? तिमीले आफ्नो पतिको प्रार्थना गर यदि आँखाहरू हाँसे भने मान्दछु जड़ हातले पत्र लेखिपठाएको हो।'

सुलोचना थैरै मनाउँछे। मस्तक हाँस्दैन। 'नाथ, तपाईं अप्रसन्न हुनुहुन्छ।' यस्तो सुनेपछि मस्तक हल्लन लाग्यो र अलिकति मुस्कुरायो।

शेषनाग लक्ष्मणको रूप लिएर आए।

मस्तकले सुलोचनालाई भन्यो 'तेरो बाबुले मलाई मारेको हो।'

आज ससुरा र ज्वाइँका बीच होइन  दुइ पतिव्रताहरूका बीच युद्ध भइरहेछ। उर्मिला र सुलोचनाको संग्राम छ। सुलोचनाको पराजय भयो। सुलोचनाले लक्ष्मणजीलाई भनी—'जय तपाईंको होइन उर्मिलाको भएको छ। उनको पातिव्रत्य मेरो भन्दा श्रेष्ठ छ। मेरा पति पापी रावणका पक्षमा भएका कारणले दुर्बल छन्। मेरा पतिले पापीको सहायता गरिरहेका थिए। त्यसकारण मेरो पराजय भयो र उर्मिलाको जय। परस्त्रीको हरण गर्नेवालाको मेरा पतिले सहायता गर्थे। त्यसैले मेरो हार भयो।' सुलोचना सती भई। रामजीले उसको बड़ो प्रशंसा गर्नु भो।

राम र रावणका बीचमा भयङ्कर युद्ध भयो। रावणको नाभिमा जो अमृत थियो त्यसलाई अग्न्यास्त्रद्वारा सुकाइयो। रावणको मृत्यु भयो।

हनुमानजीले सीतालाई राम विजयको समाचार दिए।

प्रभुले स्वयं आफूले केही लिनुभएन, लङ्काको सारा राज्य विभीषणलाई सुम्पिदिनुभयो। वानरहरूको सम्मान गरियो।

अब रामचन्द्रजी आदि पुष्पक विमानमा सवार भएर अयोध्यातर्फ फर्के। बाटामा उहाँले सीताजीलाई रामेश्वरको दर्शन गराउनुभयो।

विमान प्रयागराज आइपुग्यो। हनुमानजीलाई अगाड़ि बढ्न आज्ञा दिइयो। भरतजीकहाँ हनुमानजी आउनु भयो। भरत रामपादुका पूजा गर्दै सीतारामको जप गरिरहेका थिए। हनुमानजीले भने—'भरतजी ! राम-लक्ष्मण-जानकी आइरहेछन्।'

भरतजीले विमान देखे तब आनन्दित भए। विमानबाट सबै तल ओर्ले। रामजीले भरतलाई अँगालो मार्नुभयो। दुवै जनाको मिलन हुँदा मानिसले चिन्न पनि सकेनन् यी दुइ जनामा राम कुन हुन् र भरत कुन हुन्। दुवैको वर्ण श्याम छ, बल्कल समान छ र शरीर दुब्लो छ।

वशिष्ठ ऋषिले राज्याभिषेकको मुहूर्त दिए—वैशाख मासको शुक्ल पक्षको सप्तमी। राज्याभिषेकको विधि सम्पन्न भयो। भगवान् रामचन्द्र र सीताजीले कनक-सिंहासनमा आसन ग्रहण गरे।

रामराज्यमा कोही दरिद्र, रोगी, लोभी, झगड़ालु थिएनन्। प्रजा सबै किसिमबाट सुखी थिए। उनको राज्यमा वकील-वैद्यको कुनै काम थिएन। त्यसवेला वकील वैद्य बेकार भएका थिए। त्यसले होला हिजोआज उनको काममा बड़ो चल्ती भएको।

रामराज्यमा सारा प्रजा एकादशीको व्रत गर्थे।

एकादशीका दिन भान्साको तरखर गर्नुपरे जावोस्, अन्नको दर्शन गर्नुहुन्न। कथा सुन्नु हुन्छ तापनि केही व्रत पनि गर्नुहोस्। जप गर्नेछु, एकादशीको व्रत लिनेछु, प्रभुको पूजाको पहिले भोजन गर्ने छैन। यस्तो कुनै पनि नियमको पालन गर्‍यौभने कथा सुनेको फल मिल्नेछ।

हनुमानजी रामचन्द्रजीको सेवा गरिरहनु भएको छ। उनी यस किसिमबाट सेवा गर्थे जो अरू कसैलाई सेवा गर्न पाउने मौके मिल्दैन थियो। सीताजी सोचमा पर्न थालिन् यस हनुमानका कारणले मैले आफ्ना पतिको केही सेवा गर्न पनि पाउँदिनँ। जब सेव्य एउटा छ र सेवक धेरै भए भने यस्तो विषमता होइ हाल्छ।

'दासोऽहम्' पछि 'सोऽहम्' हुन सक्छ। ज्ञानीहरू पनि पहिले दास्यभाव राख्छन् र पछि 'सोऽहम्' को भावना जगाउँछन्।

सीताजीले आफ्ना पतिदेवलाई भन्नुभयो—'म सेवा गर्छु। हनुमानजीलाई तपाईंले नगर्नू भनिदिनुहोस्।'

रामजी—'हनुमानजीलाई पनि सेवाको अवसर दिनैपर्छ। उनले आजसम्म मेरो धेरै सेवा गरेका छन्। म उनको ऋणी छु।' प्रभुलाई मनमा बड़ो दुःख लाग्यो हनुमानजीलाई मानिसहरूले चिन्न र बुझ्न सकेनन्।

सीता, भरत र शत्रुघ्न हनुमानजीलाई सेवा गर्न दिँदैनन्। राम सेवा मात्र हनुमानजीको जीवन थियो।

सेवा र स्मरणका निमित्त मात्र जो बाँच्छ त्यही सच्चा वैष्णव हो। भेषद्वारा वैष्णव हनु, वैष्णव भनाउनु कठिन छैन तर हृदयबाट वैष्णव बन्नु बड़ो कठिन छ।

हनुमानजीले सीताजीलाई सोधे—'माताजी, तपाईं मदेखि रिसाउनुभएको छ क्या? तपाईंले मलाई रामजीको सेवा किन गर्न दिनुहुन्न?'

सीताजी—'हिजो सेवाको सारा कार्य बाँड़िदिएको छ र तिम्रा निमित्त कुनै काम बाँकी छैन।'

हनुमानजी—'एक सेवा बाँकी छ। रामले हाइ गर्नुभयो भने चुट्की कसले बजाउला? हाइ आयो भने चुट्की बजाउनुपर्छ नत्र आयु कम हुन्छ।'

सीताजी—'हुन्छ, यो सेवा तिमीले गर्नू।'

हनुमान आजसम्म दास्यभावले रामजीको चरण मात्र हेर्थे अब माताजीको आज्ञाको कारण मुखारविन्दको दर्शन गर्न थालेका छन्।

सीताजी र रामजी यदि कुरा गर्न खोज्छन् भने हनुमानजी बीचमा उपस्थित छन्। सारा दिन विनोदमा बित्यो। रात पऱ्यो। रामजीका पास हनुमानजी पहिल्यै आएका छन्।

सीता—'अब तिमी जान सक्छौ, हनुमान।' हनुमानजी—'माताजी, तपाईंले मलाई यो सेवा दिनुभएको हो। प्रभु कुन बखत हाइ गर्नुहुन्छ। यो कसलाई थाहा छ? त्यसकारण मलाई यहीं बस्नुपर्छ।'

सीताजीले रामजीलाई भन्नुभयो—'नाथ, आफ्नो यस सेवकलाई बाहिर जान आज्ञा गर्नुहवस्।'

रामजी—'म हनुमानजीलाई कसरी भनूँ? म उनको ऋणी छु। उनको एउटा उपकरणका निमित्त मैले आफ्नो प्राण दिएँ भने पनि कम छ।'

प्रभुको यस्तो कुरा सुनेर सीताजीले हनुमानजीलाई बाहिर जाने आज्ञा दिइन्। उनी बाहिर आएर विचार गर्न थाले—एउटा सेवा पाएको थिएँ त्यो पनि खोसियो। अब सारा रात चुट्की बजाइरहन्छु जसले रामको सेवा हरसमय आफैं भइरहने छ।

यता रामजी सोच्दै हुनुहुन्छ—मेरै कारणले हनुमान ब्यूँझिरहेछन्। उनी ब्यूँझिरहने र म सुतिरहूँ यो ठीक भएन।

कीर्तन-भक्ति भगवान्‌लाई अतिशय प्यारो छ।

मेरा हनुमान जागिरहेछन् म एक्लै कसरी सुत्न सक्छु। मेरा हनुमानलाई मेरी पत्नीले निकाली बाहिर गरिदिइन्। रघुनाथजीले पनि युक्ति सोच्नु भयो उहाँ बारम्बार हाई गर्न थाल्नु भो र हनुमान साथ जाग्दै रहनुभयो।

सीताजी मन-मनै डराइन्। पतिदेव केही बोल्नुहुन्न। उनी भाग्दै कौशल्याकहाँ पुगिन् र भनिन्—'माताजी, उहाँलाई शायद कुनै राक्षसको नजर लागेको छ। वशिष्ठजीलाई बोलाए। उहाँले बुझिहाल्नुभयो भगवान्‌को कुनै मनपरेको भक्तको अपमान भएको छ। भक्तको दुःखले भगवान् दुःखी भइरहनु भएको छ।'

वशिष्ठजीले सीताजीलाई सोध्नुभयो—'आजको सारा दिन कसरी बितेको थियो ? केही गड़बड़ी भएको थिएन।'

सीताजी—'हनुमानजीबाट सेवाभार खोसिन जाँदा यो सबै भयो र प्रभुले ठीकसँग भोजन पनि गर्नुभएको छैन।'

सीताजीले हनुमानजीको चुट्की बजाउने सेवाको कुरा पनि गर्नुभयो।

सबै रामको आवासमा आए। वहाँ हनुमानजी नाच्दै रामनामको जाप गरिरहेका थिए।

वशिष्ठजी—'महाराज, कीर्तन गर्नोस् तर चुट्की नबजाउनोस्। त्यसो गर्नाले हाई आउँछ। जगत् रामका अधीन र राम तपाईंका अधीन।'

त्यसोभए तपाईं को हुनुहुन्छ ?

हनुमानजी भन्नुहुन्छ—'देह बुद्धिबाट म रामको दास हुँ। जीव बुद्धिबाट रामको अङ्ग हुँ। आत्मदृष्टिबाट सोच्यौं भने हामी एक हौं। ममा राममा कुनै भेद छैन। भक्त र भगवान् एक हुन्।'

**ब्रह्मविद् ब्रह्मैव भवति।**

रामायणको कथा करुण-रस प्रधान छ। बालकाण्डका सिवाय अन्य सबै काण्ड आँसुले भरिएको छ। रामायण समाप्त भएपछि वाल्मीकि सोच्न लाग्नुभयो त्यसमा करुणरस मात्र छ। त्यसकारण उहाँले पछिबाट आनन्द रामायणको रचना गर्नुभयो। त्यसमा शोकपूर्ण प्रसङ्ग एउटै छैन।

महापुरुषहरूले यहाँसम्म भनेका छन्—'हे सीते ! हे देवी ! यस जगत्मा तपाईं किन आउनुभयो ? यो जगत् तपाईंका निमित्त अपात्र थियो।'

रामचन्द्रजीको चरित्र दिव्य छ, रामचन्द्रजीको जस्तो मर्यादा पालन, माता-पिताको सेवा, एक पत्नीव्रत, भ्रातृ प्रेम आदि भएका खण्डमा राम भेटिनुहुन्छ। राम पाइयो भने आराम पाइयो। रामका विना आराम शक्य छैन। रामायणका एक-एक पात्र आदर्श छन्—

श्री रामजस्ता कोही पुत्र भएनन्।
वशिष्ठजस्ता कोही गुरु भएनन्।
दशरथजस्ता कोही पिता भएनन्।
कौशल्याजस्ती कोही माता भइनन्।
श्रीरामजस्ता कोही पति भएनन्।
सीताजस्ती कोही पत्नी भइनन्।
भरतजस्ता कोही भाइ भएनन्।
रावणजस्ता कोही शत्रु भएनन्।

रामायणमा बताइएको छ—मातृ प्रेम, पितृ प्रेम, पुत्र प्रेम, भ्रातृ प्रेम, पति प्रेम, पत्नी प्रेमको सर्वोच्च आदर्श रूप।

एकनाथजीले 'भावार्थ रामायणमा' लेख्नुभएको छ रावणको भक्ति, शत्रु भक्ति, विरोध भक्ति थियो। रावणले सोच्यो यदि म एक्लै रामको भक्ति गर्दै रहूँभने मेरो मात्र उद्धार हुनेछ। मेरा

यी राक्षस कहिल्यै प्रभुको नाउँ लिने छैनन्। त्यसकारण यदि मैले रामसँग शत्रुता गरें भने रामका साथ युद्ध-भूमिमा सबै राक्षस मर्दाखेरि भगवान्को दर्शन पाउन सक्नेछन् र उनको उद्धार हुनेछ। यस प्रकार सारा राक्षस-समुदायको उद्धारका निमित्त मात्र रावणले श्रीरामसँग शत्रुता गरेको हो। रावणले कुम्भकर्णसँग पनि यही कारण बताएको थियो—रामसँग आफ्नो शत्रुताको।

रामायण श्रीरामको नामस्वरूप हो। रामायणको एक-एक काण्ड रामजीको अङ्ग हो।

बालकाण्ड श्रीरामको चरण हो।

अयोध्याकाण्ड श्रीरामको जङ्घा हो।

अरण्यकाण्ड श्रीरामको उदर हो।

किष्किन्धाकाण्ड श्रीरामको हृदय हो।

सुन्दरकाण्ड श्रीरामको कण्ठ हो।

लङ्काकाण्ड श्रीरामको मुख हो।

उत्तरकाण्ड श्रीरामको मस्तक हो।

श्रीरामको नामस्वरूप रामायण ग्रन्थ जीवमात्रको उद्धारक हो। रामचन्द्रजी जहिले पनि यस पृथ्वीमा साक्षात् अवतरित हुनुहुन्छ, तब अनेक जीवहरूको उद्धार हुन्छ। यतिमात्र होइन जब उहाँ प्रत्यक्ष विद्यमान हुनुहुन्न, त्यसवेला रामायणले अनेक जीवहरूको उद्धार गर्छ। श्रीरामले अलिकति जीवहरूको उद्धार गरेको थियो, तर रामायणले अहिले पनि कैयौं जीवहरूलाई प्रभुको बाटातर्फ लगिरहेछ। अनेकौंको कल्याण उसले गरेको छ, गरिरहेछ र गर्दै पनि रहनेछ। त्यसकारण एक दृष्टिबाट हामी रामायणलाई रामभन्दा श्रेष्ठ छ भनेमा केही आपत्ति छैन। रामचरित मार्गदर्शक हो। रामायणबाट सबैलाई शिक्षा पाइन्छ। आफ्नो मन कस्तो छ भन्ने थाहा पाउन रामायण पढ़। रामायणको मनन गर्नाले त्यसमा आफ्नो मन देखिन्छ। रामयण मनोमालिन्यको ऐना हो। जसको ज्यादा समय निद्रा र आलस्यमा बित्दछ, त्यो कुम्भकर्ण हो। पर-स्त्रीको काम-भावनाले चिन्तन गर्ने व्यक्ति रावण हो। रावण अर्थात् काम रुवाउँछ, काम दुःखदाता हो। जसले रुवाउँछ त्यो रावण हो। परमानन्दमा पीङ्ग जस्तो आनन्द दिलाउने राम हो।

रामायणका सात काण्ड छन्। ती सबैको कथा संक्षिप्तमा माथि भनिसकिएको छ। अब तिनको आध्यात्मिक रहस्य क्रमैसँग उल्लेख गरिन्छ। यसका सात काण्ड मनुष्यको उन्नतिको सात खुड्किलो हो।

एकनाथ महाराजले भन्नुभएको छ काण्ड विशेषका नाउँहरूको पनि रहस्य छ।

प्रथम बालकाण्ड हो। बालक जस्तो निर्दोष बन्यौ बने रामका प्रिय बन्ने छौ। बालक प्रभुका प्रिय हुन्छन्। किनभने बालक निरभिमानी हुन्छन्। उनमा छलकपट हुँदैन। विद्या, धन र प्रतिष्ठा बढ़े पनि आफ्नो हृदय बालकजस्तै निर्दोष र भोलाभाला बनाइराख्नु, बालकाण्ड निर्दोष काण्ड हो। राम कसलाई भेटिनुहुन्छ जो बालक जस्तो निर्दोष बन्न सक्छ, उसलाई मात्र। बालकजस्तो निर्दोष र निर्विकारी बन्ने प्रयत्न गर।

आँखाबाट दोष मनमा प्रविष्ट हुन्छ। त्यो दृष्टिमा अंकुश राख्यौ भने जीवन निर्दोष बन्नेछ। जस्तो दृष्टि उस्तै सृष्टि। सृष्टि कसैलाई सुखरूप लाग्छ र कसैलाई दुःखरूप। सृष्टिमा त्यस्तो कुनै

सुख पनि छैन र दुःख पनि छैन। सुख र दुःख आफ्नै दृष्टिमा हुन्छ। त्यसै कारणले भगवान् शङ्कराचार्य संसारलाई अनिर्वचनीय मान्नु हुन्छ। त्यो वर्णन नगरिसक्नु छ।

बालकको जस्तै निर्दोष, निर्विकारी दृष्टि राख्यौ भने रामको स्वरूपलाई चिन्न सक्ने छौ। संयम र ब्रह्मचर्यद्वारा जीवनमा सरलता आउँछ। जीवले मानापमानलाई बिर्सियो भने जीवनमा सरलता आउँछ। बालकको जस्तै निर्मोही र निर्विकारी बन्नाले तिम्रो शरीर अयोध्या बन्नेछ, जहाँ युद्ध, वैर, ईर्ष्या छैन, त्यही अयोध्या हो।

बालकाण्डपछि अयोध्याकाण्ड हो। अयोध्याकाण्डले मानिसलाई निर्विकार बनाउँछ। जब जीव भक्तिरूपी सरयू नदीको किनारमा सदा निवास गर्छ, तब मानिस निर्विकारी बन्दछ।

भक्ति अर्थात् प्रेम। अयोध्याकाण्ड प्रेम प्रदान गर्दछ। रामको भरतप्रेम, रामको सौतेनी आमासँगको प्रेम आदि सबै यसै काण्डमा छ। रामको निर्विकारता यसैमा देखिन्छ।

आनन्द रामायणमा प्रत्येक काण्डको भिन्न-भिन्न फलश्रुति बताइएको छ। जसले अयोध्याकाण्डको पाठ गर्छ, त्यसको घर अयोध्या बन्दछ। त्यसको घरमा लड़ाईं-झगड़ा हुँदैन। गृहस्थाश्रमीका निमित्त यो काण्ड आवश्यक छ। कलहको मूल हो धन र प्रतिष्ठा। अयोध्याकाण्डको फल हो निर्वैरता।

शास्त्र भन्दछ सबैभन्दा पहिले आफ्नै घरका सबै मानिसहरूमा भगवद्भाव राख्नुपर्छ। जसले आफ्ना बन्धुहरूमा प्रभुलाई देख्न सक्दैन त्यसलाई मन्दिरमा भगवान् कसरी देखिएला ?

जगत्को सृष्टि गरेपछि उसको प्रत्येक वस्तुमा भगवान्ले वास गरेको छ।

जब कैकेयीले भनिन् उनले भरतलाई राज्य दिएको छ तब रामले वन जाँदा भनेका थिए, माता, यदि मेरा भाइले यसैमा सुख पाउन सक्छन् भने मलाई वनवास स्वीकार्य छ। मेरो यही भावना छ जो मेरो भाइ सुखी होस्।

जसले भाइमा भगवान्लाई देख्न पाउँदैन भने त्यसलाई मन्दिरमा पनि भगवान् देखिनुहुन्न। मूर्तिवासी भगवान् हाम्रा निमित्त दौड़ेर आउने होइन र पनि त्यसमा भगवद्भाव स्थिर गर्नुपर्छ तर सजीव देव ( कुटुम्बीजन )सँग प्रभु समान भाव जनाउन सक्दैन भने त्यसले पत्थरको मूर्तिसँग देवत्वको भाव कसरी जोर्न सक्ला ?

सृष्टि गरेपछि सबै पदार्थहरूमा भगवान्ले वास गर्नुभएको छ। जबसम्म उहाँले प्रवेश गर्नुहुन्न, तबसम्म सृष्टि निरर्थक छ।

सबैमा ईश्वर छ। मेरा भाइ-बहिनी-माता-पिता आदि सबैमा उही ईश्वर हुनुहुन्छ। रामले अलौकिक आदर्श स्थापित गरी आफ्ना भाइको सुखका निमित्त हाँस्दै वनगमन गरे। भरतको भातृ प्रेम पनि त्यस्तै दिव्य थियो। उनले राज्य स्वीकार गरेनन्। मेरा ठूला दाजु वनमा धूली फक्याई कन्दमूल खानु हुन्छ। दुःखी भइरहनु भएको छ। त्यसकारण मलाई यो राज्य स्वीकार्य छैन। मेरै कारणले उहाँ दुःखी भइरहनुभएको छ।

अयोध्याकाण्डको पठनले लड़ाईं-झगड़ा मेटिन्छ।

जीवनलाई विशुद्ध प्रेममय बनाऊ।

अयोध्याकाण्ड पछि आउँछ अरण्यकाण्ड—यसले निर्वासन बनाउँछ। निर्वैर भएपछि पनि वासनाले सताउँछ। यस अरण्यकाण्डको मननले वासना निर्मूल हुनेछ। अरण्यवास गरेर तप नगरीकन जीवनमा दिव्यता आउन पाउँदैन। रामचन्द्रजी राजा भएर पनि सीताजीका साथ वनवास गए र तपश्चर्या पनि गरे। तप गरेपछि राम राजा बने।

जसले पहिले तपश्चर्या गरेको होला त्यसले भोगोपभोगको प्रसङ्गमा संयम र सावधानीद्वारा काम लिने हुन्छ।

सबै महान् व्यक्तिहरूले अरण्यवास गरेका थिए। महाप्रभुजीले खुला पाउ भारतको यात्रा गरेका थिए। उनी दुइभन्दा बढी वस्त्र लाउँदैनथे। जीवनमा तपश्चर्या जरूरी छ।

वनवासका विना जीवनमा सुवास आउन पाउँदैन। वनवासका विना जीवन सत्त्वहीन रहन जान्छ। धेरै नभए पनि कम से कम एक महीना कुनै वनमा पवित्र किनारमा वास गर्नु जरूरी छ। जहाँ भगवान् र तिम्रा सिवाय अरू कोही नहोस्। तेस्रो आयो भने गड़बड़ शुरू भइहाल्छ। वनवासले मनुष्यको हृदयलाई कमलो बनाउँछ। वनवासबाट विश्वास हुन जान्छ भगवान्‌को सिवाय आफ्नो अरू कोही पनि छैन।

अरण्यकाण्डले हामीलाई वासनारहित बनाउँछ।

रामचन्द्रजीले भगवान् भए तापनि यो देखाइदिनु भयो तपका विना वासना नष्ट हुन सक्दैन। उत्तम संयम तप मात्र हो। पहिले जिब्रोमा संयम राख्नुपर्छ। वनवासका समयमा रामले अन्नाहार होइन फलाहार मात्र गरेको थियो। अन्तमा निहित रजोगुणले कामलाई उत्पन्न गराउँछ। सात्त्विक आहारको विना कामको नाश अशक्य छ। रामले वनमा कन्दमूलको सेवन गरेर तप गरेका थिए। वनमा उनले कुनै धातुको पनि स्पर्श गरेका थिएनन्। श्रीफलद्वारा बनेको पात्रबाट मात्र जलपान गरेका थिए। सीताजीसँगमा हुनुहुन्थ्यो तापनि राम निर्विकारी रहे। वासनाको विस्तार-विस्तार नाश कसरी गर्न सकिन्छ त्यो अरण्यकाण्डमा उल्लेख भएको छ।

यदि वासनामाथि विजय पाउनु छ भने जीवनलाई सात्त्विक बनाउनुपर्छ। तपश्चर्या गर्‍यौ भने मात्र रावण मर्ने छ। काम—रावणलाई मार्नका निमित्त अरण्यवास तपश्चर्या आवश्यक छ। यस अरण्यकाण्डमा शूर्पणखा ( मोह ), शबरी ( भक्ति ) पनि छ। शूर्पणखा अर्थात् वासना, मोहका तर्फ भगवान् कहिल्यै हेर्नुहुन्न। उहाँ तर शबरी शुद्ध भक्तितर्फ मात्र हेर्नुहुन्छ। मोहलाई नाश गर र शुद्ध भक्तिलाई अङ्गीकार गर।

मानिस जब निर्वैर, निर्विकार, वासनारहित हुन्छ, तब किष्किन्धा काण्डमा जीवको ईश्वरसँग मैत्री हुन्छ।

अरण्यकाण्डमा वासनाको विनाश भएपछि किष्किन्धा काण्डमा सुग्रीवको रामसँग मैत्री भयो। जीव जबसम्म कामसँग मैत्रीको त्याग गर्दैन तबसम्म ईश्वरसँग मैत्री हुन पाउँदैन।

यस किष्किन्धा काण्डमा सुग्रीव र राम अर्थात् जीव र भगवान्‌को वर्णन छ। सुग्रीवले कामको त्याग गरे र ईश्वरसँग मिलन हुनसक्यो। ईश्वरसँग जीवको मिलन तब मात्र हुनसक्यो जबकि हनुमानजी ( ब्रह्मचर्य र संयम )-ले मध्यस्थता गर्नुहुन्छ।

जसको कण्ठ सुन्दर छ, त्यही सुग्रीव हो। कण्ठको शोभा गहना होइन, ब्रह्मचर्य र नामजप हो। ईश्वर र जीवको मैत्री हनुमानजी अर्थात् ब्रह्मचर्यमा मात्र आधारित छ। हनुमानजी ब्रह्मचर्य र संयमका प्रतीक हुन्।

जसको कण्ठ सुन्दर हुन्छ उसैको रामसँग मैत्री हुन्छ, तर सुग्रीव एक्लैले केही पनि गर्न सक्दैन। उसलाई हनुमानजी ( ब्रह्मचर्य र संयम )को सहयोग पनि आवश्यक छ। ब्रह्मचर्यको शक्तिको विना भजनबाट आनन्द पाईंदैन, किनभने एकाग्रता हुन पाउँदैन। हनुमान ( ब्रह्मचर्य )को सहायताको विना रामजीसँग मैत्री हुन पाउँदैन। सुग्रीवलाई हनुमानजीको कारणले मात्र रामजीले अङ्गीकार गर्नुभएको छ।

सुन्दरकाण्ड—( ईश्वर )सँग मैत्री भयो र जीवको जीवन सुन्दर भयो। किष्किन्धाकाण्डबाट आएको छ सुन्दरकाण्ड। जबसम्म जीवले प्रभुसँग मैत्री गर्दैन तबसम्म उसको जीवन सुध्रिन पाउँदैन।

किष्किन्धाकाण्डपछि आएको सुन्दरकाण्ड साँच्चै सुन्दर छ। यसमा रामभक्त हनुमानको कथा वर्णित छ। भागवतको दशम स्कन्धको जस्तै यो सुन्दरकाण्ड पनि बड़ो रोचक छ। भागवतमा जो स्थान दशम स्कन्धको छ त्यही स्थान रामायणमा सुन्दरकाण्डको छ। सुन्दरकाण्डमा हनुमानजीको सीताजीसँग दर्शन भएको छ। सीताजी पराभक्ति हुन् तर उनको दर्शन कहिले हुन सक्छ ? जसको जीवन सुन्दर बन्न गएको छ उसैलाई सीताजी ( पराभक्ति )-को दर्शन हुनसक्छ। एक्लै हनुमानजी मात्र संसारसमुद्रलाई पार गर्नुहुन्छ। ब्रह्मचर्य र राम-नामको प्रतापले उनमा दिव्य शक्तिको संचार भयो। उनका सिवाय अरू कसैले पनि यस समुद्रलाई पार गर्न सकेन। ब्रह्मचर्य र राम-नामले उनलाई त्यो अपार शक्ति दियो, समुद्र पार गर्दा बाटामा सुरसा बाधा गर्न आएकी थिई। सुरसा सताउँछे। राम्रो रस भनेकै सुरसा हो। सुरसा नयाँ थिई। नयाँ-नयाँ रसको वासना राख्ने जिब्रो सुरसा हो। सुरसालाई हनुमान ( संयम )-जी नष्ट गर्नुहुन्छ। जो संसार-सागरलाई पार गर्ने इच्छुक छ उसले जिब्रोलाई वशमा राख्नुपर्छ, स्वाद वासनालाई मार्नुपर्छ।

जीवनलाई यदि सुन्दर बनाउनु छ भने उसलाई भक्तिमय बनाऊ। सीताजी पराभक्ति हुन्। जहाँ पराभक्ति छ त्यहाँ शोक रहन पाउँदैन। त्यसकारण सीताको जहाँ वास छ, त्यही अशोक वन हो। ब्रह्मदृष्टिको सिद्धि भएपछि शोक रहँदैन त्यही हो अशोक वन।

लङ्काकाण्ड—जीवनभक्तिपूर्ण र सुन्दर भएपछि लङ्काकाण्डमा राक्षसहरूको नाश भयो, राक्षस मर्छन् तब काम पनि मर्दछ, क्रोध पनि नष्ट हुन्छ। भक्तिदेवीको दर्शनले जीवन सुन्दर भयो। लङ्काकाण्डको रावण पनि काम हो जो नष्ट भयो।

भक्तिले परिपूर्ण भएपछि जीवन सुन्दर बन्दछ। जसले कामलाई मार्न सक्छ, उसले काललाई पनि मार्न सक्छ। जसलाई कामले मार्दछ, त्यसलाई कालले पनि मार्दछ। लंका शब्दका अक्षरहरूलाई अगाड़ि-पछाड़ि पार्दा हुन्छ कालं। काल सबैलाई मार्दछ, तर हनुमानजी उसलाई पनि मार्नुहुन्छ। उहाँले लंकालाई अर्थात् काललाई डढ़ाइदिनुहुन्छ। हनुमानजीलाई कालले मार्न सक्दैन, किनभने उहाँ ब्रह्मचर्यको पालन गर्नु हुन्छ र पराभक्तिको दर्शन गर्नुहुन्छ।

उत्तरकाण्ड—तुलसीदासले यस काण्डमा सबै कुरा भरिदिएको छ। यस काण्डमा मुक्ति पाइनेछ। गरुड़जी र काकभुशुण्डिको संवाद बराबर पढ़। जबसम्म राक्षस, कालको विनाश हुँदैन तबसम्म उत्तरकाण्डमा प्रवेश गर्न पाइन्न। उत्तरकाण्डमा भक्तिको कथा छ, भक्त को हो? भगवान्‌बाट जो एकक्षण पनि छुट्टिन पाउँदैन, उही भक्त हो।

पूर्वार्धमा जो रावणलाई मार्दछ, त्यसैको उत्तरकाण्ड सुन्दर बन्दछ। त्यसैले वृद्धावस्थामा राज्य गर्छ। जीवनको पूर्वकाण्ड—यौवनावस्थामा कामलाई मार्ने प्रयत्न गर्‍यौ भने तब तिम्रो उत्तरार्ध—उत्तरकाण्ड सुध्रिएला। त्यसकारण जीवनलाई सुधार्ने प्रयत्न युवावस्थादेखि गर्नुपर्छ।

यस प्रकार यी सात काण्ड मानव जीवनको उन्नतिका सात खुड्किला हुन्।

रामकथा सागरजस्तो छ। रामकथा अमृतकथा हो तर यसैमा अल्मलिएर बसेमा कृष्णको पालो कहिले आउने हो।

शिवजीको जस्तै हृदयमा रामको नाउँ राखे पनि वेस हुने हो। सदा रामको नाउ रट्दै रहू। हनुमानजी भन्नुहुन्छ—'सबैभन्दा ठूलो विपत्ति त्यही हो जब रामको स्मरण नगरिएको होस्।'

कह हनुमन्त विपति प्रभु सोई।
जब तब सुमिरन भजन न होई॥

रावण आदिको संहार गरेर राम अयोध्या फर्कनु भयो। उहाँको राज्याभिषेक थियो। राज्याभिषेकका पछि रामजीले अयोध्यावासीहरूलाई मानव समाजको उपदेश दिनुभयो।

एहि तनकर फल विषय न भाई।
स्वर्गहुँ स्वल्प अन्त दुखदाई॥
नरतनु पाइ विषय मन देहीं।
पलटि सुधाते सठ विष लेहीं॥

यो पाइएको मानव शरीर विषयभोगका निमित्त होइन विषयसुख एकाध घड़ीलाई स्वर्गजस्तो सुखद आनन्द पाइन्छ तर अन्तमा दुःख र दुःख मात्रै हात लाग्छ। मानव शरीर पाएर जो मनुष्य विषयका पछि मात्र लागिरहन्छ त्यसले अमृतको साथै विष नै ग्रहण गरिरहेको हुन्छ। त्यसकारण यस्तो कहिल्यै नगर।

**'तमे भावे भजी लो भगवान, जीवन थोडुं रह्युं।'**

अर्थात् भगवान्‌लाई भावले भज, किनभने जीवन अब बहुतै कम बाँकी रहन गएको छ। भोगोपभोगबाट कहिल्यै शान्ति पाइने होइन।

राजा ययातिलाई हेरौं। उनको विवाह शुक्राचार्यकी छोरी देवयानीसँग भएको थियो।

एकपटक देवयानीका साथ राजा वृषपर्वाकी छोरी शर्मिष्ठा तथा अन्य कैयौं सखीहरू स्नान गर्न गएका थिए। स्नानादिबाट निवृत्त भएर पछि जब उनीहरू लुगा फेर्न थालेका थिए तब शर्मिष्ठाले भूलले देवयानीको लुगा लगाइदिइन्। देवयानीले क्रोधमा शर्मिष्ठालाई धेरै कटु शब्द

सुनाइन्। शर्मिष्ठाले क्रोधवश देवयानीको वस्त्र खोसेर उनलाई इनारमा खसालिदिएर अनिसबै अगाड़ि बढ़े।

शिकारका निमित्त निस्किएका राजा ययाति त्यहाँ आइपुगे। उनले इनारभित्र चिच्याएको आवाज सुने अनि देवयानीलाई बाहिर निकाले। देवयानीले राजासँग विवाह गर्ने इच्छा प्रकट गरिन्।

यता शुक्राचार्यले आफ्नी छोरी-विषय समाचार सुनेर उनी वृषपर्वाको नगरतर्फ गए। उताबाट वृषपर्वा पनि गुरुजीसँग क्षमा माग्न आइपुगे। गुरुजीले आफ्नी छोरीलाई प्रसन्न गर्ने प्रस्ताव राखे। देवयानीले भनिन्—'म विवाह गरेपछि जहाँ पनि जाऊँ तपाईंकी छोरी शर्मिष्ठालाई मेरी दासीको रूपमा आउनुपर्ने छ।' शर्मिष्ठा दासी बनेर राजा ययातिका आवासमा आइन्।

शुक्राचार्यले राजा ययातिलाई शर्मिष्ठाका साथ विषय-सुख भोग गर्नलाई मनाही गरिदिएका थिए। राजाले शुक्राचार्यको आज्ञा उल्लङ्घन गरे तब गुरुले उनलाई वृद्धत्व दिए। ययातिले प्रार्थना गर्दै गुरुसँग सोधे 'उनको वृद्धत्व कसरी हट्ला?' शुक्राचार्यले भने—'यदि तिम्रो वृद्धावस्थालाई कसैले स्वीकार गर्छ भने र तिमीलाई आफ्नो युवावस्था दिन्छ भने अनि मात्र कुरा मिल्न जाला।'

राजा ययातिले आफ्नै पुत्र पुरुको युवावस्था लिए र हजारौं वर्ष विषय-सुखको उपभोग गरेर पनि उनलाई तृप्ति भएन, उनको मनमा वैराग्य जाग्यो। उनले जगत्‌लाई उपदेश दिए।

न जातु कामः कामानामुपभोगेन शाम्यति।
हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्धते॥

(भा० ९-१९-१४)

विषयहरूको उपभोग गर्दै रहनाले कामवासना कहिले तृप्त या शान्त हुँदैन, जस्तै अग्निलाई घिउको आहुतिले अरू दन्काउँछ त्यस्तै किसिमबाट वासना उग्र हुँदै जान्छ। भोगोपभोगद्वारा वासना अधिकाधिक बढ्दै जान्छ। मनुष्यको शरीर वृद्ध हुन्छ तर वासना, तृष्णा कहिल्यै वृद्ध हुँदैन।

जीर्यतो या न जीर्यते।

भर्तृहरिले पनि भनेको छ—भोगीको होइन, हाम्रै मात्र उपभोग हुन्छ। तृष्णा होइन हामी स्वयं जीर्ण हुँदै जाँदैछौं।

भोगा न भुक्ता वयमेव भुक्ताः।
तृष्णा न जीर्णा वयमेव जीर्णाः॥

भागवत गीताको भाष्य हो। गीताजीको सिद्धान्तहरूको दृष्टान्त हामीलाई भागवतले दिन्छ।

काम 'महाशनो महापाप्मा' अग्निको जस्तो भोगहरूबाट कहिले तृप्त नहुनेवाला महापापी र वैरी हो।

काम शत्रु हो र पनि राजा ययातिको जस्तो कति मानिस त्यसलाई मित्र बनाउने कोशिशमा हुन्छन् र अन्तमा दुःखी हुन्छन्।

काम र क्रोधलाई कहिल्यै मित्र नबनाउनु, तिनीहरू वैरी हुन्। उनका साथ वैरीको जस्तै व्यवहार गर।

गीतामा भनेको छ— *'न मे भक्तः प्रणश्यति।'*

भागवतमा प्रह्लाद, अम्बरीष आदिको कैयौँ उदाहरण दिइएको छ।

राजन्, रन्तिदेवको चरित्र पनि अद्भुत छ। उनलाई जे-जति मिल्यो उनी अरूलाई दिन्थे। उनको जीवनध्येय के थियो भने आफूलाई जति दुःख किन नपरोस्, अरूलाई सुखी तुल्याउनै पर्छ।

रन्तिदेवले एकपटक आफ्नो प्राणलाई सङ्कटमा पारेर आफ्नो भोजन, पानी आदि सबै कुरा अरूहरूलाई दिएका थिए। उनले भनेका थिए—

न कामयेऽहं गतिमिश्वरात् परामष्टर्द्धियुक्तामपुनर्भवं वा।
आर्तिंप्रपद्येऽखिलदेह भाजामन्तः स्थितो येन भवन्त्यदुःखाः॥

(भा० ९-२१-१२)

म ईश्वरसँग आठवटै सिद्धिहरूले युक्त उत्तम गतिको इच्छा गर्दिनँ। मलाई मोक्षको इच्छा पनि छैन। मेरो यति मात्र इच्छा छ म सबै प्राणीहरूका हृदयमा बस्न पाऊँ, ती सबैको दुःख मैले खप्न सकूँ जसले गर्दा उनलाई दुःख नभोग्नुपरोस्।

मेरो बस यही इच्छा छ सबै प्राणी दुःखमुक्त होऊन् र उनको दुःख म सहन सकूँ।

अन्तमा यदुराजको वंशको वर्णन छ। यदुराजको वंश दिव्य छ। यसै वंशमा श्रीकृष्णले जन्म लिनु भएको थियो।

राजन् सावधान हुनुहोस्। यस वंशको कथा जसले पनि सुन्ला उसको वंशको वृद्धि हुनेछ। यो हरिवंशको कथा हो।

आहुकहाँ दुइ पुत्र भए—देवक र उग्रसेन। देवकले आफ्ना सात कन्याहरूको विवाह वसुदेवसँग गरिदिए। वसुदेव-देवकीकहाँ छ बालक उत्पन्न भए। रोहिणीबाट सातौं सन्तान भए बलराम र आठौं सन्तानका रूपमा जन्म लिए भगवान् श्रीकृष्णले।

परमात्मा जब पृथ्वीमा आउनुहुन्छ, तब भार धेरै उठाउनुपर्छ, तर उहाँहरू धर्मको स्थापना गर्न र अधर्मको नाश गर्न अवतार लिनुहुन्छ।

भगवान् श्रीकृष्ण चौध वर्ष मथुरामा बस्नुभयो र द्वारिकामा वास गर्नुभयो, उहाँ द्वारिकानाथ हुनुभयो। पृथ्वीबाट अधर्मको भाव दूर गर्नका निमित्त उहाँले पाण्डव-कौरवहरूको युद्धको आयोजना गर्नुभयो।

यस प्रकार, नवम्स्कन्धको समाप्तिमा संक्षिप्त कृष्णकथा भनियो।

हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

# दशम स्कन्ध (पूर्वार्द्ध)

मैने मेंहदी रचाई रे, कृष्ण नाम की।
मैने बिंदिया सजाइ रे, कृष्ण नाम की।
मेरी चुड़ियों पै कृष्ण, मेरी चुनरी पै कृष्ण।
मैने नथनी गढ़ाइ रे, कृष्ण नाम की।—मैने०
मेरे नयनोंमें गोकुल वृन्दावन।
मेरे प्राणोंमें मोहन मनभावन।
मेरे होठों पै कृष्ण मेरे हृदयमें कृष्ण।
मैने ज्योति जगायी रे कृष्ण नामकी।—मैने०
अब छाया है कृष्ण अंग-अंग में।
मेरा तन-मन रँगा है कृष्ण रंग में।
मेरा प्रीतम है कृष्ण, मेरा जीवन है कृष्ण।
मैने माला बनाइ रे कृष्ण नामकी।—मैने०

('द्वारिकाधीश' बाट)

अब दशम् स्कन्धको कथा आरम्भ भइरहेछ। भागवतको फल दशम स्कन्ध हो। दशम स्कन्धमा शुकदेवजी मानौं आनन्दबाट फक्रिनुभएको छ। यो शुकदेवजीको इष्टदेवको कथा हो।

श्रीमद्‌भागवत सातौं दिनमा मुक्ति दिलाउने ग्रन्थ हो। अनेक जन्महरूसम्म साधन-साधना गरेपछि पनि नपाइने मुक्ति, अति दुर्लभ मुक्ति, राजा परीक्षित्‌लाई सात दिनमै पाइएको थियो।

परीक्षित्‌को प्रश्न थियो—'आसन्नमृत्यु व्यक्तिको के कर्त्तव्य हो?' शुकदेवजीले यदि यज्ञ गर भन्ने आज्ञा दिएका खण्डमा सौ दिनमै मुक्ति पाउनु सम्भव थिएन।

जीवनको अन्तिम श्वासमा पनि विकारको विचार नआउने उपाय गर्नु थियो। शुकदेवजीले सोच्नुभयो यदि राजा कृष्णकथामा तन्मय हुन सक्छन् भने तब उनलाई मुक्ति मिल्न सक्छ।

मुक्ति मनलाई पाइन्छ, आत्मालाई होइन। आत्मा र परमात्मा एक हुन् भनेर केही आचार्यले मान्दछन्। केही आचार्यचाहिँ आत्मा र परमात्मालाई भिन्न मान्दछन्। उनीहरू मान्दछन् आत्मा अंश हो र परमात्मा अंशी।

शङ्कर स्वामीको सिद्धान्त यस प्रकार छ—'जीव र ईश्वर एक हो, यो जो भेद देखिन्छ, त्यो अज्ञानको कारणले देखिएको हो। भेद औपाधिक हो। उपाधिका कारणले भेदको भास देखिएको छ तत्वतः भेद छैन।'

भेदका दुइ प्रकार छन्—स्वतः सिद्ध भेद र औपाधिक भेद।

घोड़ा र गाईको भेद स्वतः सिद्ध हो। न घोड़ा गाई बन्न सक्छ न गाई घोड़ा।

औपाधिक भेद—जसको वास्तविक स्वरूप शीतलता हो। उष्ण जलको उष्णताको कारण उपाधि हो।

वास्तविकतया, तत्वतः आत्मा र परमात्मा, जीव र ईश्वर एकै हुन्। जो भेद देखिन्छ, त्यो औपाधिक हो। घटाकाश र व्यापक आकाश एकै हो तर घटको उपाधिको कारण भेदको आभास हुन्छ। घट फुटेपछि घटाकाश र महाकाश एक हुन जान्छन् तर मिल्छ के ? ती एकै हुन्। वास्तविक दृष्टिबाट ती मिलेकै छन्।

व्यापक चैतन्य भनेकै ईश्वर हो। व्यापकाधिष्ठ चैतन्य परमात्मा हो। शरीराधिष्ठ चैतन्य जीव हो। अविद्याको आवरणले युक्त चैतन्यनै जीव हो। अविद्यारूपी आवरण हटेपछि जीव र शिव एक बन्दछन्। उपाधिका कारणले शिव र जीवको भिन्नता भासमय हुन्छ। यो वेदान्तको सिद्धान्त हो।

यो जीव, अंश बन्न सक्दैन। यदि अंशीबाट अंश विभक्त भयो भने तब अंशीको स्वरूप खण्डित हुन्छ। फूलको एउटा पत्र टिप्यो भने फूलको स्वरूप खण्डित हुन्छ। अंशीमध्येबाट अंश अलग्ग भयो भने अंशीको अखण्डित स्वरूप टुट्न जानेछ। त्यसकारण शंकराचार्य भन्नुहुन्छ, 'जीव अंश जस्तो छ, पूर्णांश होइन।' ईश्वर यस्तो हुनुहुन्न जो भाग लाउन सकियोस्। उहाँ व्यापक चैतन्य हुनुहुन्छ, सर्वव्यापी हुनुहुन्छ। आकाश जस्तो उहाँ सर्वत्र हुनुहुन्छ।

वैष्णव आचार्य मान्दछन् जीव र ईश्वर एउटै होइनन्। जीव ईश्वरको अंश हो। अंशीबाट अंश छुट्टिएपछि पनि अंशको नाश हुन पाउँदैन। समुद्रबाट एक दुइ थोपा पानी झिक्दैमा समुद्रको नाश हुँदैन। सोही प्रकार अंश विभक्त भएमा अंशको नाश हुन पाउँदैन, उसको स्वरूपमा पनि परिवर्तन हुँदैन।

हामी सबै मानौं एक राजाका सन्तान हौं। माया एक दासी छ जो हाम्रो लालन-पालनका निमित्त मात्र हो, हामीलाई दुःख दिन होइन। यदि उसले सताउँछे भने राजा ( प्रभु )-ले उसलाई छुट्टी दिइहाल्ने छन्। परमात्माका साथ घनिष्ठतापूर्वक प्रेम गर्‍यौं भने मायाको बन्धन चुँड़िइहाल्नेछ। गोकुल लीलाको यही मात्र रहस्य हो।

अति सूक्ष्म बुद्धिवाला व्यक्ति वेदान्तको विवर्तवादलाई संझन सक्छ। उर्मिप्रधान व्यक्तिलाई वैष्णवाचार्यहरूको सिद्धान्त मन पर्ला। यी दुवै सिद्धान्त दिव्य छन्।

शुकदेवजी सावधान गराउनुहुन्छ—चाहे जे पनि संझौं या मानौं मुक्ति मनलाई पाइने हो, आत्मालाई होइन। आत्मा चाहिँ नित्यमुक्त छ। जीवलाई ईश्वररूप मान या अंश तर त्यो आत्माभन्दा भिन्न छ।

सुख र दुःखको अनुभव मनलाई हुन्छ आत्मालाई होइन। तैपनि आत्मामाथि त्यसलाई आरोपित गरिन्छ।

परीक्षित्‌ले मुक्ति पाउने अब सातै दिन मात्र बाँकी छ। यदि उनको मन श्रीकृष्णका सिवाय अरू कुनै वस्तुमा लागेन भने उनले मुक्ति पाउने सम्भावना छ।

मुक्ति त्यसले पाउँछ, जसको मन मर्दछ। पूर्वजन्मको शरीर मरेर गए पनि पूर्वजन्मको मन लिएर जीवात्मा यस जन्ममा आएको छ। *'मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति'*। मनलाई जसरी पनि मार्नै छ। अलिकति पानीमा माछा न बाँच्नै सक्छ न मर्नै।

मनले यदि सांसारिक विषयहरूको चिन्तन छोड्छ भने त्यो ईश्वरमा लीन हुन सक्छ। कृष्णकथाको आकर्षणले मनलाई ईश्वरमा लीन गराउन सक्छ। मनलाई संसारका विषयहरूका तर्फबाट हटाएर कृष्णलीलामा लगाइदेऊ। कृष्णको बाललीला, गोपालनलीला आदिको संझना गर।

मनलाई प्रतिकूल कुराहरूबाट हटाएर अनुकूल विषयहरूसँग जोड़िदेऊ। यस कथाको उद्देश्य पनि यही हो। यस कथाले ज्ञान र वैराग्य बढ्छ। यो कथा सुन्नाले मनुष्यलाई प्रवृत्तिबाट छुटकारा पाउने मन हुन जान्छ। भागवतको कथा ज्ञान, वैराग्य र कृष्णप्रेम बढ़ाउने हो। भागवतको कथाले श्रोतालाई कृष्ण-प्रेममा पागल बनाइदिन्छ।

परीक्षित राजाको मोह नष्ट हुन्छ सक्यो र मन कृष्णलीलामा तन्मय भयो भने उनका मनको निरोध हुन सक्छ।

श्रीकृष्णलीला निरोधलीला हो। मनलाई निरोध गर्नु छ। जगत्‌को विस्मरण र भगवद् आसक्ति भनेकै निरोध हो। सांसारिक विषयहरूको विस्मरण भएपछि मात्र साँचो आनन्द प्रकट हुन्छ। सांसारिक सम्बन्ध छुटेपछि ब्रह्मसम्बन्ध जोड़िन्छ। सांसारिक विषयहरूमा साँच्चिनै आनन्द भएको भए यी सबैलाई छोड़ेर निन्द्राको इच्छै हुने थिएन।

कृष्ण कथा यस्तो छ जसले जगत्‌लाई पनि बिर्साइदिन्छ। जगत्‌मा वस्तु पनि छ र उसलाई बिर्सिनु पनि छ। संसारलाई छोड़ेर कहाँ जाउला ? जहाँ जान्छौ संसार सँगसँगै पछि लाग्ने छ। संसारलाई छोड्ने होइन तर उसलाई मनबाट बाहिर धपाइदिनु छ। संसारमा बसेर पनि त्यसबाट भिन्नै हुनु पनि छ। भागवतको कथाले भोक-प्यास र सांसारिक झंझटहरूलाई बिर्साइदिन्छ।

दशम स्कन्धको आरम्भमा शुकदेवजीले राजाको परीक्षा लिनुभयो। पाँच दिनदेखि एउटै थलामा आसन लगाई बसेका छौ। यदि केही चना-चमेना खानपीन गर्नु छ भने गर्नसक्छौ।

परीक्षित्ले भने, 'भगवन् ! अन्न मात्र होइन मैले जल पनि त्यागिदिएको छु। जुन भोक र प्यासको कारण कुनै वेलामा मैले मुनिलाई मरेका सर्पको माला लाइदिएको थिएँ, त्यही भोक-प्यासले मलाई अब बिलकुलै सताउन सकेको छैन। यसको कारण यही हो म तपाईंका मुखकमलबाट बगिरहेको श्रीहरिकथामृतको पान गरिरहेछु।'

कथाको रसपानको कारणले मलाई भोक र प्यासले दुःख दिन सक्दैन।

राजाको वचन सुनेर शुकदेवजीलाई बड़ो प्रसन्नता भयो। राजा सुपात्र छन् र जिज्ञासु पनि छन्।

कथामा यस्तै तन्मयता हुनुपर्छ। कृष्णकथाले अनायासै संसार बिर्साइदिन्छ। यसबाट जगत् बिर्सिन्छ। कृष्णको कथाले जगत्को विस्मरण गराउँछ।

कृष्ण कथाको यही महिमा छ जो उसले देहभान बिर्साइदिन्छ। कृष्णकथा महिमामयी छ। यस कथामा लीन मनले जगत्लाई बिर्सिदिन्छ।

संसारको सम्पूर्ण विस्मरण र परमात्माको सतत स्मरण भनेकै मुक्ति हो।

कथाले तिमीलाई आफ्ना दोषको संझना गराउँछ। कथा सुनेपछि रुन आयो भने भन्ठान कथा सुनेका रहेछौ। अम्बरीषको भक्ति कस्तो दिव्य थियो र मेरो जीवन कति क्षुद्र छ। अफशोच छ ! मेरो जीवन कुकुरको जस्तो त्यसै व्यर्थ भयो।

कृष्णकथाले सबैलाई आनन्द दिन्छ, किनभने यसमा सबै रसहरूको समन्वय छ। यस कथाले बालकहरूलाई पनि आनन्द दिन्छ र संन्यासीलाई पनि। श्रीकृष्ण बालकका साथ बालक हुनुहुन्छ र युवाका साथ युवा। उहाँ ज्ञानीका लागि ज्ञानी हुनुहुन्छ र योगीका निमित्त योगी।

श्रीकृष्ण भोगी हुनुहुन्छ, तर पनि रोगी हुनुहुन्न, योगी हुनुहुन्छ। सामान्यतः भोगी रोगी बनिहाल्छ। तर एकादश स्कन्धको वर्णनानुसार, श्रीकृष्ण जब एकसय पच्चीस वर्षको आयु पूर्ण गरेर परमधाम जानुभयो, त्यसवेला उहाँको शिरको एक रौं पनि फुलेको थिएन।

मनुष्यको मन कुनै न कुनै रसमा फँसेकै हुन्छ।

यस कथामा हास्य, शृङ्गार, करुण, भयानक आदि सबै रस भरिएको छ किनभने श्रीकृष्ण स्वयं रसरूप हुनुहुन्छ। 'रसो वै सः'। बाललीला हास्यरस हो, रासलीलामा शृङ्गार रस छ। चाणूर, मुष्टिक, कंस आदिको हत्यामा वीर रस छ—जुन रस मन परे पनि कृष्ण-कथा सबैलाई मन पर्छ। यही विशेषता छ यस कथाको।

भगवान्ले सबैलाई दशौं रस-प्रेमरसको दान दिनुहुन्छ। यस कृष्णकथामा सर्वश्रेष्ठ रस—प्रेमरस छताछुल्ल भएर भरिएको छ।

जसले प्रेमरसको आस्वाद गरेको छ, त्यसका निमित्त अरू सबै रस अ-रस नै छन्। मीराबाईका शब्दहरूमा भनौं भने अन्य सबै रस तीता छन्—

**साकर शेरडीनो रस त्यजीने कड़वो ते लीमडो घोल मा,**
**राधाकृष्ण बिना बीजुं बोल मा।**

अर्थात् कृष्ण-प्रेम सख्खर र उखुको मीठो रस हुन्। त्यसलाई छोड़ेर तीतो नीमको ( सांसारिक ) रस किन पिउने ? राधाकृष्णबाहेक अरू के र किन बोल्नुपर्‍यो ?

हो, यस कृष्ण-रसको स्वाद पाउन सरल छैन। नरसिंह मेहता भन्नुहुन्छ—

**ए रसनो स्वाद शंकर जाणे के जाणे शुक्र जोगी रे।**
**कंई एक जाणे व्रजनी रे गोपी, भणे नरसैंयो भोगी रे॥**

अर्थात् यस रसको स्वाद शङ्कर, शुकदेव, योगी र व्रजका गोपी जस्ताले मात्र लिन पाउँछन्।

जगत्‌का सबै रस कटुताले भरिएका छन्। शृङ्गार रस आरम्भमा चाहिँ मीठो लाग्छ तर अन्तमा चाहिँ तीतै लाग्ला। अरू कुनै पनि रसमा मिठास छैन। प्रेम-रस मात्र मधुर छ। प्रेमविना प्रभुको साक्षात्कार पाइँदै पाइँदैन। श्रीकृष्ण प्रेमरूप हुनुहुन्छ। उहाँले अलौकिक प्रेम-रसको दान गर्नुहुन्छ। प्रेम-रसमा न वासना छ, न विषमता, न स्वार्थ छ न तँ तँ र म म।

गोपी भन्दछिन्—

**लाली मेरे लाल की, जित देखूँ तित लाल।**
**लाली देखन मै गई, मै भी हो गई लाल॥**

गोपी कृष्णलाई खोज्न गइन् तब उनले आफ्नोपना गुमाइन् र कृष्णसँग एकरूप भइहालिन्। श्रीकृष्णका समक्षमा म र मेरो भन्ने बाँकी रहनै सक्दैन।

मानव जीवनको यही विशेषता र सार्थकता छ जो ऊ कृष्णप्रेममा पागल हुन्छ।

प्रतिदिन भगवान्‌सँग प्रार्थना गर, 'तपाईं मेरो मनलाई आफूतिर तानिदिनुहोस्। ममा यस्तो शक्ति छैन जो म तपाईंलाई तान्न सकूँ। त्यसकारण तपाईंनै मलाई तानिदिनुहोस्।'

कृष्ण प्रेममा हृदय लीन होस्, सरोबर होस्, आँखा प्रेमाश्रुले भिजोस् अनि ब्रह्मसम्बन्ध हुनेछ, तबमात्र ब्रह्मरूप हुनेछ।

ब्रह्मसम्बन्ध सदा बनाइराख। सावधान होऊ कहीं मायाको फेरामा मन नफँसोस्। परीक्षित्‌को जस्तै मायाका साथ विच्छेद र ब्रह्मका साथ सम्बन्ध भयो भने सातै दिनमा मुक्ति प्राप्त हुन सक्छ। ब्रह्मचिन्तन गर्दा-गर्दै देहत्याग हुनाले मुक्ति पाइन्छ।

दशम स्कन्ध चाहिँ भगवान् श्रीकृष्णको हृदय हो। उहाँ रसस्वरूप हनुहुन्छ, अनि जीव पनि रसस्वरूप छ। प्रत्येक जीवको कुनै न कुनै रसमा रुचि हुन्छ। भिन्न रुचिवाला सबैलाई यो कृष्णकथाले आनन्द दिन्छ। श्रीकृष्ण पनि एक दिव्यरस हुनुहुन्छ।

प्रेम र विरह दुवैमा हृदय आर्द्र बन्दछ, अनि रसानुभूति हुन्छ।

श्रीकृष्णकथाले सबै प्रकारका जीवहरूलाई आकर्षित गर्दछ।

सामान्यतः जीवका चार भेद छन्—( १ ) पामर, ( २ ) विषयी, ( ३ ) मुमुक्षु र ( ४ ) मुक्त। अधर्मबाट धनको आर्जन गर्ने र अनीतिपूर्वक उपभोग गर्ने पामर जीव हो। धर्मको पालन गर्दै ाइ गरेर इन्द्रिय सुखको उपभोग गर्ने विषयी जीव हो। सांसारिक बन्धनबाट मुक्ति पाउने इच्छा यत्न गर्ने मुमुक्षु जीव हो। कनक र कान्तारूपी मायाका बन्धनहरूबाट मुक्त भएर प्रभुमा तन्मय को मुक्त जीव हो। श्री महाप्रभुजी भन्नुहुन्छ, 'रजस, तमस र सात्त्विक, कुनै पनि प्रकृतिको त्र कृष्ण-कथाबाट आनन्द पाउन सक्छ। यसै कारणले उहाँले दशम स्कन्धलाई तीन विभाग भएको छ—सात्त्विक प्रकरण, राजसिक प्रकरण र तामसिक प्रकरण।'

श्रीकृष्ण-कथा सबैलाई उपयोगी र सबैलाई आनन्द दिनेवाला हो। यसको कारण यो हो कृष्ण भोगी पनि हुनुहुन्छ र महान् योगी पनि। यसैले शुकदेवजी जस्तो योगीलाई पनि यस ाबाट आनन्द लाभ हुन्छ।

भगवान् श्रीकृष्णले गृहस्थाश्रम र संन्यासाश्रम दुवैको समन्वय जगत्का समक्ष राखेको छ। ५ हजार रानीहरूका स्वामी श्रीकृष्ण संन्यासीहरूको व्यास-पूजामा अग्रस्थान पाउनुहुन्छ।

श्रीकृष्णको दिव्यतालाई हेर सोह्र हजार रानीहरूका बीच बसेर ती सबैसँग प्रेम गर्दै पनि ासक्त हनुहुन्छ।

पति-पत्नीलाई जरूरी छ एक-अर्कासँग प्रेम गर्दै रहे पनि अनासक्त हऊन्। श्रीकृष्ण सबै हरूका साथ प्रेम गर्दै रहेर पनि कुनै पनि रानीसँग आसक्त हुनुहुन्न। आजकल तर मानिसहरूले शब्दलाई पनि कलङ्कित गरिदिएका छन्। जहाँ विकार र वासना छ त्यो प्रेम होइन, मोह मात्र हो।

शुकदेवजीले श्रीकृष्णको वैकुण्ठ गमनको वर्णन गरेको छ। त्यस समय यस्तो दिव्य कान्ति वान्को मुखमा थियो जो देखेर युवकहरूलाई लाज मर्नुभयो। एकसय पच्चीसवर्षको अवस्था र पनि उहाँको न कपालै फुलेको थियो न एउटा दाँतै झरेको थियो। यस्तो थियो उहाँको दिव्य रूप। यसै कारणले उहाँ योगीहरूका प्रिय हनुहुन्छ।

सच्चा महायोगीको यो लक्षण छ जो ऊ कहिले बिरामी पर्दैन। जुन योगीलाई बिमारीले त्यो भन्ठान्नु उसको योगमा कहीं न कहीं क्षति भएको छ। श्रीकृष्ण योगी र भोगी दुवैलाई ा हुनुहुन्छ।

श्रीकृष्णलीलामा सबै प्रकारको रस देखिन्छ। साधारणतः साहित्यमा नौ रस हुन्छन्—य, वीर, करुणा, शृङ्गार, वीभत्स आदि। श्रीकृष्णको हास्य-विनोद पनि अद्वितिय छ। कृष्णको वीर रसको चाहिँ महाभारतमा अनेक स्थानहरूमा वर्णन छ। श्रीकृष्ण प्रेमस्वरूप को कारण परिपूर्ण माधुर्य रसबाट भरिएको छ। त्यसकारण कुनै पनि रसको रुचि पुष्ट भएर ौकिक प्रेमरसको प्राप्ति गराउने हुन्छ। लौकिक आसक्ति विस्तार-विस्तार विनष्ट हुनेछ र ौकिक श्रीकृष्णको आसक्तिरूपमा भक्ति प्राप्त हुनेछ र जीवन सफल हुनेछ।

महापुरुष श्रीकृष्ण-लीलालाई निरोध-लीला भन्दछन्। मनको निरोध भएपछि मुक्ति सजिलो छ।

मनको निरोध ईश्वरमा मात्रै हुनसक्छ, अन्य कुनै वस्तुमा हुँदैन। किनभने संसार जड़ हो, मन होइन। दूध र मिश्रीको जस्तै सजातीय एक-अर्कामा मिसिन सक्छ। पत्थर एकरूप हुन सक्दैन। यसै प्रकार मन संसारका जड़ पदार्थहरूसँग एकरूप हुन सक्दैन। मन न पूर्णचेतन छ न पूर्णतः जड़। त्यो अर्धचेतन छ र अर्ध जड़।

परीक्षित् राजाको मनलाई सांसारिक विषयहरूमध्येबाट अनायास हटाएर श्रीकृष्णका साथ एकरूप गरी उनलाई मुक्ति प्राप्त गराउनका निमित्त मात्र यो दशम स्कन्ध रचिएको हो।

दशम स्कन्ध चाहिँ भगवान्‌को हृदय हो। यसम श्रीकृष्णको त्यो लीला वर्णित छ, जसले अनेकौंलाई प्रेम-पागल बनाइदियो।

सनातन स्वामी कुनै वेला कुनै राजाका महामन्त्री थिए। दशम स्कन्धको कथा सुनेर उनी साधु भए।

श्रीकृष्ण योगी थिए र भोगी पनि।

यस कथाले राजाहरूलाई पनि आकर्षित गर्छ र योगीहरूलाई पनि। यसको कारण हो श्रीकृष्ण। *'चित्त चैन नहिं चोर चुरायो है।'*

श्रीकृष्ण चित्तको शान्ति मात्रै कहाँ, स्वयं चित्तलाई चोरिदिनु हुन्छ।

उहाँको रूप पनि बड़ो अद्भुत छ।

धूरि-भरे अति सोभित स्यामजू, तैसी बनी सिर सुन्दर चोटी।
खेलत-खात फिरै अंगना, पगपैंजनी बाजतो, पींरी कछोटी॥
वा छविकों रसखान बिलोकत, वरत काम कलानिधि कोटी।
कागके भाग कहा कहिए, हरि हाथसे ले गयो माखन रोटी॥

## युगल प्रियाजीको पद

( राग : मेघ रंजनी; ताल : झप )

स्याम स्वरूप बस्यो हियमें, फिर और नहीं जग भावैं री।
कहा कहूँ को माने मेरी, सिर बीती सो जानै री॥
रसना रसना सब रस फीकै, दृगनि न औरे रंग लागै री।
स्रवननि दूजी कथा न भावै, सुरत सदा प्रियकी जागै री॥

बढ्यो विरत अनुराग अनोखो, लगन लागी मन नहीं लागै री।
जुगल प्रिया के रोम-रोम तें, स्याम ध्यान नहिं पल त्यागै री॥

भगवान् कृष्णको छवि, उहाँको लगन, उहाँको प्रेमको कसी यस्तो छ एक पटक हृदयमा भित्रिएपछि निस्कने नाउँ नै लिन्न।

मुकुट लटक अटकी मन माहीं।
नृत्यत नटवर मदन मनोहर, कुंडल झलक अलक बिथुराई॥
नाक बुलाक हलत मुक्ताहल, होठ मटक गति भौंह चलाई।
ठुमुक ठुमुक पग धरत धरनि पर, बाँह उठाइ करत चतुराई॥
झुनक झुनक नूपुर झनकारत तत्ता थेइ थेई रीझ रीझाई।
चरनदास सहजो हित अन्तर, भवन करौ जित रहो सदाई॥

राजा परीक्षित्‌ले भन्नुभयो—तपाईंले सूर्य वंश र चन्द्रवंशको कथा सुनाउनुभयो। चन्द्रवंशी श्रीकृष्णको कथा संक्षेपमै भन्नुभयो।

कृष्णकथा योगी र भोगी दुवैलाई आनन्द दिन्छ, शुकदेवजी महायोगी हुनुहुन्छ। अत्यन्त ध्यानका कारणले लाएको लुगाको ख्याल छैन। उहाँ कृष्णको कथामा पागल हनुभएको छ।

परीक्षित् फेरि भन्नुहुन्छ—'तपाईंले त्यसो तर सर्वस्व त्याग्नुभएको छ, तर कृष्णकथालाई त्याग्न सक्नुभएन। तपाईंले आफ्ना पिताजीलाई पनि भनिदिनुभएको थियो न तपाईं उहाँको पुत्र हुनुहुन्छ न उहाँ तपाईंको पिता। तपाईंले पिताजीलाई त्यागिदिनु भयो तर कृष्णकथालाई त्याग्न सक्नुभएन। तपाईंका निमित्त पनि यो कथा आनन्ददायिनी छ।'

शुकदेवजी जस्ता वीतरागी साधु पुरुषले पनि कृष्णकथाको मोह छोड्न सक्नुभएन। महापुरुषहरूलाई लाग्दछ जबसम्म तप गरिरहन्छन् तबसम्म चाहिँ ठीक छ तर आसनबाट उठेपछि कहिले मन भाग्न लाग्दछ त्यसको खबरसम्म नपाउने हुन्छन्।

मनलाई निर्विषयी बनाऊ। त्यसलाई कृष्ण लीलामा उनिराख। चिन्तन गर्नु छ भने कृष्णलीलाको चिन्तन गर। मनलाई निर्विषयी बनाऊ भन्ने आदेश वेदान्तले पनि दिन्छ। यो बड़ो कठिन काम छ। यसैले वैष्णव भन्दछन्—'मनलाई प्रतिकूल विषयहरूमध्येबाट हटाएर अनुकूल विषयहरूमा जोड़िदेऊ।'

उता वेदान्तीहरू भन्छन्—जब आत्मालाई बन्धन छैन भने मुक्तिको प्रश्न चाहिँ कसरी उठ्न सक्छ? वैष्णवहरूले भगवान्‌को सेवामा यस्तो जो आनन्द पाउँछन् मुक्तिको इच्छा पनि उनीहरू गर्दैनन्।

योगी जबसम्म आँखा चिम्लिएर समाधिमा बस्दछ तबसम्म तिनको मन स्थिर हुन्छ तर योगावस्थामा जागृत भएका खण्डमा आँखा खुल्नासाथ उनको मन चञ्चल भएर सांसारिक

विषयहरूमा भुलिजान्छ। ऋषि विश्वामित्रले आँखा चिम्लिएर साठी हजार वर्ष तपश्चर्या गरे तर आँखा खुल्नासाथ मेनकाको मायामा भुलिगए।

ए हेर, खुला आँखा र खुला कान पनि समाधिमा लागे त्यही समाधि साँचो समाधि हो।

साधु हो, सहज समाधि सजिलो छ।

समाधि दुइ प्रकारका छन्—जड़ र चेतन। जड़ समाधि त्यो हो जसमा योगी मनलाई बलपूर्वक वशमा राख्न खोज्छन्। मनमा यस्तो बलात्कार गर्नु कुनै राम्रो कुरा भएन। त्यस्ता योगी कहिले रोगी पनि बन्न सक्छन्। त्यसै कारणले हठयोगको निन्दा गरिएको छ। हठयोगीलाई भक्तिको सहारा भएन भने उसको योग निरर्थक हुन्छ।

मनमाथि बलात्कार गर्नुभन्दा त्यसलाई प्रेमसँग संझाई-बुझाई वशमा गर्नु असल हो।

मन सज्जन छ। मनको कुनै सत्ता छैन। मन आत्माको आज्ञामा छ। आत्माको आदेशानुसार मनलाई काम गर्नुपर्छ। मनलाई शास्त्रमा नपुंसक भनेको छ। आत्माको सत्ता र आज्ञानुसार मात्र मन दौड़न सक्छ। योगी मनलाई बलपूर्वक ब्रह्मरन्ध्रमा स्थापित गर्छन्। त्यस समयमा उनको शरीर जड़ हुन जान्छ। जड़ समाधिमा शरीरको भान रहन पाउँदैन।

जड़ समाधिको तुलनामा चेतन समाधि श्रेष्ठ छ।

योगीहरूको समाधि चेतनसमाधि हो। तिनीहरू कान छोपेर र आँखा चिम्लिएर बस्दैनन्। तिनीहरू खुला कान र खुला आँखाले मात्र कृष्णाको ध्यानमा तन्मय हुन्छन्। उनीहरू आफ्नो कान र आँखामा श्रीकृष्णालाई राख्दछन्। यिनैलाई देखेर उद्धव सोझो ( सरल ) बनेका थिए।

यी गोपिनीहरू खुला आँखाबाट पनि समाधि लाउन सक्छन्। जहाँ-जहाँ उनको दृष्टि पुग्छ वहाँ-वहाँ उनलाई कृष्णकै दर्शन हुन्छ।

**यत्र यत्र मनो याति तत्र तत्र हि माधवः।**

समाधि यस्तो सजिलो हुनुपर्छ। यसैले उद्धवजीको निर्गुण निराकार ब्रह्मको आराधनाको कुरा सुनेर गोपिनीहरूले भनेका थिए—'हामी खुला आँखाले सर्वत्र साकार ब्रह्म श्रीकृष्णको दर्शन गर्छौं।' त्यस कारण साकार ब्रह्मलाई छोड़ेर तिम्रो निराकार ईश्वरको ध्यान-चिन्तन किन गर्ने ?

उद्धवजी जसले खुला आँखाबाट ब्रह्मको दर्शन पाउन सक्दैनन् भने उनले आफ्नो आँखा चिम्लिएर निधारमा ब्रह्मको दर्शन पाउने कोशिश गर्छन्। हामी तर श्रीकृष्णको दर्शन, चिन्तन र ध्यान गर्दछौं।

आँखा चिम्लिनासाथै जो समाधिस्थ हुन सक्छ, उसका निमित्त संभव छ जो आँखा खोलेपछि उसको मन संसारमा अल्मलियोस्।

गोपिनीहरू गृहस्थ भएर पनि महापरमहंस हुन्। व्रजवासी उत्तमोत्तम परमहंस हुन्। जो सबै बाह्य विषयहरूबाट अलिप्त भएर कृष्णप्रेममा तन्मय हुन्छन्।

श्रीकृष्ण महागृहस्थ पनि हुनुहुन्छ र महासंन्यासी पनि। घरमा बस्दा पनि संन्यासी जीवन कसरी बिताउन सकिन्छ, त्यो श्रीकृष्णले बताउनुभएको छ। उहाँ तेह्र पटक भोजन गर्नुहुन्छ र सोह्र हजार स्त्रीहरूका साथ बस्नुहुन्छ र पनि अच्युत, युवा हुनुहुन्छ। उहाँ कहिल्यै बूढो हुनुभएन, जीर्ण हुनुभएन। उहाँ अर्जुन र दुर्योधन दुवैलाई समान दृष्टिले हेर्नुहुन्थ्यो र उहाँले दुवैलाई सहायता पनि दिनुभएको थियो। यदुवंश र सुवर्णद्वारिकाको विनाश भयो र पनि उहाँको मनोशान्ति अविचल रह्यो।

भागवत परमहंसहरूको संहिता हो।

परीक्षित् भन्नुहुन्छ—'महाराज, तपाईं वीतरागी योगी हुनुहुन्छ र पनि कृष्ण-कथा छोड्न सक्नुभएन।'

कथाले मानिसको थकाइलाई मार्दछ। भगवान्‌को कथाले आतुरता बढाउँछ। बारम्बार यसलाई सुनेर पनि तृप्ति हुँदैन।

श्रीखण्डजस्तो मिष्ठान्नको आहार गरेपछि, विषयसुखहरूको उपभोगपछि तृप्ति हुन्छ र अरुचि पनि तर त्यो तृप्ति र अरुचि कायम रहँदैन। काम भएदेखि तब सफल भइहालियो।

महाराज, मलाई कृष्णकथा सुन्ने इच्छा छ। विस्तारपूर्वक सुनाउनुहोस्। प्रभुको बाललीला र अन्य सबै लीला मलाई सुनाउनुहोस्। तपाईंका चरणहरूमा बारंबार प्रणाम गरेर प्रार्थना गर्छु।

शुकदेवजी—राजन्, धेरै दिनदेखि तपाईंले केही खानु-पिउनु भएको छैन। पहिले केही खानु होस्। अनि कथा सुनौंला।

परीक्षित्—'केही दिनपहिले म भोक र प्यासले गर्दा व्याकुल हुने गर्थें। एकपटक शिकार खेल्न वनमा गएको थिएँ। त्यहाँ भोक र प्यासको व्याकुलताको कारणले मैले ऋषिको अपमानसम्म गरिदिएको थिएँ। तर तपाईंसँग कथा सुनेपछिबाट मलाई न भोकले सताएको छ न प्यासले। बस् अब तपाईं कथा मात्र सुनाउँदै रहनुहोस्।'

शुकदेवजी—कृष्णकथाको निमित्त तपाईंको प्रेम देखेर मलाई बड़ो आनन्द लाग्यो। राजा, तपाईंकै कारण मलाई पनि कृष्ण-कथा-गङ्गाको अमृतपान गर्ने लाभ पाएँ। जब देखि कृष्णकथारूपी गङ्गाको प्राकट्य भएको छ तबदेखि भागीरथी गङ्गाको महत्त्व कम भएको छ। भागीरथी गङ्गामा स्नान गर्नाले शारीरिक मलीनता हट्दछ मानसिक मलीनता तर कृष्णकथाले मात्र हटाउन सक्छ। कृष्ण-कथा जहाँ चाहे पनि प्रकट हुनसक्छ तर ती भागीरथी गङ्गा अन्य कुनै स्थानमा प्रकट हुन्नन्।

शुकदेवजी राजाको आभार मान्नु हुन्छ, उनकै कारणले कृष्ण-स्मरण र दर्शनको लाभ भयो।

महात्मा भन्दछन् नवम स्कन्धसम्मको कथा शुकदेवजीले सुनाउनु भयो र दशम स्कन्धको कथा स्वयं श्रीकृष्णले सुनाउनु भएको छ।

## वैयासकिः स भगवान् (भवतासह)

शुकदेवजी राधाकृष्णसङ्ग प्रार्थना गर्नुहुन्छ हृदयमा बसेर यहाँहरूद्वारा कथा होस्।

ज्ञानी पुरुष मृत्यु टार्नलाई होइन, तर सुधार्ने प्रयत्न गर्छन्। मृत्युलाई सुधार्दछन् कृष्ण-कथा, कृष्ण-नाम, कृष्ण-भक्तिले। जसको मृत्यु सुध्रिन्छ त्यसले दोस्रोपटक जन्मलिनु पर्दैन।

वैर र वासनाले जीवनलाई बिगार्दछन्। यी हटेपछि जीवन र मृत्यु उज्यालो हुन्छ। वैर र वासनालाई मृत्युभन्दा पहिल्यै हटाइदेऊ। अन्यथा मृत्यु बिग्रिन्छ। तिमी वैरीलाई वन्दना गर। फेरि पनि उसले वैर कायम राख्यो भने उसको पापको साझेदार तिमीले बन्नु पर्दैन।

दशम स्कन्धमा निरोधलीला छ। ईश्वरमा मनलाई लय गर्नु भनेकै निरोध हो।

श्रीकृष्णलाई आफ्नो हृदयमा राख वा श्रीकृष्णको हृदयमा बस अनि मात्र मनको निरोध हुने छ। मनको निरोध भनेको मुक्ति हो।

पृथ्वीमा दैत्यहरूको उपद्रव बढ्दै गयो, मानिस दुःखी भए, पाप बढ्यो। पृथ्वीले यी सब सहन सकिनन् र ब्रह्माजीकहाँ शरण लिइन्। ब्रह्मादिदेव ब्रह्मलोकमा नारायणका समीपमा आए र पुरुष सूक्तद्वारा प्रार्थना गर्न थाले—'नाथ, अब कृपा गर्नुहोस्। तपाईंले अवतार लिनुहोस्।' भगवान्‌ले ब्रह्माजीलाई भन्नुभयो—'केही समयमा म वसुदेव-देवकीको घरमा प्रकट हुनेछु। मेरो सेवाका निमित्त तिमी सबै देव पनि अवतार लिनू।' ब्रह्माले आकाशवाणी सुनेर सबै देवहरूलाई सान्त्वना दिए।

यता मथुरामा विवाह गर्न वसुदेव आए। वसुदेव-देवकीको विवाह भयो। स्वयं कंसले वरवधूको रथ चलायो।

कंसले वसुदेवलाई धेरै दुःख दियो भने भगवान्‌को प्राकट्य छिट्टै हुने छ। भक्तहरूको दुःख भगवान्‌बाट सहिँदैन। पापीको दुःख भगवान् साक्षीरूपमा देख्नुहुन्छ र सहिदिनु हुन्छ तर पुण्यशालीको दुःख उहाँबाट सहिँदैन।

आकाशवाणी सुनियो—'हे कंस, देवकीको आठौं सन्तानले तेरो हत्या गर्ने छ।'

कंसले आकाशवाणी सुन्यो र तरवार लिएर देवकीको हत्या गर्न तयार भयो। वसुदेवजी उसलाई संझाउन लाग्नुभो—'जो आएको, त्यो जानेछ। जसको जन्म भएको छ उसको मृत्यु पनि होला। यसैले महात्माजन मृत्युलाई पर सार्दैनन्, सुधार्ने कोशिश गर्छन्। मृत्युको निवारण अशक्य छ। *''शीर्यते इति शरीरम्।''* शरीरको नाश तर हुन्यै हो। वैर नगर। वैर वा सुखको वासनाले मृत्यु भ्रष्ट हुन्छ। वैर वासनाको त्याग गरेर प्रभुस्मरण गर्दै जो मर्छ त्यसको मृत्यु असल हुन्छ। देवकीको हत्या गरेर तिमी अमर हुन सक्ने होइनौ र देवकी तिम्रो मृत्युको कारण पनि होइनन्।'

कंस—'अँ, त्यो चाहिँ हो।'

वसुदेव—'त्यसो हुनाले म देवकीका सबै सन्तान तिम्रा जिम्मा लाउँदै गर्नेछु।'

कंसले पनि सोच्यो 'यो पनि ठीक हो। स्त्रीहत्याको पापबाट चाहिँ बाँच्नेछु।' कंसले भन्यो—'हुन्छ, म देवकीको हत्या गर्नेछैन।'

वसुदेव, शुद्ध सत्त्वगुण स्वरूप हुन्। विशुद्ध चित्त भनेकै वसुदेव हुन्। देवकी निष्काम बुद्धि हुन्। यी दुवैको मिलन भएपछि भगवान्को जन्म हुन्छ।

वसुदेव-देवकीको घर आए। प्रथम बालकको जन्म भयो। वसुदेवले बालक कंसलाई दिए। कंसको हृदय पग्लियो 'यस बालकलाई मारेर मलाई केही लाभ छैन। आठौं बालकले मलाई मार्ने हो। यो चाहिँ पहिलो हो। म यसलाई मार्दिनँ। सातै बालकहरूलाई आफ्नै साथमा राख्नु। मेरो काल हुने आठौं बालक मलाइ दिनू।' वसुदेवजी बालक लिएर फर्किए।

नारदजीले सोच्नुभयो, 'यदि कंस यस्तो असल गर्न लाग्छ भने पाप कसरी गर्ला र यसले पाप गरेन भने भगवान्ले अवतार लिने हुनुभएन। कंसको पाप बढ़ेन भने त्यो चाँड़ै मर्ने पनि भएन। पाप नगर्नेलाई भगवान् छिटै मार्दा पनि मार्नुहुन्न।'

ईश्वर कसैलाई पनि मार्नुहुन्न। मनुष्यलाई उसको पापले मात्र मार्छ। सदा दुइ थोकबाट डराइराख—पापबाट र ईश्वरबाट।

नारदजीले कंसकहाँ आएर भन्नुभो—'कंस, तिमी तर बड़ो सोझो रहेछौ। देवता तिमीलाई मार्न सोचिरहेछन्। वसुदेवको बालकलाई छोड़ेर तिमीले असल गरेनौ। कुनै पनि बालक आठौं हुन सक्छ। यदि आठौं बालकलाई पहिला मानौं भने त्यो पहिला बालक आठौं हुनेछ।'

कंस—'तब के म सबै बालकहरूको हत्या गर्दै रहूँ?'

नारदजीले सोच्नुभयो, 'यदि म सम्मति दिऊँ भने मलाई पनि बालहत्याको पाप लाग्नेछ। अरूलाई पापको प्रेरणा दिने पनि पापी हो।'

नारदजी—'राजन्! म तिमीलाई सावधान गर्न भनी आएको हुँ। तिमीलाई जे ठीक लाग्छ त्यही गर्दै रहू।'

नारदजी 'नारायण, नारायण' भन्दै हिंड्नुभयो। नारदजीले कंसको पापलाई बढ़ाइदिने हेतुले मात्र यस्तो गड़बड़को कुरा गरिदिएको हो।

कंसेल वसुदेव-देवकीलाई झ्यालखानामा थुनिदियो। विना अपराधनै बन्धनमा परे पनि उनले मानिलिए शायद ईश्वरको यही इच्छा रहेछ। यो भगवान्कै कृपा हो जो उनको नाम-स्मरण गर्नलाई एकान्तवास पाइयो।

अतिशय दुःखलाई पनि प्रभुको कृपा भनी संझनुपर्छ।

कंस अभिमान हो। उसले जीव मात्रलाई थुनिरहन्छ। सबै जीव संसाररूपी कारागृहमा बन्द छन्। हामी सबै बन्दी हौं।

वासुदेव-देवकी कारावासमा पनि जागृत थिए, हामी चाहिँ तर सुतिमात्र रहन्छौं। हाम्रो जीव कारागृहको एकान्तमा जागृत रहेको अपेक्षा सुतिमात्र रहन्छ। संसारमा जो जाग्रत रहन्छ, उसैले भगवान् पाउन सक्छ।

जो जागत है वह पावत है।
जो सोवत है वह खोवत है॥

श्री भगवान्का निमित्त जो जागा हुन्छ, उसैलाई मात्र भगवान् भेटिनुहुन्छ। कबीरदासजीले भनेको छ—

सुखिया सब संसार है, खावै अरु सोवै।
दुखिया दास कबीर है, जागै अरु रोवै॥

कबीर उनका निमित्त जागे र रोए अनि उनलाई भगवान् भेटिनुभयो। मीराबाई पनि उनका निमित्त जागिन् र रोइन् अनि उनलाई भगवान् भेटिनुभयो। कंसले देवकीका छ सन्तानको हत्या गरिदियो।

मायाको आश्रय नलिईकन भगवान् अवतार लिन सक्नु हुन्न। शुद्ध ब्रह्मको अवतार हुन सक्दैन। ईश्वर शुद्ध स्वरूपबाट आएमा जसले पनि उहाँको दर्शन पाउन सक्ने हो र उसको उद्धार पनि हुने हो। दुर्योधनले द्वारिकाधीशको दर्शन गरेको थियो तर त्यो मायाबाट आवृत प्रभुको दर्शन भएको थियो। जसले निरावृत ब्रह्मको साक्षात्कार गर्न पाउँछ उसले मुक्ति पाउँछ। मायावृत ब्रह्मको दर्शनको मुक्ति हुँदैन। संभव छ, भगवान्को अवतारको समयमा हामी कीरा, फटेंग्रा हौंला। हामीले भगवान्को दर्शन गरेका हौंला, तर पनि आजसम्म हाम्रो उद्धार हुन पाएको छैन।

योगमायाको आगमन भयो, उनले सातौं गर्भलाई रोहिणीको पेटमा स्थापित गरिदिइन्। रोहिणी सगर्भा भइन् र बलराम महाराज भाद्र शुक्ल एकादशीका दिन प्रकट भए। बलदेव शब्द ब्रह्मको स्वरूप हो। पहिले शब्दब्रह्म आउँछ अनि पछि परब्रह्म। बलरामको आगमन भएपछि परब्रह्म गोकुलमा आउँछन्।

बलरामजीले आँखा खोल्नुभएन। जबसम्म मेरो कृष्ण आउँदैन म आँखा खोल्दिनँ। यशोदाजी पूर्णमासीसँग सातो बोलाउनलाई बिन्ती गर्छिन्। पूर्णमासी भन्दछिन् 'यसले तर कसैको ध्यान गरिरहेछ। यस बालकको कारण तिम्रो घरमा बालकृष्णको सवारी हुनेछ।'

यशोदाजीले सबैलाई प्रसन्न पारिन्। यश सबैलाई दिएर अपयश आफ्नासाथ राख्यौ भने कृष्ण प्रसन्न हुनुहुनेछ। जीव तर यस्तो दुष्ट छ जो यश आफ्नो साथमा राख्छ र अपयश अर्काको टाउकोमा पारिदिन्छ।

यशोदा— *"यशः ददाति इति यशोदा।"* जसले अरूलाई यश दिन्छिन्, उनी यशोदा हुन्।

नन्द—जसले सबैलाई आनन्द दिन्छ, ऊ नन्द हो।

विचार, वाणी, व्यवहार र सदाचारबाट जसले अरूहरूलाई आनन्द दिन्छ उसैको घरमा भगवान्‌को सवारी हुन्छ। जसले सबैलाई आनन्द दिन्छ, उसैलाई परमानन्द पाइन्छ।

नन्दबाबाले सबैलाई आनन्द दिनुभयो। यसैले उहाँको घरमा परमानन्द प्रभु आउनुभयो।

सबै गोपाल शाण्डिल्य ऋषिकहाँ आए। 'महाराज, केही यस्तो गर्नुहोस्, नन्दजीको घरमा पुत्र जन्मियोस्। शाण्डिल्यको आदेशानुसार सबैले एकादशीको व्रत गर्न थाले।'

एकादशी महाव्रत हो। एकादशीका दिन पान-सुपारी खान या सुत्नु पनि निषिद्ध छ। अलिकति फलाहार मात्र गर्न सकिन्छ। कति मानिस साबुदाना आदि पेटभरि खान्छन्। आलु आदि खानाले अन्न दोष चाहिँ हुँदैन तर एकादशीव्रतको पुण्य पनि पाईंदैन। भोलि के खाने भनेर विचार गरी एकादशीको व्रत गर्नाले व्रत भंग हुन्छ। एकादशीका दिन चाहिँ भगवत-स्मरण मात्र गर्नुपर्छ।

सबै ग्वालबालको यही इच्छा थियो परमात्मा प्रसन्न भएर नन्दबाबाको घरमा पुत्र जन्म होस्। भगवान्‌को गोकुलमा आगमन होस् भनेर भाद्रपद शुक्ल एकादशीबाट सबै गोकुलवासी निर्जला एकादशी आदि व्रत गर्न थाले। त्यसैले भगवान् गोकुल आउनु भो।

बालकहरूले पनि व्रत गरे। उनीहरू भन्दछन् 'हाम्रै व्रतले गर्दा कृष्ण आए। कन्हैया तर सबैका हुन्। नन्दमहोत्सवमा सारा गाउँ नाचिरहेको थियो। सबैलाई कस्तो लाग्थ्यो भने कन्हैया उनीहरूकै हुन्, किनभने सारा गाउँले व्रतमा थिए।'

शुकदेवजी वर्णन गरिरहनु भएको छ—

यता देवकीले आठौं गर्भ धारण गरिन् तब उता कंसले सेवकहरूलाई सतर्क गरायो। 'मेरो काल आइरहेछ।'

सेवकहरूले भने—'हामी सदा ब्यूँझिमात्ररहन्छौं। हामी सावधान रहन्छौं। बालकको जन्म हुनासाथ तपाईंलाई समाचार दिनेछौं।'

देवगण देवकी—गर्भवासी भगवान् नारायणको प्रार्थना गर्छन्। 'तपाईं' सत्यस्वरूप त्रिकाल बाधित हुनुहुन्छ, आफ्नो वचन सत्य गर्नका निमित्त आइरहनु भएको छ। अनेक विद्वानहरूको अधोगति हामीले देखेको छ। तर जो व्यक्तिले तपाईंका लीलाहरूको स्मरण र तपाईंको नाउँको जप गर्दछ, त्यसको कहिल्यै अधोगति हुँदैन। नाथ, कृपा गर्नुहोस्।

देवहरूले देवकीलाई पनि आश्वासन दिए। नौ महिना परिपूर्ण हुने वेला आयो। मन, बुद्धि, पञ्चप्राण आदिको शुद्धि भएको छ। यी सबैको शुद्धि भएपछि परमात्माको दर्शनको आतुरता बढ्दै जाँदैछ। ईश्वर दर्शनविना चैन छैन। त्यस कारण जीव छटपटाउँछ, अतिशय आतुर हुँदै गइरहेछ र त्यसैले भगवान् अवतार धारण गर्नुहुन्छ।

जब परम शोभायमान र सर्वगुणसम्पन्न घड़ी आयो त्यस बेला चन्द्र रोहिणी नक्षत्रमा आए, दिशाहरू स्वच्छ भए, आकाश निर्मल भयो, नदीका पानी निर्मल भए, वनमा चरा र भँवराहरू गुनगुनाउन लागे, शीतल, सुगन्धित, पवित्र हावा चल्न थाल्यो, महात्माहरूको मन प्रसन्न भयो। स्वर्गमा दुन्दुभि बज्न लाग्यो, मनि र देवगण आनन्दसाथ पुष्पवृष्टि गर्न लागे र परम पवित्र समय आइपुग्यो। भाद्रमासको कृष्णपक्ष अष्टमीको मध्यरात्रिको समय भएपछि कमलनयन चतुर्भुज नारायण भगवान् बालकको रूप लिएर वसुदेव-देवकीका समक्ष प्रकट हुनुभयो।

भगवान्‌ले आफ्ना श्रीहस्तहरूमा शङ्ख, चक्र, गदा र पद्म धारण गर्नुभएको छ, चारैतर्फ प्रकाश छरियो। उहाँको चतुर्भुज स्वरूपले यो संकेत गर्‍यो जो उहाँको चरणको शरण लिनेहरूको चारै पुरुषार्थ सिद्ध हुने छ।

जो भक्त अनन्यरूपले मेरो आराधना गर्छ त्यसको धर्म, अर्थ, काम, मोक्ष चारै पुरुषार्थ म सिद्ध गर्छु र त्यसको हरप्रकारबाट रक्षा गर्दछु।

सम्पत्ति र सन्ततिको सर्वनाश भएको थियो र पनि वसुदेव-देवकी दीनतापूर्वक ईश्वरको आराधना गर्नु हुन्छ। प्रभुले भन्नुभयो—'मेरो चतुर्भुज स्वरूपको दर्शन गर्नुहोस् र एघार वर्षसम्म मेरो ध्यान गर्दै रहनुहोला। म अवश्य तपाईंका समक्ष आउनेछु।'

भगवान्‌को चतुर्भुजस्वरूप अदृश्य भयो र दुइ साना-साना हात भएका बालकृष्ण प्रकट भए।

बाल कन्हैयाको जय ! प्रभु प्रत्यक्ष प्रकट हुनु भएर पनि ध्यानको आवश्यकता परिरहनेछ।

ज्ञानदीप प्रकट भएपछि, एकाध इन्द्रिय-द्वार खुला भएमा विषयरूपी हावा छिर्दछ र ज्ञानदीपलाई निभाइदिन्छ। यस ज्ञानमार्गमा कैयन् बाधाहरू आउँदै रहन्छन्।

भक्तिमार्ग बड़ो सरल छ। प्रत्येक इन्द्रियलाई भक्तिरसमा भिजाइदेऊ अनि विषयरूपी हावाले दुःख दिनेछैन।

जब एघार इन्द्रियहरू ध्यानमा एकाग्र हुन जान्छन्, तब प्रभुको साक्षात्कार हुन्छ, यसै-कारणले गीताजीमा पनि एघारौं अध्यायमा अर्जुनलाई विश्वरूपको दर्शन हुन्छ।

प्रभुले भन्नुभयो—'मलाई गोकुलमा नन्दबाबाकहाँ घरमा छोड़ेर आउनुहोस्।' वसुदेवले उहाँलाई टोकरीमा बसाल्नुभयो। अब बाहिर पो कसरी लैजाने ? कारागृहको ढोका बन्द छ र बन्धन पनि छिनालेको छैन। तर जसै टोकरी शिरमा पर्‍यो सारा बन्धन छिनिए।

शिरमा बुद्धि छ। जब बुद्धि ईश्वरको अनुभव गर्छ तब संसारका सारा बन्धन छुट्छन्। जसले भगवान्‌लाई आफ्ना मस्तकमा राज गराउँछ उसका निमित्त कारागार मात्र होइन मोक्षको द्वार पनि खुल्दछ। हात, पाउका बन्धन छिनिन्छन्, नदीको बाढ़ी पनि रोकिन्छ। जसको शिरमा भगवान् हुनुहुन्छ, त्यसलाई बाटामा विघ्नबाधाले दुःख दिन सक्दैन।

घरमा आउनाले मात्र हुँदैन, मनमा भगवान् आएपछि मात्र बन्धन टुट्न जान्छ।

जो मानिस वसुदेवको जस्तो श्रीकृष्णलाई आफ्ना मस्तकमा राज गराउँछ, त्यसका सबै बन्धन छिनिन्छन्। कारागृहको सांसारिक मोहको बन्धन छिनिन्छन्। ढोका खुल्दछन् अन्यथा यो सारा संसार मोहरूप कारागृहमै सुतेको हुन्छ।

वसुदेव कारागृहभित्रबाट बाहिर आए। बलराम दगुर्दै आए। शेषनागको रूपमा बालकृष्णमाथि छाता ओढाए। यमुनाजीलाई अत्यन्त आनन्द आयो। दर्शनको तृप्ति पाइरहेकी थिइन्। 'मेरो प्राणनाथसँग भेट्नु छ।' यमुनाजीको जलस्तर बढ्यो। प्रभुले लीला गर्नुभयो। टोकरीबाट बाहिर आफ्नो गोड़ा निकालिदिनुभयो। यमुनाजीले चरण स्पर्श गरिन् र कमल चढ़ाइन्। प्रथम दर्शन र मिलनको आनन्द यमुनाजीलाई दिइयो। बिस्तार-बिस्तार पानी कम भयो।

वसुदेव गोकुलमा आइपुगे। योगमायाको आवरणवश सारा गाउँ गाढा निद्रामा सुतिरहेको थियो। वसुदेवले श्रीकृष्णलाई यशोदाको काखमा राखिदिए र बालिकास्वरूपा योगमायालाई उठाइलिए। वसुदेवले सोचे—'अझ पनि उनको प्रारब्धकर्म बाँकी रहेको छ, त्यसैले भगवान्लाई छोड़ेर मायालाई अँगालो हाल्ने वेला आएको छ।'

वसुदेव योगमायालाई टोकरीमा बसाएर फर्किई कारागृह आइपुगे।

ब्रह्मसम्बन्ध भएकाले सबै बन्धन छिनेको थियो। अब माया आई तब बन्धन पनि आयो। वसुदेवले गोकुलबाट मायालाई आफ्नो शिरमा बसाएर ल्याएकाले बन्धन आइपुग्यो र कारागृहको ढोका पनि बन्द भयो। माया बन्धनकर्ता हो। भगवान्को आज्ञाको कारणले वसुदेवले बन्धनलाई स्वीकार गरे।

अब कारागृहमा देवकीको काखमा सुतिरहेकी योगमाया रुन थालिन्। सेवकहरूले तुरुन्तै कंसलाई सन्तान जन्मेको समाचार दिए। कंस दगुर्दै आइपुग्यो, 'कहाँ छ मेरो काल? मलाई त्यसलाई सुम्पिदेऊ।'

कंसले योगमायाको गोड़ा समातेर उसलाई ढुंगामा बजार्न थाल्यो। तर माया कहिल्यै कसैको हात परी र? आदिमायाले कंसकै शिरमा एकलात जमाइदिइन् र हातबाट फुत्किएर आकाशगामी भइन्। आकाशमा उनले अष्टभुजा जगदम्बा भद्रकालीको रूप धारण गरिन्। उनले कंसलाई बोलाएर भनिन्—'रे पापी, तेरो काल चाहिँ अवतरित भैसकेको छ र सुरक्षित छ।'

कंसले पश्चात्ताप गर्दै वसुदेव-देवकीसँग आफ्नो अपराधको क्षमा माग्यो।

यता जन्माष्टमीका दिन नन्दजीले बाह्र बजेसम्म जागरण गरे। शाण्डिल्यले भनेकाले सबै सुतेका थिए र गाढ़ा निद्रामा परेका थिए। बालकृष्ण जब नन्दबाबाका घरमा आएका थिए तब नन्दबाबा सुतेका थिए। नन्दबाबाले स्वप्नमा देखे—'कैयौं ठूला-ठूला ऋषिमुनि उनका आँगनमा आएका छन्, यशोदाजीले शृङ्गार गरेकी छन् र काखमा एउटा सुन्दर बालक खेलिरहेछ। त्यस बालकलाई उनी हेरिरहिछिन्। शिवजी पनि त्यस बालकको दर्शनलाई आउनुभएको छ।'

नन्दबाबा बिहान ब्यूँझेपछि मनमा अनेकन् सङ्कल्प-विकल्प गर्दै गौशालामा आए। उनी स्वयं गौसेवा गर्दथे। गाईहरूको जसले प्रेमपूर्वक सेवा गर्छ त्यसको वंश नष्ट हुँदैन।

नन्दबाबाले प्रार्थना गर्नुभयो—हे नारायण ! दया गर्नुहोस्। मेरा घर गाईहरूको सेवक गोपाल कृष्णाको जन्महोस्।

त्यसै समयमा बालकृष्णले लीला गरे। पहेंलो भोटो लाएका, कस्तूरीको तिलक धारण गरेका बालकृष्ण घुँडाका सहाराले हिँड्दै गौशालामा आए। यी बालकलाई नन्दजीले देख्नुभयो तब उहाँको मनमा भयो 'अरे यो त्यही बालक हो जसलाई मैले आज स्वप्नमा देखेको थिएँ।' बालकृष्णले नन्दबाबालाई भन्नुभयो—'बाबा, म तपाईंका गाईको सेवा गर्न भनी आएको छु।'

गौशालामा आएका कृष्णलाई नन्दजीले प्रेमपूर्वक हेर्दै स्तब्ध हुनुभयो। उहाँलाई देहभानसम्म पनि रहेन। बालकृष्णको दर्शनले उहाँ समाधिस्थ जस्तो हुनुभयो। उहाँलाई केही थाहा भएन ब्यूँझिरहनु भएको छ वा सुतिरहनु भएको छ।

सुनन्दाले यशोदाको काखमा बालकृष्णको दर्शन गरिन् र उनी दौड़िँदै गौशालामा दाइलाई खबर दिन आइन्। 'दाजु ! दाजु भाइ भएको छ।'

आनन्दै आनन्द भयो। श्रीकृष्ण हृदयमा आउनुभयो।

नन्दजीले यमुनाजीमा स्नान गर्नुभयो। आज जन्मोत्सवको उपलक्ष्यमा स्नान गर्नु थियो। उनलाई सुवर्णको आसनमा राखियो। शाण्डिल्यमुनिले उनलाई अलिकति दान गर्नू भने। नन्दजीले भने—'जे चाहिन्छ लैजान सक्नुहुन्छ।' नन्दबाबाले बड़ो उदारतापूर्वक दान गरे। गाईहरूको दान दिइयो।

कतिवर्षसम्म तपश्चर्या गर्दा पनि महान् ऋषिमुनिहरूको काम नष्ट भएन। अभिमान निःशेष भएन र तिनीहरू सबै गोकुलमा गाईको अवतार लिएर आए। उनीहरूले सोचेका थिए ब्रह्मसम्बन्ध भएपछि उनीहरू निष्काम हुने छन्।

नन्दबाबाले दुइ लाख गाई दान गरे।

एक ब्राह्मणलाई दशहजार गाईहरू दानस्वरूप मिल्यो। उनले घरमा लिएर आए। सानो घर थियो। उनले घरको कुना-कुनामा गाईहरू बाँधे र गाई अझै बाँकी रहे। ती ब्राह्मणकी पत्नी बड़ी कर्कशा थिई। ऊ आफ्ना दुलहालाई भन्न लागी—'जसले जति चाहे पनि गाई देओस्, तर तिमीले सबै लिएर आयौ किन ? यति सारा गाई दिने को निस्कियो ?'

ब्राह्मण—अरे, तँलाई थाहै छैन क्या ? नन्दबाबाको घर पुत्ररत्न जन्मेको छ। उहाँले आज लाखौं गाईको दान दिनुभएको छ।

नन्दबाबाको घर पुत्रजन्मको कुरा सुनेर ब्राह्मणी आनन्दित भइ। पति-पत्नी आनन्दसाथ मानौं नाच्न लागे।

# नन्दके घर आनन्द भयो
# जय कन्हैया लालकी !

गाउँका एक-एक व्यक्तिलाई कृष्ण उनैका हुन् जस्तो लाग्यो। गाउँका सबै गोपिनीहरूमा कृष्ण जन्मको कुरा फैलियो तब सबै उहाँको दर्शनका निमित्त दौड़िँदै आइपुगे। मानौं नवधा भक्ति दौड़िँदै ईश्वरसँग भेट्न गइरहेका छन् जस्तो गरेर।

गोपिनीहरूको एक-एक अङ्ग कृष्णमिलन र कृष्णस्पर्शका निमित्त आन्दोलित भइरहेको थियो। उनका आँखाहरूले भन्न लागे—'हामीजस्तो भाग्यमानी कोही छैन। हामीलाई मात्र कृष्णदर्शनको आनन्द मिल्ने छ।' अनि हातहरू भन्छन्—'हामी भाग्यशाली छौं, हामी प्रभुलाई चढ़ाउँछौं।' त्यसै गरी गोपिनीका कानहरूले भने—'हाम्रो कारणले मात्र तिमीहरू भाग्यशाली भयौ किनभने कृष्ण प्राकट्यको समाचार हामीले सबैभन्दा पहिले सुन्यौं। हामी तर कृष्णको बाँसुरीवादन पनि सुन्नेछौं।' हृदयले भन्यो—'जबसम्म म पग्लिने छैन तबसम्म आनन्द आउने छैन।' गोड़ाहरू भन्छन्—'हजारौं जन्मदेखि हामी यौवन-सुख र धन सम्पत्तिका पछि लाग्दै आएका छौं र आज प्रभुदर्शनका निमित्त दौड़िहाल्यौं। अब जन्म-मृत्युको दुःखबाट छुट्कारा होला। सबैलाई आनन्दानुभव भइरहेको थियो।'

गोपिनीहरूका जुराबाट फूल तल झरिरहेछन् र भनिरहेछन्—'तिमीहरू कृष्ण दर्शनका निमित्त आतुरताले दौड़िरहेछौ। तिमीहरू भाग्यशाली छौ। तिम्रो शिरमा बस्न हामी योग्य छैनौं। हामी तर तिम्रा चरणमा निहुरेर तिम्रो चरणरजको स्पर्शबाट पवित्र हुनेछौं।'

यशोदाको काखमा खेलिरहेका सर्वाङ्ग सुन्दर बालकृष्णलाई गोपिनीहरू दहीले अभिषेक गर्न लागे। निर्धन गोपिनीहरू दूध र दही लिएर आएका छन्। कृष्णको दर्शन पाएपछि आनन्दावेशमा उनीहरूले आफूलाई बिर्सिदिए र स्वयंलाई दूध-दहीले नुहाउन थाले। सबै गोपिनीहरूको मन कृष्णले आकर्षित गरिदिनुभयो। हृदयमा आनन्दको पारावार उम्लिरहेछ। गोपिनीहरूले जति लिएर आएका थिए त्यसको दशगुना गरेर फर्काउनु छ। कसैलाई चाँदीको थाली दिइयो अनि कसैलाई चन्द्रहार। यशोदाजीले सोचिन् 'घरको सर्वस्वै किन नलुटियोस् तर सबैको आशीर्वाद र शुभेच्छा पाउनै पर्छ।' गोपिनीहरूले जे मागे पनि दिइयोस्।

आनन्दमा पागल गोपिनीहरू कृष्णको जय-जयकार गरिरहेछन्। एउटीले चाहिँ यतिसम्म भनी, 'यदि दिनु छ भने मलाई कृष्ण दिनुहोस्। यशोदाले उसलाई आफ्ना नजिक राखेर उसको काखमा कृष्णलाई बसाइदिइन्।' आनन्द-आनन्द-आनन्द !' हजारौं जन्मदेखि छुट्टिएको जीवले आज प्रभुसँग भेट गर्न पायो। ईश्वरसँग भेट भएपछि जीव आनन्दले झुम्न थाल्छ।'

पुरुषहरू चाहिँ सबै बाहिरै रहे किनभने गोपिनीहरू भित्र पुगेर आनन्दसाथ नाचिरहेछन्।

पुरुष अहंकार, अभिमानको रूप हो र स्त्री नम्रता, दीनताको। जो गोपीको जस्तो नम्र भएर जान्छ, उसलाई मात्र ईश्वरको राजसभामा प्रवेश पाइन्छ। अहङ्कारीलाई त्यहाँ प्रवेश पाइँदैन।

नन्दको घर—सबैलाई आनन्द दिनेहरूको घर—परमानन्द ( कृष्ण ) प्रकट हुनुभो। सबैको आशीर्वाद पाउन सक्यौ भने तिम्रो घरमा सर्वेश्वर आउनुहुनेछ। सबैको आशीर्वाद लिनु त्यसो तर बड़ो दुष्कर काम छ तर कसैको आह चाहिँ कहिल्यै सुन्नु नपरोस्। कसैबाट पनि कुभलो सुन्नु परेन भने तिमी पनि नन्दजस्तो हुन सक्नेछौ।

नन्दयति सर्वजनान् स नन्दः।

वाणी, वर्ताव, व्यवहार र विचारद्वारा जसले आनन्द दिन्छ, उही नन्द हो।

सबैको आदर गर। आदर दान उत्तमोत्तम दान हो। सबै जीवलाई शिवस्वरूप मानेर सबैको आदर गर।

ज्ञानीको लक्षण यो हो उसको व्यवहारद्वारा कसैलाई अशान्ति र उद्वेग हुन नपाओस्।

अरूहरूको वर्तावद्वारा आफ्नो मनलाई कहिल्यै अशान्त र विचलित नतुल्याउनु। नन्दबाबा सदा-सर्वदा आनन्दमा बस्नुहुन्थ्यो र अरूलाई पनि आनन्द दिनुहुन्थ्यो। यस्ता नन्दको घरमै परमात्माको सवारी हुन्छ।

सबैलाई आनन्द दिन नसकेमा कुनै ठूलो कुरा भएन तर दुःखचाहिँ कसैलाई नदेऊ। कोही दुःखी होओस् भनी यस्तो काम पनि नगर्नू।

आजकल मानिस वर्षमा एकपटक मात्र नन्दमहोत्सव मनाउँदछन्। तर प्रतिदिन नन्दमहोत्सव मनाउनुपर्ने हो। सँधै बिहान चार बजेदेखि साढ़े पाँच बजेसम्म नन्दमहोत्सव मनाइयोस्। 'उत्' को अर्थ हो 'ईश्वर' र 'सव' को अर्थ हो 'प्राकट्य'। ईश्वरको प्राकट्य भनेकै उत्सव हो। उत्सवमा धन या भोगादि होइन, प्रेम चाहिँ मुख्य हो।

मन्दिरमा होइन आफ्नै घरमा नन्द महोत्सव मनाइयोस्। जीवात्माको घर हाम्रो शरीरै हो।

नन्दमहोत्सवको अर्थ मिठाई बाँड्नु या दही-दूध फ्याँकिदिनु होइन। यसो गर्नाले चाहिँ आनन्दको अतिरेक हुने छ। उत्सव चाहिँ हृदयमा हुनुपर्छ, हृदयमा मनाउनुपर्छ। ईश्वरको प्राकट्य भएपछि मनुष्यलाई देहमा रहँदा-रहँदै पनि देहको भान रहन पाउँदैन।

देहधर्म बिर्सिएपछि मात्र उत्सव सफल हुन्छ। परमात्माको हृदयमा पग्लिदेऊ। हृदयमा परमात्माको प्राकट्य भएपछि भोक-प्यासले सताउँदैन। जसले प्रतिदिन नन्दमहोत्सव मनाउँछ, त्यसको सारा दिन आनन्दमा बित्दछ। निर्धन व्यक्तिले पनि यो उत्सव मनाउन सक्छ। यस उत्सवमा धन होइन मन चाहिँ प्रधान छ।

नन्दमहोत्सवको तयारी तर गर्नै पर्छ। आफ्नो शरीरलाई मथुरा र हृदयलाई गोकुल बनाऊ। अनि नन्दमहोत्सव मनायौ भने हृदय-गोकुलमा परमात्मा प्रकट हुनुहुनेछ। 'गो' को अर्थ हो इन्द्रियहरू र 'कुल' को अर्थ हो समूह। गोकुलको अर्थ हो—इन्द्रियहरूको समूह अर्थात् हृदय।

शरीर मथुरा हो, हृदय गोकुल, नन्द जीव हो। यस शरीलाई मथुरा बनाऊ। हृदय गोकुलमा ालकृष्णलाई पग्लाऊ। मनलाई आसक्तिबाट बचायौ भने शरीर मथुरा बन्ने छ र हृदय गोकुल। वित्र काया भनेको मथुरा हो।

महाप्रभुजीको आज्ञा छ। मथुरा र मधुरा एक हो। कामसुख र सम्पत्ति मद हो। यी दुइ दहरूबाट जसले आफूलाई बचाउँछ, त्यसैको शरीर मथुरा बन्न सक्छ। यी दुइ वस्तुहरूमा ंसेको छ मन। यस मनलाई बचाउनु छ। मनुष्य कैयौं पटक तनबाट चाहिँ कामसुखको त्याग र्छ तर मनबाट गर्दैन। तनबाट त्याग गर्ने तर मनबाट चाहिँ नगरे त्यो त्याग दम्भ मात्र हो। यी दुइ स्तुहरूमा माया छ। यी दुइहरूबाट मनलाई जोगाउनु छ।

दुइ वस्तुहरूलाई प्रभुले आसक्तिपूर्ण बनाएको छ—स्त्री र धन, यी दुइ आसक्तिहरूमा दजस्तो आकर्षण छ। यी दुइबाट मनलाई बचाउनुपर्छ।

सम्पत्ति, शक्ति र भोगको उपस्थिति भएर मनलाई बचाएर राख्नु चाहिँ सच्चा संयम हो। ान्यथा—

**धातूषु क्षीयमाणेषु शमः कस्य न जायते।**

आफ्नो युवावस्थामा जसले मनलाई अंकुशित गर्न सक्यो उही बुद्धिमान हो। वृद्धावस्थामा ाँखा तेजहीन भएपछि यदि कोही व्यक्तिले सिनेमा शौक छोड़िदिन्छ तब उसको के तारीफ? ाग-विलासद्वारा यौवनलाई भ्रष्ट नगर।

कुनै महात्माले भनेका छन्—केही मानिसको धन पत्थरको पूजामा जान्छ, बनियाँको धन सादमा जान्छ र जमीन्दारको धन विवाह आदिमा सकिन्छ। भक्ति सजिलो छैन। परस्त्री र रसम्पत्तिको आसक्तिलाई नछोड़ीकन भक्तिको आरम्भ हुन सक्दैन। प्रातःकालमा पूजा गरी सबै ंरा भयो भन्ने र भक्ति पनि भयो भन्ठान्ने यस्तो ठीक भएन। जबसम्म भोगबुद्धि छ, तबसम्म श्वरको भक्ति कसरी हुन पाउला? भक्तिमार्गमा भोग बाधक छ। मनलाई बिस्तारै-बिस्तारै क्तिमार्गतर्फ फर्काइदेऊ।

द्रव्यको चिन्तन गर्दै रहनाले द्रव्य पाइने होइन। द्रव्य र कामसुखको विचारसम्म छोड्यौ भने म्रो काया पवित्र हुनेछ। यमुना, भक्तिकै नाउँ हो। शरीरलाई मथुरा बनाउनु छ र हृदयलाई ाकुल अनि भक्ति-यमुनाको किनारमा बस्नुपर्छ। यमुनाको, भक्ति किनारा कहिल्यै नछोड्नु, ौबीस घण्टा भक्ति तटमा बस्यौ भने तिम्रो शरीर मथुरा र हृदय गोकुल बन्न पाउनेछ।

जबसम्म मनमा मत्सर रहने छ शरीर मथुरा हुन पाउँदैन। मत्सरले तर विद्वान् धार्मिक दुवैलाई ताउँछ।

परमात्माको राज्यमा अन्याय छँदैछैन। जे पनि भइरहेछ ठीकै भइरहेछ। मनुष्यको शासनमा ाप छ, ईश्वरको शासनमा पाप छैन।

आजकलका मानिसहरू शरीरको अपेक्षा मनबाट ज्यादा पाप गर्छन्।

यस शरीरलाई मथुरा बनाऊ। माथि उल्लेख गरिएको मदबाट मनलाई टाढ़ा राख्न सक्यौ ने शरीर मथुरा बन्नेछ। त्यो मदबाट मनलाई जोगाउने के उपाय छ? मथुरा शब्दलाई उल्टायौ

भने 'राथुम' शब्द बन्ने छ र बीचबाट 'थु' अक्षर झिकिदियौ भने 'राम' रहन जान्छ। जसको मुखमा सदा राम शब्द बसिरहन्छ उसैको शरीर मथुरा बन्नसक्छ। यदि परमात्मासँग सदा सम्बन्ध बनिरह्यो भने 'राम' रहन्छ, होइन भने 'थु' मात्र रहनेछ। सबै यमदूतले उसलाई 'थू-थू' गर्ने छन्।

हामी तीर्थयात्रा गरौं, त्यो ठीक हो तर शरीरलाई तीर्थजस्तो पवित्र बनाऔं र हृदयलाई गोकुल।

'गो' शब्दको कति अर्थ छन्। 'गो' को अर्थ हुन्छ—इन्द्रिय, भक्ति, गाई, उपनिषद् आदि। इन्द्रियहरूलाई विषयहरूतर्फ बढ्न दिनुको अपेक्षा प्रभुका तर्फ फर्काइदेऊ। किनभने उनका स्वामी प्रभु हुनुहुन्छ। भक्ति आँखाहरूबाट पनि हुनसक्छ र कानहरूबाट पनि। आँखाबाट भक्ति गर्नु भन्नाको अर्थ हो, आँखाहरूमा प्रभुलाई बसाएर जगत्‌लाई हेर्ने। यस प्रकार हेर्नाले जगत् कृष्ण रूप देखिनेछ। तुलसीदास र हनुमानजीलाई सीतारामका सिवाय अरू कोही पनि देखिन्नथे।

मनमा तर भगवत् स्मरण सदा चलिरहनदेऊ। हृदय गोकुल बन्नासाथ आइपुग्नु हुनेछ। एक-एक इन्द्रियलाई भक्तिरसमा चुर्लुम्म डुबाइदेऊ। जसको प्रत्येक इन्द्रिय भक्ति गर्दछ, उसैको हृदय गोकुल बन्दछ। कति मानिस कानबाट भक्ति गर्छन् या आँखाबाट पनि भक्ति गर्छन् तर मनबाट गर्दैनन्। प्रत्येक इन्द्रियबाट श्रीकृष्णरसको पान गर। तब तिम्रो मन, तिम्रो हृदय गोकुल बन्नेछ र अन्तमा परमानन्दको प्राकट्य हुनेछ। जुन व्यक्ति इन्द्रियले भक्ति गर्दैन, त्यसले पापाचार गर्दछ।

## गोभिः पिवति इति गोपी

जसले आफ्नो प्रत्येक इन्द्रियबाट श्रीकृष्णरसको पान गर्दछ, उही गोपी हो।

ज्ञानीले आफ्ना इन्द्रियहरूलाई निरुद्ध गरेर प्राणलाई ब्रह्मरन्ध्रमा स्थिर गरेर आफ्नो ललाटमा ब्रह्मज्योतिको दर्शन गर्छ।

वैष्णवजन आफ्नो हृदय-सिंहासनमा बालकृष्णलाई राज गराउँछन्। वैष्णव आफ्ना हृदयमा प्रभुको दिव्य प्रकाशलाई हेरिरहन्छन्।

ठाकुरजीको दर्शन गरेपछि आँखा चिम्लिएर उहाँको स्वरूपलाई आफैंभित्र हेर। श्रीकृष्णाको स्मरण गर्दा देह र संसारको भान बिर्सिएपछि नन्दमहोत्सव सफल हुन्छ। परमात्मा ऋषिकेश हुन्। एक-एक इन्द्रियहरूको विवाह श्रीकृष्णासँग गरिदेऊ।

भागवतको भक्तिमा दुराग्रह छैन। स्वरूपमा मात्र निष्ठा राख्नाले, एउटै स्वरूपको बारम्बार सतत चिन्तन गर्नाले मन त्यहीं लाग्न जान्छ। यसो गर्नाले मनको शक्ति पनि बढ्न जान्छ।

शरीरले नभएपनि मनले सधैं गोकुल जाऊ। मनले मथुरा जाऊ। शरीर जहाँ भए पनि मनलाई मथुरा र वृन्दावन पठाइदेऊ। मनमा कल्पना गर र भावना गर यशोदाको काखमा बालकृष्ण

खेलिरहनु भएको छ, कृष्णको दर्शनका निमित्त सारा गोपिनीहरू दगुरिरहेछन् इत्यादि। कृष्णको एक-एक लीलाको कल्पनामा दर्शन गरिराख। भगावान्को दर्शन गरेपछि पनि आफ्ना आँखा चिम्लिएर उनका स्वरूपको मनमनै दर्शन गरिराख।

ज्ञानमार्गमा भेदको निषेध छ। भक्तद्वारा भगवान्का साथ एक हुन जान्छ। दुवैको ध्येय एकै हो। भक्तिमा, आरम्भमा भेद छ र अगाड़ि गएर प्रभुका साथ भक्त एक भइहाल्छ।

ध्यानमा, दर्शनमा तन्मयता भएपछि नन्दमहोत्सव सम्पन्न हुन्छ।

जबसम्म जगत्को भान छ, तबसम्म साँचो आनन्द पाईंदैन। देहभान भएपछि देवदर्शन हुन पाउँदैन। देहभान नबिर्सीकन दर्शनमा सच्चा आनन्द पाईंदैन। ध्यानका विना ईश्वरको साक्षात्कार हुन पाउँदैन।

वसुदेव र देवकीले एघार वर्षसम्म ध्यान गरेका थिए।

ध्यान गर्नेले यो पनि बिर्सिदिनुपर्छ ऊ ध्यान गरिरहेछ। आफू स्वयंलाई र जगत्लाई बिर्सिएर ईश्वरभाव मात्र शेषरहेमा अद्वैत सम्पन्न हुन्छ। देह र जगत्को भान बिर्सिएर जो ईश्वरभाव शेष रहन्छ त्यही अद्वैत हो।

सन्तहरूको जीवन पढ़ेमा हामी जान्दछौं उनीहरूले जीवनभर कष्ट सहन गरेका छन्, सांसारिक व्यवहारबाट उनीहरू बड़ो दुःखी भए, तर उनको मन अलिप्त रहन्थ्यो। आफ्नी दुलहीको मृत्युमा नरसिंह मेहताले भने—

भलुं थयुं भांगी जंजाल।
सुखे भजीशुं श्रीगोपाल॥

अर्थात् बेसै भयो जञ्जाल नष्ट भयो। अब चाहिँ बड़ो चैनले म गोपालको भक्ति गर्नेछु।

नरसिंह मेहतालाई एउटा यस्तो तत्त्व फेला पर्‍यो जसका कारण दुःखद प्रसङ्ग पनि उनलाई प्रभावित गर्न पाउँदैन थियो। उनका हृदयमा श्रीकृष्ण विराजमान हुनुहुन्थ्यो।

वृन्दवनमा कैयौं साधु प्रतिदिन नन्दमहोत्सव मनाउँछन्। तिमी कल्पना र भावनाद्वारा वृन्दावन जाऊ र यस महोत्सवलाई मनाऊ। शरीर चाहे जहाँ होस् मनबाट तर नन्दबाबाको घरमै निवास गर। भावना गर तिमी वहाँ सेवा गर्छौ र कृष्णको दर्शन गरिरहेछौ। यशोदाको काखमा कृष्ण खेलिरहनु भएको छ। गाईहरू उफ्री कुदिरहेछन्। गोपिनीहरू आनन्द मनाइरहेछन्, यस्तो कल्पना र स्मरण गर्नाले सारा दिन बड़ो आनन्दमा बित्ने छ।

यदि एउटै स्वरूपको ध्यान गर्न नसकेमा कृष्णलीलाको कीर्तन गर। कीर्तनमा यसरी लीन होऊ जो देहभान र देशकालको भान पनि नहोस्।

नन्दबाबाको गोकुल शुद्ध प्रेमभूमि हो। त्यसमा स्वयं सुख पाइने होइन अरूहरूलाई पनि सुखी गराउने भावना छ। स्वयं सुखी हुने र अरूलाई सुखी नगराउने भावना भयो भने तब सुखले तिम्रो त्याग गरिदिनेछ। अरूहरूलाई सुखी तुल्याउने इच्छा गर्नेलाई कहिल्यै दुःख पर्दैन।

नन्दमहोत्सवको आरम्भ प्रातःकाल चार बजे भएको थियो, त्यसकारण यसलाई ब्रह्ममुहूर्तमा मनाऊ। ध्यान-धारणाको सर्वोत्तम समय ब्रह्ममुहूर्त ( प्रातःकाल ४ देखि ५ ॥ )-को हो। प्रातःकाल प्रभुभजनबाट आनन्द प्राप्त गरेपछि सारा दिन पनि बड़ो आनन्दले व्यतीत भइहाल्छ। बिहान चाँड़ै उठेर आधा घण्टा ध्यान गर। ईश्वरका साथ एकत्व साध। बाह्र वर्षसम्म यसप्रकार नियमपूर्वक पूजा गर्नाले ईश्वरको अनुभव हुनेछ।

प्रातःकालमा जप, ध्यान, प्रार्थना गर्नाले परमात्माले तिमीलाई सारा दिन पापकर्मबाट बचाउनुहुन्छ। प्रातःकालमा हृदय अलिकति पग्लिएपछि सारा दिन आनन्दसाथ बित्नेछ। यदि केही अरू गर्न नसकेमा आँखा चिम्लिएर नन्दमहोत्सवको ध्यान गर्‍यौ भने पनि मन शुद्ध हुने छ। वृन्दावनमा धेरै जसो सन्त नन्दमहोत्सवका अठार श्लोकको नित्य पाठ गर्छन्।

नवमीको दिन महोत्सव भयो। श्रावण कृष्ण द्वादशीका दिन भगवान शङ्कर गोकुलमा आउनुभयो।

शङ्कर योगीश्वर हनुहुन्छ र कृष्ण योगेश्वर। योगीश्वर र योगेश्वरको मिलन भयो। भगवान् शङ्कर निवृत्ति-धर्मको आदर्श देखाउनुहुन्छ अनि श्रीकृष्ण प्रवृत्तिधर्मको। बाहिरबाट प्रवृत्त र भित्रबाट निवृत्त। सबै प्रवृत्ति गर्छन् तर कुनै पनि प्रवृत्तिमा आसक्त छैनन्। प्रवृत्ति गर्न चाहिँ गर्छन् तर निवृत्तिको जस्तो।

भगवान् शङ्कर भन्नुहुन्छ—'जसलाई ब्रह्मानन्दको आस्वाद लिनु छ त्यसले थोरबहुत निवृत्ति तर लिनैपर्छ।'

जसले चिया-बिंड़ी जस्तो मामुली वस्तुको त्याग गर्न सक्दैन, त्यसले मोह, माया, काम कसरी छोड्न सक्ला। जसलाई भजनानन्द चाहिन्छ त्यसले विषयानन्दलाई छोड्नै पर्छ।

शिवजी कुनै गाउँमा ज्यादा समय बस्नुहुन्न। उहाँ मसानमा मात्र बास गर्नुहुन्छ। उहाँ भन्नुहुन्छ—'ध्यानानन्द-भजनानन्द पाउनु छ भने प्रवृत्ति कर्म कम गर्दै जाओ।'

एउटा गृहस्थले आफ्नी एउटी कन्या एउटा किसानलाई दिएको थियो र अर्की कन्या एउटा कुमालेलाई। एक पटक उसले किसानको घर आएर आफ्नी छोरीसँग सञ्चो-बिसञ्चोको कुरा सोधेछ। कन्याले भनी—'पानी परेको छैन। पानी परिदिएदेखि सबै कुरा ठीक हुनेथियो।' त्यो गृहस्थ त्यहाँबाट कुमालेको घर आयो र वहाँ भएकी आफ्नी अर्की छोरीसँग हालखबर सोध्न थाल्यो। छोरीले जवाफ दिई—'माटाका धेरै भाँड़ा बनिइसकेको छ र अब भट्टीमा पकाउन मात्र बाँकी छ। म चाहन्छु पानी चाहिँ नपरोस्।'

यो कथा सबैलाई लागू हुने हो। जीव पिता हो र प्रवृत्ति-निवृत्ति दुइ छोरीहरू हुन्। यी कन्या एकसाथ बस्न सक्दैनन्। साथै बस्न आएभने दुःखी हुनेछन्। निवृत्तिको आनन्द लिने हो भने प्रवृत्तिको मानसिकता त्याग गर। जबसम्म शारीरिक शक्ति छ, प्रवृत्तिको विवेकपूर्वक त्याग गर्दै जाऊ। त्यसो तर रक्तचाप बढ़ेपछि डाक्टरले भनेपछि सेठ आराम गर्दछन् तर त्यो साँचो निवृत्ति भएन।

सबै प्रवृत्तिहरू एकसाथ छोड़िदिन असम्भव छ तर प्रवृत्तिहरूको यस्तो आयोजन गर जो प्रभु-सेवाका निमित्त समय पाइँदै रहोस्।

वेदान्तको अधिकार विरक्तलाई छ विलासीलाई होइन। कुरा ब्रह्मज्ञानका गर्ने तर प्रेम धन-सम्पत्ति, नारी, जड़ पदार्थहरूसँग गर्ने त्यो सच्चा ब्रह्मज्ञानी भएन। जगत् मिथ्या हो, यस्तो बोलेर मात्र होइन, अनुभव गरेर लाभ हुन्छ। व्यवहार मिथ्या हो, यस्तो मानेर व्यवहार गर। मानवलाई यो भान हुँदैन तर धन-सम्पत्तिको दौड़मा उसले ईश्वरलाई बिर्सिरहेछ।

भगवान् शङ्कर श्रावणमासको कृष्णपक्ष द्वादशीका दिन श्रीकृष्णाको दर्शन गर्न आउनुभो। योगीश्वर र योगेश्वरको मिलन भयो। शङ्कर एक्लै आउनुभयो।

भक्तिमा यदि सङ्गत असल भएन भने भक्ति कार्यमा विक्षेप हुनेछ। भजन र दर्शन चाहिँ एक्लै गर्नू। अरूहरूलाई आफ्नासाथ राख्नाले हामी रजोगुणी भइहाल्छौं।

कतिपय मानिसहरू भजन वा दर्शन गर्नलाई अरूहरूलाई पनि बोलाउँछन्। सत्कर्मका निमित्त अरूहरूलाई प्रेरणा दिनु चाहिँ असल कुरा हो तर साथ भएपछि बाटामा असल-खराब कुराहरू पनि भइहाल्छ जो ठीक होइन।

भजन र दर्शन एकचित्तले गर। दर्शनका पछि मन्दिरको बार्दलीमा केही बेर बस्नुको यही प्रायोजन हो जो हामीले भगवान्‌को जुन स्वरूपको दर्शन गरेका छौं, त्यसलाई मनमा स्थापना गराइलिऊँ जसले भोलिपल्ट बिहानसम्म मनमा रहन सकोस्।

कति मानिस यस्ता हुन्छन् दर्शनका पछि यदि सोध्नु आज भगवान्‌को शृङ्गार कस्तो थियो, वस्त्र परिधान कुन थियो ? ऊ कपाल कन्याउन थाल्छ। दर्शनका पछि यदि भगवान्‌लाई मनमा बसाएर घर लैजान सक्यौं भने त्यो दर्शन सार्थक हुन्छ। ज्यादा जसो मानिस भगवान्‌लाई मन्दिरमै छोड़ेर आफ्ना-आफ्ना बङ्गला या पसलमा फर्कन्छन्।

ईश्वरका सिवाय अरू कसैको पनि सङ्गत नगर। जीव अभिमानी र विश्वासघाती छ।

सन्तहरूको दृष्टि सदा प्रभुको कुनै न कुनै रूपमा अड्किरहेको हुन्छ। वाह्यदृष्टि तर सदा निहुरिरहेको हुन्छ।

भगवान् शङ्करको दृष्टि पनि ब्रह्ममै स्थिर थियो।

शङ्करका दुइ विशिष्ट गण थिए—शृङ्गी र भृङ्गी। ती दुवै शङ्करका साथ-साथ जानलाई जिद्दी गर्न थाले। उनीहरू भन्न लागे—'यदि हामीलाई साथ नलैजाने हो भने हामी सबैलाई भनिदिनेछौं यी कुनै साधु होइनन्। भगवान् शङ्कर हुन्।'

शङ्करले भन्नुभो—'म एक्लै जानेछु। तिमीलाई लिएर गएँ भने दर्शन-ध्यानमा विक्षेप हुनेछ।'

आज गोकुलमा सदाशिव आउनु भयो। कति महात्माहरूले यस लीलाको बड़ो रसिलो वर्णन गरेका छन्। जो आजसम्म निरञ्जन थिए उनी आज अपेक्षावाला भए।

यदि प्रभुले तिमीलाई सम्पत्ति दिएको छ भने संकल्प गर 'प्रतिदिन सुपात्र साधु-सन्तहरू र गरीबहरूलाई भोजन गराउनेछु।' यशोदाजीको नियम थियो सुपात्रहरूलाई सधैँ भिक्षा दिने।

शिवजीको आगमन भयो। मानिस भन्न थाले 'यी साधु शिवजीजस्ता लाग्छन्।' शिवजीले आफ्नो तेजलाई कतिसम्म लुकाएर राख्न सक्नुहुन्छ।

शिवजीका नजिक दासी आएर भन्न लागी—'महाराज, यशोदाजीले यो भिक्षा पठाउनु भएको छ। यसलाई स्वीकार गर्नुहोस् र कृष्णलाई आशीर्वाद दिनुहोस्।'

शिवजी—'म भिक्षा लिन्नँ। मलाई कुनै पनि कुराको अपेक्षा छैन। मलाई बालकृष्णको दर्शन गर्नुछ।'

दासीले यशोदाकहाँ समाचार पुऱ्याई, 'साधु-महात्मा' अरू केही लिन चाहनुहुन्न। उहाँ तर केवल कृष्णको दर्शन गर्नका निमित्त यति टाढ़ाबाट आउनु भएको हो रे।

सन्तको परीक्षा उनको वेशभूषा या जाति-पातिबाट हुँदैन, उसको आँखा र मनोवृत्तिबाट गर्न सकिन्छ। ब्रह्मज्ञान सुलभ छ तर ब्रह्मद्रष्टा, प्रत्येकमा ब्रह्मदर्शन गर्नेवाला सन्त दुर्लभ छ।

यशोदाले झ्याल खोलेर हेर्दै भनिन्—'महाराज, यदि भिक्षा कम छ भने म अरू केही दिन तयार छु तर कृष्णलाई बाहिर ल्याउँदिनँ। तिम्रो घाँटीमा सर्प छ, जसलाई देखेर मेरो कृष्ण डराउने छ।'

शिवजी—'माता, तपाईंका कृष्ण कालका काल, ब्रह्मका ब्रह्म हुन्। ऊ न कसैसँग डराउन सक्छन् न उनलाई कसैको कुदृष्टि लाग्न सक्छ, उनले मलाई चिनेको पनि छ।'

यशोदाजी—'तपाईंले कस्तो कुरा गर्नु भएको ? मेरो कृष्ण सानै छ। तपाईं जिद्दी नगर्नुहोस्।'

शिवजी—'म तपाईंको कृष्णको दर्शन नगरिकन यहाँबाट हट्न सक्दिन।'

नन्दबाबाको गाउँनजिकै आज पनि आशेश्वर महादेवको मन्दिर छ। आज पनि वहाँ शिवजी कृष्णको दर्शन गर्न भनी आशा गरेर बसिरहनु भएको छ। व्रज चौरासीको प्रदक्षिणा कम-से-कम एक पटक गर्नै पर्छ। व्रज चौरासी कोसको परिक्रमा महापुण्यदायी छ। यसले जीवनको

सम्पूर्ण पाप डढ़ेर जान्छ। व्रज तर लीलाभूमि हो। त्यहाँ बसेर ध्यान गऱ्यौ भने परमात्मा स्वयंले लीला-रहस्य संझाउनु हुनेछ।

यता बालकृष्णाले बाहिर शिवजी आउनुभएको छ र माताले बाहिर लैजानुहुन्न भने थाहा पाई ठूलो स्वर गरेर रुन लाग्नुभो।

दासीले यशोदालाई भनी—'माताजी, त्यो साधुको ओठ हल्लिरहेछ। मान्नुहोस् नमान्नुहोस् त्यसैले केही मन्त्र प्रयोग गरेको छ जसले गर्दा कृष्ण रोइरहनुभएको छ। यस्तो साधु कहिल्यै देखिएको पनि थिएन। म बालक कृष्णलाई बाहिर लैजाऊँ र साधुबाट आशीर्वाद माँगू' भनेर उसले कृष्णको शृङ्गार गरिदिई।

यशोदाले दासीलाई भनिन् 'ती महाराजलाई भन्नु कृष्णलाई हेरिदेऊ, तर टकटकी लाएर चाहिँ होइन।'

वृन्दावनको बाँकेविहारीको स्वरूप दिव्य छ। श्रीनाथजीको स्वरूप पनि अद्‌भुत छ।

जबसम्म स्वरूपको आसक्ति हुँदैन, भक्ति हुँदैन। लौकिक नामरूपका प्रति जस्तो आसक्ति छ, त्यस्तै आसक्ति प्रभुको नामरूपमा भएमा त्यसैलाई भक्ति भनिने हो।

बाँकेविहारीको मन्दिरमा पर्दा हुन्छ। पर्दा माया हो। जीवले ईश्वरको दर्शन गर्दछ, तब बीचमा मायाको पर्दा आउँछ। मन्दिरमा राधाजीको सेव्यस्वरूप छ। बाँकेविहारी दुइ मिनेट राधाजीलाई फेरि जगत्‌लाई दर्शन दिनुहुन्छ। चार आँखा जुधेमा मात्र दर्शनमा आनन्द आउँछ।

कृष्ण हाँस्नुहुन्छ। 'यी साधुले जादू गरेछन्। महाराजको नजरमा जादू छ। यी साधारण साधु होइनन्।'

दासीले कृष्णलाई शिवजीका नजिक ल्याई। शिवजीले दर्शन गरेर प्रणाम गर्नुभयो। दर्शन गरेर आनन्द मात्र भयो तर तृप्ति हुन पाएन। मलाई कृष्णसँग भेट्‌ गर्नु छ। आनन्द अद्वैतमा छ द्वैतमा छैन। मलाई आफ्ना प्रभुसँग भेट्‌नु छ, श्रीकृष्णका साथ हुनु छ। जबसम्म ईश्वरबाट जीव अलिकति पनि टाढ़ा हुन्छ, त्यसलाई भय लागिरहन्छ।

शिवजीले सोच्नुभयो—'बालकृष्ण मेरो काखमा आइदिएमा बड़ो आनन्द हुने थियो, शिवजी भन्न थाल्नुभयो—तिमी यी बालकको भविष्यको बारेमा सोद्धछ्यौ। यदि तिनलाई मेरो काखमा दिन्छ्यौ भने उनको हातको रेखा राम्ररी हेर्न सक्नेथिएँ।' यशोदाजीले बालकृष्णलाई शिवजीको काखमा राखिदिइन्। शिवजी समाधिमा डुब्नुभयो।

कुरा अद्वैतमा हुन पाउँदैन, द्वैतमा चाहिँ भइरहन्छ। जब हरि र हर एक भएपछि वहाँ कसले के भन्ने?

शिवजीले यशोदालाई भन्नुभो 'माता, तपाईंको छोरा सम्राट्‌ हुने भएका छन्।'

शिवजीले ताण्डवनृत्य गर्नुभयो, अति आनन्दको अवस्थामा जीव नाच्न लाग्दछ। हातमा आँपफल आएपछि मानिस नाच्न थाल्छन् भने यतातिर चाहिँ शिवजीको हातमा बालकृष्ण

आइपुग्नुभो। शिवजी नृत्यमा तन्मय हुनुभो। त्यहाँ नन्दबाबा आए। भगवान् शङ्करको जयजयकार भयो। बालकृष्णलाई हृदयमा राखेर शिवजी कैलाश फर्कनुभयो।

त्रयोदशीका दिन नन्दजी मथुरा आए। चतुर्दशीका दिन पूतना आई।

नन्दबाबा प्रतिवर्ष कंसलाई मालपोत तिर्थे। यस पटक पनि मालपोत तिर्ने वेला आयो। नन्दबाबाले भने—'कृष्णलाई राम्ररी यादविचार गर्नू।'

परमात्मासँग सदा सम्बन्ध बनाइराख। सबैका रक्षकको रक्षा कसले गर्ने तर उनलाई हृदयमा बसाएपछि सधैं सावधान हुनु कहीं लौकिक भोगको इच्छा मनमा नघुसोस् र कोही तृष्णा मनमा आयो भने हृदयभित्रबाट भगवान् भागिहाल्नुहुन्छ।

कृष्ण यदि सधैंका निमित्त हृदय-गोकुलमा बसिदिनुभएमा सबै कुरा बेस हुने थियो। हृदय-गोकुलमा श्रीकृष्णको आगमन भएपछि नन्द (जीव)-ले बाहिर भट्किनुहुन्न।

नन्दबाबा कंसलाई पोत (कर) बुझाउन मथुरा आए। उनी कंसको राजसभामा आए र उनले कंसलाई कर, सुवर्ण थाल तथा पञ्चरत्न चढ़ाए र समाचार पनि दिए यस वृद्धावस्थामा उनको घरमा पुत्रको जन्म भएको छ।

कंसलाई के थाहा ती कृष्ण उसका काल हुन्। उसले सोच्यो 'यस भेटको परिणामका अनुसार त्यस बालकलाई आशीर्वाद पनि दिनुपर्ला। उसले बालकलाई आशीर्वाद पठायो—ठूलो भएर राजा बन्नू, उसको जय-जयकार होस्, उसका शत्रुहरूको शीघ्र विनाश होस्।' कंसले थाहा नपाईकनै कृष्णको जय-जयकार गरेर आशीष दियो।

शत्रु पनि जसलाई आशीर्वाद दिने र वन्दना गर्ने गर्छन् ती पक्कै ईश्वरै होलान्?

भेटको परिणामद्वारा आशीर्वाद दिनेवाला कंसै हो।

नन्दबाबाले भने—'सारा व्रजवासीहरूले मेरा निमित्त एकादशी आदिको व्रत गरे, जसको फलस्वरूप मलाई पुत्र भयो।' नन्दबाबा जस अरूलाई दिन्छन्।

शुकदेवजी वर्णन गर्नुहुन्छ।

नन्दजी वसुदेवसँग भेट्न जानुभयो। वसुदेवलाई बड़ो आनन्द भयो। दुवैले एक अर्काको कुशल-मङ्गल सोधे।

कुनै मित्रसँग भेट भएपछि आफ्ना सुखको कुरा नगर्नु बरु उसका दुःखको कुरा थाहा पाएर आश्वासन दिनू।

नन्दजी वसुदेवसँग सुखदुःखको कुरा सोध्न लागे। 'सुनेको थिएँ तपाईंको घर पुत्रीको जन्म भएको थियो र कंस उसको हत्या गर्न आएको थियो।'

वसुदेव—'अँ, यो कुरा सत्य हो तर यसमा कंसको होइन, मेरै कर्मको दोष हो, तर तपाईंका घर जो बालक छ, त्यो मेरै हो।'

नन्दबाबाले सोझो किसिमबाट भनिदिए—'अँ त्यो तपाईंकै हो।'

वसुदेव मनमनै भनिरहेछन् 'कृष्ण मेरै हो। मैले उसलाई तपाईंको घर राति छोड़ेर आएको थिएँ। तर नन्दजीले यस गूढार्थ भरिएको कुरालाई बुझ्न पाएनन्।'

नन्द ( जीव ) गोकुल छोड़ेर कहीं टाढ़ा जाँदा त्यहाँ काम, मद, लोभ, मोह, मत्सर आदि राक्षस एक्कासि आइपुग्छन्। नन्द कृष्णलाई छोड़ेर कंसकहाँ जान्छन् तब गोकुलमा विपत्ति आउँछ, उधुम मच्चाइदिन्छ।

नन्दबाबाले विचार गरे 'केही खेलौना लिएर जाउँला तब कृष्णलाई रमाइलो होला।'

कतै बाहिर जानुपर्‍यो भने वहाँबाट भगवान्का निमित्त केही असल वस्तु लिएर आउनु। तिम्रो प्रयास भक्तिमय बन्ने छ।

अब पूतनावधको कुरा आइरहेछ।

योगमायाले आकाशवाणीद्वारा कंससँग भनेको थियो—'तेरो कालको जन्म भइसकेको छ।' तब कंस आत्तियो। उसले 'भर्खर जन्मेका सबै बच्चाहरूको हत्या गर्ने आदेश दियो।' यसैकारण उसले पूतनालाई गोकुलतर्फ पठाइदियो। ऊ चतुर्दशीका दिन गोकुल आई।

पूतको अर्थ हो पवित्र। जो पूत छैन त्यो पूतना हो। पवित्र के होइन ? अज्ञान, त्यसकारण पूतनाको अर्थ हो अज्ञान, अविद्या र पवित्र छ केवल ज्ञान। गीताजीमा भनेको छ—

**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते।**

( भा० गी० ४-३८ )

यस संसारमा ज्ञानका सिवाय पवित्रकर्ता अरू केही छैन। ज्ञान धनार्जनको साधन होइन। आत्मस्वरूपको ज्ञान हो।

ज्ञान पवित्र छ र अज्ञान अपवित्र। अज्ञानबाट वासनाको जन्म हुन्छ। पूतना वासनाकै स्वरूप हो।

पूतना चतुर्दशीका दिन किन आई ? किनभने उसलाई चौध ठाउँमा वास गर्नुपरेको थियो।

अविद्या-वासना चौध स्थानमा बस्दछ। पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, मन, बुद्धि, चित्त र अहङ्कार—यी चौध स्थान हुन्। वासना—अविद्या-पूतनाको बस्ने ठाउँ। यसै कारणले ऊ चतुर्दशीका दिन आएकी थिई।

रामायणमा पनि हामीले देखेका छौं कैकेयीले रामका निमित्त चौध वर्षको वनवासको माग गरेकी थिइन्। यसको पनि यही कारण हो ती चौध स्थानहरूमा बसेका रावणलाई मार्नका निमित्त चौध वर्षको तपश्चर्याको आवश्यकता छ।

नीति र धर्मले निषेध गर्दा पनि यदि आँखा परस्त्रीका पछि लाग्छ भने मानिलेऊ आफ्नो आँखामा पूतना आएर बसेकी छ। स्त्रीलाई स्त्रीरूपमा होइन ब्रह्मरूपमा हेर। आँखाहरूबाट हुन गएको पाप मनमा प्रवेश गर्छ। आँखाहरूमा पूतना भइभने काम मनमा पनि बस्ने छ।

जगत्का कुनै व्यक्तिलाई भगवद्भावले हेरेमा केही खराबी छैन बरु असलै हुन्छ। तर कुनै पनि व्यक्तिलाई सांसारिक कामभावनाद्वारा हेऱ्यौ भने सम्झ मनमा पूतना आएर बसेकी छ।

धर्म र नीतिले जुन खाद्यपदार्थको आहार गर्न रोकेको छ र त्यसैलाई खाने इच्छा हुन थाल्यो भने ठान तिम्रो जिब्रोमा पूतना आएर बसेकी छ।

वीभत्स र अतिशय कामुक कुराहरूलाई सुन्ने इच्छा भयो भने भन्ठान पूतना चढ़ी सकेकी छ।

पूतना हरेक इन्द्रियमा बसेकी छ, जो ज्यादै सताइरहन्छे। सबै इन्द्रियहरूको द्वार बन्द गरिदेऊ जसबाट पूतना भित्र प्रविष्ट गर्न नसकोस्।

पूतना शृङ्गार गरेर सुन्दरीको रूप लिएर गोकुल आई।

तीन वर्षसम्मको बालक शिशु कहिन्छ। यस शिशुलाई मार्नका निमित्त पूतना आएकी छ।

प्रश्न यो छ पूतना शिशुलाई मात्र किन मार्दछे र शिशुवधको अगाड़िका अवस्थावाला बालकहरूलाई किन मार्दिन ?

जीवनका चार अवस्थाहरू छन्—( १ ) जाग्रत, ( २ ) स्वप्न, ( ३ ) सुषुप्ति र ( ४ ) तुर्यगा।

जाग्रत अवस्थामा पूतना आँखाहरूमा चढ़ेकी हुन्छे। आँखाहरूको चञ्चलताले मनलाई चञ्चल गर्दछ। यस प्रकार जागृति, स्वप्न र सुषुप्ति यी तीनै अवस्थामा अज्ञानले सताउँछ अर्थात् पूतना तीन वर्षसम्मका शिशुहरूलाई मार्दछे। यी तीन अवस्थाहरूलाई छोड़ेर तुर्यगा अवस्थामा जीवको सम्बन्ध ब्रह्मसँग हुन्छ र तब पूतना सताउन सक्दिन।

जो व्यक्ति तुर्यगा अवस्थामा प्रभुका साथ एक हुन जान्छ, त्यसलाई पूतना-अज्ञान मार्न सक्दैन।

पूतना तीन वर्षभित्रका बालकलाई मार्दछे। जो सत्त्व, रज र तम यी तीन गुणमा फँसेको छ उसलाई मार्दछे। माया त्रिगुणात्मक हो। मायामा फँसेको व्यक्तिलाई पूतना मार्दछे।

संसारको मोहजालमा फँसेका सबैजना बालकै हुन, शिशु हुन्। यिनलाई पूतना-अज्ञानले मार्दछे। तर सांसारिक मोहलाई त्यागेर जो ईश्वरको निर्गुण स्वरूपमा लीन भएको छ उसलाई पूतनाले मार्न सक्दिन। गुणातीत अर्थात् प्रकृतिबाट टाढ़ा रहने व्यक्तिलाई पूतनाले केही पनि बिगार्न सक्दिन।

जब पूतना आई, त्यस समय गोकुलमा गाईहरू वनमा चर्न गएका थिए र नन्दजी मथुरा जानु भएको थियो। यस घटनाको सूचितार्थ के हो ?

गाईहरूको वनगमन अर्थात् इन्द्रियहरूको विषय-वनमा गमन। इन्द्रियहरू यस विषय-वनमा घुमिरहेका होलान् ? पूतना-वासना मनमा धम्म आइपुग्छे अज्ञान मनमा घोड़ा चढ्छे। जब इन्द्रियहरू विषयहरूमा हराउँछन्, वहिर्मुखी हुन्छन् तब वासना आउँछ।

इन्द्रियहरूलाई प्रभुसेवाका तर्फ फर्काएर निरुद्ध गर्‍यौ भने पूतना वासनाले सताउन पाउने छैन।

नन्द अर्थात् जीव। जीव-हृदय-गोकुललाई छोड़ेर मथुरा अर्थात् देहदृष्टिमा भुल्दछ भने तब हृदय गोकुलमा-पूतना-अज्ञान बसिहाल्छन्।

नन्द अर्थात् जीव, श्रीकृष्णलाई छोड़ेर मथुरा जाने अर्थात् देहसुखमा फँसे तब वासना धम्म आइपुग्छ।

नन्द आफ्ना आवासमा हुँदैनन् अनि पूतना आउँछे। पवित्र शरीर ( मथुरा )-मा पुण्यशाली हृदय भनेकै गोकुल हो। नन्द जीवात्मा हो।

नन्द ( जीवात्मा ) परमानन्द परमात्मा श्रीकृष्णबाट विमुख भएर कंस ( काम-कलह )-सँग भेट्न जाने र गाईहरू ( इन्द्रियहरू ) वन ( विषयहरू )-का तर्फ दौड़ेपछि अनि पूतना ( अविद्या ) आइहाल्छे।

पूतना शृङ्गार गरेर आएकी छे। अविद्याले आफ्ना साथमा कैयौं दोषहरूलाई लिएर आउँछे। अविद्याले आफ्ना साथमा पाँच दोषहरू लिएर आउँछे ती पाँच दोष यस प्रकार छन्—( १ ) देहाध्यास, ( २ ) इन्द्रियाध्यास, ( ३ ) प्राणाध्यास, ( ४ ) अन्तःकरणाध्यास र ( ५ ) स्वरूप विस्मृति।

पूतनाको स्वरूप देखेर यशोदा आदि धोकामा परे। पूतनाको वेणी देखेर देहाध्यास भयो, रूप देखेर इन्द्रियाध्यास भयो त्यसकारण स्वरूपको विस्मृति भइगयो। फलतः त्यसलाई कसैले रोकेन। ऊ सोझै नन्दबाबाको घरमा छिरिहाली।

पूतनालाई देख्नासाथ कृष्णले आँखा चिम्लिहाले। पूतनाले उनलाई आफ्नो काखमा लिई। पूतनाले बाहिर-बाहिर राम्रो व्यवहार गरिरहेकी थिई तर त्यसको हृदयमा कुटिलताको विष भरिएको थियो। पूतनाले आफ्नो स्तनमा पनि विष लगाएकी थिई।

संसारसुखको उपभोग गर्नलाई मनुष्य पनि आफ्नो आत्मामा वासनाको विष लगाउँछ।

पूतनाले कृष्णलाई काखमा बसाएर उनको मुखमा आफ्नो विषले लेपिएको स्तन दिई। कृष्णले तब दूध खान शुरू गरिदिए र उनले यस प्रकार दूध पिए पूतना वेदनाले ठूलो स्वरले चिच्याउन थाली तर कृष्ण चाहिँ दूध पिइरहे। पूतना विस्तार-विस्तार निष्प्राण भइहाली।

सौन्दर्यलाई देखेर मनुष्य मात्र लोभी हुन्छ र भान बिर्सिहाल्छ। सबै व्रजवासी पनि पूतनाको बनावटी शृङ्गारमा मोहित भएका थिए र उसलाई कसैले रोकेन पनि।

श्रीमद्शङ्कराचार्यले शतश्लोकीमा भनेको छ—मानिस छालाको, रूपरङ्गको बड़ो मीमांसा गर्छन्, तर आत्माको मीमांसा चाहिँ गर्दै गर्दैनन्। जो मानिस छालाको चिन्तन गरिरहन्छ, त्यो आगामी जन्ममा चर्मकार बन्दछ। त्यसकारण शरीरको शृङ्गारमा समय खेर नफाल।

जसको शरीर चाहिँ सुन्दर छ तर हृदय विषले भरिएको छ, उही पूतना हो। पूतना बाहिरबाट खूब राम्री थिई तर उसको मन बड़ो मैलो थियो। जसको वस्त्र राम्रो छ तर मन अस्वस्थ छ, त्यही पूतना हो।

चारित्र्यको जाँचबूझ नगरीकन कसैको हातको पानीसम्म नपिउनु। भाँड़ा-कप झलमलाउँदो किन नहोस्, किनभने उसको मन मैलो हुनसक्छ। बड़ा-बड़ा तपस्वी पनि सौन्दर्यको मोह जालमा फँसिसकेका छन्।

अगाड़ि परेमा प्रशंसा गर्ने तर उसको अनुपस्थितिमा निन्दा गर्ने त्यो पनि पूतना हो। जे राम्रो-नराम्रो भन्नु छ त्यो उसको सामुन्ने भनिदिनुपर्छ।

जीवको स्वभाव त्यो पूतनाजस्तै छ। आफ्नो आत्मामा अज्ञान-अविद्याको आवरण लगाएर ऊ विषयानन्दमा डुब्दछ।

कसैको वाह्यरूपरङ्ग, बनावटी शृङ्गारबाट मोहित हुनुहुँदैन। जो बाहिरबाट राम्रो छ, ऊ भित्रबाट पनि राम्रो हुन्छ भन्ठान्नु मूर्खता हो। पूतना दुष्ट थिई तैपनि व्रजवासीले उसका रूपरङ्गको कारण धोका खाएका थिए।

वासना उम्लिएर आएपछि जीवले आफ्नो स्वरूप बिर्सन्छ। पूतना-अज्ञानका कारणले स्वरूपको विस्मृति भइहाल्छे।

पूतनालाई देखेर व्रजवासीहरूलाई इन्द्रियाध्यास भयो र स्वरूपको विस्मृति पनि भयो।

वासना-पूतनाको विनाश भएपछि कृष्णमिलन हुन जान्छ। त्यो मान श्रीकृष्ण वासनारूपी पूतनालाई मारेर सगुन गर्दछन्।

मनुष्य वासनाको दास छ। त्यसकारण उसको पतन हुन्छ।

वासनारूपी पूतनासँग कहिले आँखा नजुधाउनु। आँखालाई ईश्वरउपर लगाइराख्यौ भने वासना तिम्रो हृदयमा कहिल्यै आउन पाउँदैन।

पूतनालाई कसैले रोकेन र ऊ भित्र आइपुगी। जब ऊ भित्र पुगेकी थिई तब कृष्णले आँखा चिम्लिदिए।

साधारणतः पूतना आँखाद्वारा मनमा पस्दछे र फेरि निस्कने नामै लिन्न। आँखा बिग्रियो भने मन पनि बिग्रिहाल्ला त्यसकारण आँखालाई सदा बचाएर राख।

दर्शनमा तब आनन्द पाइन्छ जब भगवान्ले दृष्टि दिनुहुन्छ अर्थात् आँखा मिलाउनुहुन्छ। पूतना मलिन हृदय लिएर कृष्णको नजिक गई तब भगवान्ले आँखा मिलाउनुभएन तर चिम्लिदिनुभयो।

भगवान्‌ले यो देखाउन खोज्नु भएको छ पापीसँग उहाँ कहिल्यै आँखा मिलाउनुहुन्न, उसको सामुन्ने हेर्दा पनि हेर्नुहुन्न। भगवान् वस्त्र वा शृङ्गार होइन मन हेर्नुहुन्छ। बाहिरबाट सजिएको तर मनको मैलो व्यक्तिसँग आँखा मिलाउनुहुन्न।

भगवान्‌सँग हामीले यही प्रार्थना गर्नु छ, नाथ, हामी तपाईंका शरणमा आएका छौं। हामी पापीहरूलाई भवसागर पार लाइदिनुहोस्।

मो सम कौन कुटिल खल कामी।
जिन तन दियो ताहि विसरायो ऐसो नमकहरामी॥

र

सूर कहे श्याम सूनो, शरण हैं तिहारे।
अबकी बेड़ा पार करो, नन्द के दुलारे॥

तर जीव बड़ो अभिमानी छ। ऊ यस्तो प्रार्थना गर्दै गर्दैन। जीव रत्तो हात भएर पनि अकड़िएर हिँड्छ।

होइन विद्या, बल, वचन, चातुरी ईश्वरको कृपाविना मानिसका पास आउन के सक्थ्यो ?

जीवले भगवान्‌को शरण लियो भने उसको सबै पाप दूर हुन सक्छ किनभने भगवान्‌ले वचन दिएको छ।

सन्मुख होय जीव मोहिं जबहीं।
जन्म कोटि अघ नाशहिं तबहीं॥

गीतामा पनि भनेको छ—

न मे भक्तः प्रणश्यति।

जो मेरो भएको छ उसको कहिल्यै कोही विनाश गर्न सक्दैन।

शुद्ध प्रेममा तर अरूहरूलाई सुखी तुल्याउने भावना हुन्छ।

तैत्तिरीय उपनिषद्‌मा चार सूत्र छन्—

मातृदेवो भव। पितृदेवो भव।
आचार्यदेवो भव। अतिथिदेवो भव।

एक महात्माले यी सूत्रहरूमा एक अर्को सूत्र पनि जोड़िदिएको छ।

परस्परदेवो भव।

काल होइन, कलेजा ( मन ) बिग्रिन गएको छ। जस कारणले कलियुग आएको छ। मनुष्यले एक-अर्कालाई देवरूप मात्र थाले कलियुग सत्ययुग बन्न सक्छ।

बिबुध्य तां बालकमारिकाग्रहं।
चराचरात्माऽस निमीलिते क्षणः॥

पूतनालाई देख्नासाथ कृष्णले आफ्नो आँखा किन चिम्लिनुभयो? महात्माहरूले यसको अनेक कारण देखाएका छन्—

( १ ) पूतना नारी थिई। नारीलाई अबध्य मानेको छ। पूतनालाई देखेर भगवान् सोच्नुहुन्छ यसलाई तर मार्नैं पर्छ। स्त्रीको हत्या गर्नुपर्‍यो भनेर उहाँलाई सङ्कोच भइरहेको थियो र उहाँले आँखा चिम्लिदिनुभयो। अगाड़ि कोही पुरुष भए वा वीरता देखाउनुपर्ने भए अरू कुनै कुरा थियो तर कुनै स्त्रीलाई मार्नमा के वीरत्व छ?

( २ ) एउटा महात्मालाई यो कारण ठीक लागेन र उनी भन्छन् पूतना नारी चाहिँ थिई तर राक्षसी थिई। उसले कति बालकहरूको हत्या गरेकी थिई र यहाँ पनि कृष्णको हत्याका निमित्त आएकी थिई।

भगवान्ले आँखा चिम्लनाको कारण केही अरूनै छ। उहाँको आँखामा वैराग्य छ। उहाँले विचार गर्नुभयो यदि पूतनासँग आँखा मिलाऊँ तब उसलाई ज्ञान प्राप्त भइहाल्छ। उसले थाहा पाइहाल्छे यी ईश्वर रहेछन्। मेरो ईश्वरतत्वको ज्ञान भएपछि म जो लीला गर्न खोज्छु त्यो गर्न पाउँदिनँ।

ऐश्वर्यको ज्ञान लीलामा बाधारूप छ।

यो चाहिँ ईश्वर हो भन्ने पूतनाले थाहा पाई भने दूध ख्वाउने छैन।

कृपा गर्दै भगवान्ले यदि कसैसँग आँखा मिलाउनुहुन्छ भने उसलाई ज्ञान प्राप्त भइहाल्छ।

खुदा नजर दे तो सब सूरत खुदाकी है।

भगवान्ले अर्जुनलाई भन्नुभएको थियो—'अर्जुन, म जसमाथि कृपा गर्छु उसलाई मेरो स्वरूपको ज्ञान भइहाल्छ।'

पूतनामा मैले दृष्टि लगाएँ भने उसलाई ज्ञान भइहाल्छ, यी कुनै सामान्य बालक होइनन्, कालका पनि काल हुन्। उसलाई यस्तो ज्ञान भएपछि म लीला गर्न पाउन्नँ। यसले मलाई सामान्य बालक हो भन्ने ठानेर मार्न आएकी छ त्यस कारण उसलाई आफ्नो स्वरूपको ज्ञान गराउनु ठीक भएन।

पूतनालाई अज्ञानी रहन दिनका निमित्त भगवान्ले आँखा बन्द गर्नुभएको थियो।

( ३ ) एक महात्मा भन्नुहुन्छ 'यो कारण पनि ठीक भएन। दृष्टि मिलन हुनासाथ पूतनालाई ज्ञान हुन जान्छ भन्ने कुरा ठीक होइन। दुर्योधनलाई ज्ञान भएको थियो ? पूतना विष लिएर आई तब कृष्ण आँखा चिम्लिएर सोच्न थाल्नुभयो यसलाई गोलोकमा पठाउने हो वा वैकुण्ठमा ?'

( ४ ) एक अर्का महात्माले दोस्रो कारण बताएका छन्। आफ्नो कुनै पुण्यविना कोही पनि जीव ईश्वरका समीप जान सक्दैन। भगवान्ले आँखा चिम्लिएर यो हेर्न लाग्नुभयो यस पूतनाले कुनै पनि जन्ममा कुनै पनि पुण्य गरेकी छ वा छैन। जसका साथ ज्यादा प्रेम भयो भने सम्भव छ कुनै सानु कारणले ऊसँग शत्रुता पनि हुन जान्छ।

( ५ ) एक महात्मा भन्छन्—कृष्ण विचार गरिरहनु भएको थियो 'मैले ठानेको थिएँ गोकुलका मानिसले मलाई नौनी र मिश्री ख्वाउलान् भनेर तर यहाँ मानिस नौनी मिश्री ख्वाउनुको साटो विष ख्वाउन खोज्दा रहेछन्। यही डरले गर्दा आँखा चिम्लिएको हो।'

( ६ ) अर्का महात्मा सोच्दछन्—'परमात्मा पनि कहिले डराउन सक्छन् ? कृष्णले सोच्नुभो—विष पिउने बानी त शिवजीको छ, मलाई विष मनै पर्दैन। त्यसकारण आँखा चिम्लिएर भगवान् शङ्करको प्रार्थना गर्नुभो। तपाईं विष पिउन आउनुहोस्, म चाहिँ दूधै पिउने छु।' भगवान् शिवको ध्यान गर्नलाई मात्र कृष्णले आँखा चिम्लिनुभएको थियो।

कृष्ण आँखा चिम्लिएर शिवजीलाई संझिएर विष पियाउन बोलाइरहनु भएको छ। शिवतत्त्वको आह्वान गरिरहनु भएको छ।

जब कुनै देवलाई संझनु वा बोलाउनुपर्छ तब आँखा बन्द गरेर उसको मात्र ध्यानधारणा गर्नुपर्छ।

( ७ ) एक अन्य महात्मा भन्दछन्—'मलाई यो कारण ठीक लागेन। के कृष्ण विषलाई पचाउन सक्नु हुन्नथ्यो ? उहाँ कालका पनि काल हुनुहुन्छ।'

कृष्णले आँखा बन्द गर्ने कारण अरू कुनै छ। उहाँको आँखामा सूर्य र चन्द्रमाको वास छ। महायोगी सूर्यमण्डललाई पार गरेर ब्रह्मलोकमा जान्छन्।

कृष्ण पूतनालाई ब्रह्मलोकमा पठाउन थालिरहनुभएको छ। यो देखेर सूर्य चन्द्रलाई ( अर्थात् भगवान्का नेत्रहरूलाई ) ठीक लागेन। आफ्ना कृष्णलाई ऊ विषपान गराउन भनी आएकी छ भने त्यसलाई ब्रह्मगति किन दिने ? यस्तो विचार गरेर आँखाले परेला बन्द गरे।

जीवलाई लक्ष्मी उपभोग गर्ने कुनै अधिकार छैन। जीवले चाह्यो भने लक्ष्मीको उपयोग गर्न सक्छ, उपभोग गर्न सक्दैन। यदि उसले उपभोग गर्न खोज्छ भने थप्पड़ खानेछ।

असल चाहिँ यही हुने छ भगवान्लाई सर्वोत्तम वस्तुहरू मात्र अर्पित गरियोस्। स्वयं खाएमा सन्तोष पाईंदैन, अरूलाई ख्वाएमा मात्र सन्तोष हुनेछ।

सूर्य-चन्द्र ( दुवै आँखा ) विचार गरिरहेछन् सर्वोत्तम वस्तु अर्पण गर्नुको साटो यस पूतनाले विष लिएर आएकी छ। यो बेस हुँदो हो यसले सद्गति नपावोस्। यस्तो सोचेर सूर्य-चन्द्ररूपी नेत्रहरूले आफ्नो प्रवेशद्वार ( परेला ) बन्द गरिदिए।

( ८ ) एक अर्का महात्माले अर्कै कारण बताएका छन्।

भगवान् सोचिरहनुभएको थियो जब यस विषदायिनी पूतनालाई म मुक्ति दिन थालिरहेको छु भने मलाई नौनी-मिश्री खुवाउने व्रजवासीहरूलाई म कुनचाहिँ गति दिऊँ, किनभने मुक्तिभन्दा बढ़ेर दिने योग्य अरू वस्तु मसँगै छैन र यस प्रकार सोचमा डुबेका भगवान्ले आँखा चिम्लिनुभो।

यस प्रकार यी महात्मा मानौं दशम स्कन्धमा भगवान्को लीलामा पागलजस्ता भएका छन्। जीव-गोस्वामी, जो पहिले कुनै राजाका मन्त्री थिए, कृष्ण-प्रेममा पागल भएर लँगौटी मात्र लाएर घुम्न थाले। सनातन गोस्वामी बंगालका जमीनदार थिए। दशम स्कन्ध सुनेपछि उनी कृष्ण-प्रेममा पागल भए र ताड़पत्रको लँगौटी लाएर लीला-निकुञ्जमा 'राधेकृष्ण, राधेकृष्ण' भन्दै घुम्न लागे।

भगवान् रामचन्द्रजीले पनि शूर्पणखासँग आँखा मिलाउनु भएको थिएन भन्ने हामीलाई थाहा छ, रामायणकी शूर्पणखा र भागवतकी पूतना एकै हुन्। दुवै वासना हुन्।

कृष्ण अब ६ दिनका भएका छन्। राधाजी अहिले आएकी छैनन्। रामजन्ममा तर सीताजी साथै थिइन्। उनलाई देखेको थियो। शूर्पणखालाई उत्तर दिएको थियो, तर यता राधाजी चाहिँ आएकी छैनन् त्यसकारण कसलाई हेरूँ?

पूतना आँखाबाट मनमा आउँछे, सुन्दर विषयहरूलाई देखेर आँखा उसका पछि भागेर जान्छ। मनलाई थाहा छ यो मेरो होइन, मलाई भेटिने होइन, तैपनि पाप गर्छ। पूतना-( कामवासना ) पहिले आँखाहरूमा आउँछे र फेरि मनमा झर्दछे।

पूतनाले यशोदालाई भनी, 'म तपाईंका बालकलाई दूध ख्वाउने छु' तब ऊ हृष्टपुष्ट हुनेछ। यशोदाले कृष्णलाई झोलुङ्गोबाट बाहिर झिकिन् र पूतनाको काखमा राखिदिइन्। पूतना सानीमा उसलाई लाड़-प्यार गर्न थाली। कृष्णलाई थाहा थियो यो लाड़-प्यार गर्न होइन, मार्न भनी आएकी हो।

पूतनाले यशोदाजीलाई भनी—'तपाईंलाई घरमा केही काम गर्नु छ भने तब जान सक्नुहुन्छ।'

सोझी यशोदा घरको काममा लागिहालिन्। यता पूतनाले कृष्णलाई दूध चुसाउन शुरू गरी। कृष्णले तब दुवै हातले स्तन समातेर बलपूर्वक चुस्न थाल्नुभो। कृष्णलाई तर दूधका साथसाथै प्राण पनि मानौं पिउनु थियो। पूतना व्याकुल भई। ऊ रोई-रोईकन भन्न लागी—'मलाई छोड़िदेऊ कृष्ण मलाई छोड़िदेऊ।'

**सा मुञ्च मुञ्चालमिति प्रभाषिणी।**

कृष्णले भन्नुभो—'पूतना सानीमा, मेरी आमाले समात्न मात्र सिकाएको छ छोड्न होइन।'

'मलाई समात्न आउँछ, छोड्न आउँदैन। म आज तिमीलाई छोड्ने होइन। म तिम्रो उद्धार गरूँला।'

भगवान्‌को मारमा पनि प्रेम छ।

परम आश्चर्य भएको छ।

पूतनाले दुइपटक मलाई छोड़िदेऊ भनी। मानौं ऊ इहलोक र परलोकमध्येबाट स्वयं आफूलाई छुटाएर गोलोकधाममा लगिदिनू भनेर प्रार्थना गरिरहेकी थिई। ऊ अहन्ता र ममताबाट छुटाएर कृतार्थ गर्नलाई भनिरहेकी थिई।

पूतना व्याकुल भई, त्यसकारण स्वरूपानुसन्धान रहेन। उसले राक्षसीरूप धारण गरी। उसले आकाशमार्गमा कृष्णलाई उड़ाएर लगी। तल कंसको बगैंचाको एउटा रूखमा कृष्णले खसालिदिए।

ऊ रूखमा खसी तब अरू पनि कति वृक्ष ढले। पूतना र वृक्षहरू ढल्नाले एउटा ठूलो आवाज आयो।

अविद्याको कारण षड्विकार उत्पन्न हुन्छ।

राक्षसीको छातीमा कृष्ण राज भएको थियो। यो आवाज सुनेर गोपिनीहरू दगुर्दै आइपुगे। यशोदालाई गाली गर्न थाले—'हामीले कति भाकल गरेका थियो तब तपाईंलाई पुत्र भयो। तपाईंलाई तर यसको कुनै वास्तै छैन।'

यशोदाले गोपिनीहरूको भनाइ सुनेर शिर निहुराइन्। उनले भनिन्—'यो मेरो पहिलो बालक हो। मलाई बालखको लालन-पालनको अनुभव छैन, भूल भइहाल्छ। अब तपाईंहरूले भनेको मान्ने छु।'

गोपिनीहरूले भने—'कुनै नचिनेकी बाहिरकी स्वास्नीमानिसलाई आफ्नो बालक कहिल्यै पनि दिनुहुन्न। जो हुनु थियो, भैगयो। अब हामी घर फर्कौं र कृष्णको सातो बोलाइदिऊँ।'

कृष्णलाई गाई बड़ी प्यारी छिन्। एउटी गङ्गी नाउँ गरेकी गाई कृष्णको दर्शन नपाई पानीसम्म पिउँदिनथिन्, घाँस पनि खान्नथिन्। जब गोपाल उसलाई मनाउँदा-मनाउँदा थाकेर यशोदाकहाँ गएर भन्थे—'माताजी, गौशालामा कृष्णलाई लानु छ।' कृष्णको दर्शन पाएपछि गङ्गी घाँस खाइहाल्थिन् र पानी पनि पिउँथिन्।

अनशन ( उपवास ) गर्नाले शरीर हलुका फूल जस्तो हुन्छ। मनमा सात्त्विकभाव जाग्दछ। विधिपूर्वक उपवास गर्नाले पाप डढ़ेर जान्छ।

बड़ाबड़ा ऋषिमुनिले जब हजारौं वर्ष तपश्चर्या गरेपछि पनि प्रभुको दर्शन पाउन सकेनन् तब गाईहरूको जन्म लिएर गोकुलमा आई बसे। उनका हजारौं वर्षका तपश्चर्याले पनि उनको अभिमान र वासनालाई खरानी पार्नसकेको थिएन। त्यसकारण उनले सोचे 'गोकुलमा गाईहरूको जन्म लिएर, आफ्नो काम, निष्काम कृष्णलाई अर्पित गरिदिनेछौं र हामी निष्काम भइहाल्नेछौं।'

गोपिनीहरूले कृष्ण लिएर गौशालामा आए र गङ्गीको पुच्छर हातमा लिई कृष्णको शरीरमा, शिरदेखि पाउसम्म, तीनपटक घुमाइदिए। 'मेरो कृष्णलाई यदि कसैको आँखा लागेको छ भने यस गङ्गीको पुच्छरमा गइहालोस्।'

गोपिनीहरू मानौं, प्रेमका ध्वजा हुन्। आफ्नो कृष्णलाई यदि केही हुन्छ भने उनलाई केही नहोवोस्, हामीलाई मात्र होस्। यिनको प्रेम विशुद्ध छ। कृष्णलाई राक्षसीको स्पर्श भयो, त्यो ठीक भएन, कहीं केही अभिष्ट भइगएको भए ? यस पटक तर हाम्रो कृष्ण बाँच्यो।

'अब कृष्णलाई स्नान गराइदिऊँ। बालकृष्णलाई राक्षसीको कुदृष्टिबाट केही नहोस् भन्ने सोचेर गोपिनीहरूले कृष्णलाई गोमूत्रले स्नान गराए।'

भागवतमा लेखेको छ—

गोमूत्रेण स्नान पयित्वा।

बजारी साबुनले होइन, गोमूत्रले स्नान गराई यो जीवनलाई सादगीपूर्ण बनाऊ। गोमूत्रको पान गर्नाले र त्यसले स्नान गर्नाले शरीर निरोगी हुन्छ। गोमूत्र बड़ो गुणकारी छ। यो अनुभवसिद्ध कुरा हो।

गोमूत्र पान गर्नाले शरीरमात्र होइन मन पनि शुद्ध हुन्छ। गोमूत्र मसिनु कपड़ाले एकसय आठ पटक छानी पिउनाले मनको मैलो निखिन्छ, मनको पाप भाग्छ र मन शुद्ध हुन्छ। यो प्रयोग ६ महीना गरिहेर्नु। गोमूत्रपानको यस प्रयोगबाट स्वभावमा ठूलो परिवर्तन हुनेछ। गोमूत्रमा दिव्य शक्ति छ। त्यसले स्वभावलाई सुधार्छ। त्यसले बुद्धिलाई पनि निरोगी गर्दछ।

गाईको गोबर छालामा दल्यो भने शरीरको अनावश्यक गर्मीलाई खिच्छ र त्वचालाई नरम बनाइदिन्छ।

जबसम्म मानिसको स्वभाव सुध्रिँदैन तबसम्म त्यसले ज्ञानमार्ग या भक्तिमार्गमा प्रगति गर्न सक्दैन।

आजकल जीवन यस्तो भएको छ मनुष्यको समय, सम्पत्ति र शक्ति, फेशन-व्यसनमा मात्र खर्च हुन्छ। व्यसन र फेसनमै आफ्नो सारा शक्तिको व्यय गरिरहन्छ, ऊ ज्ञान र भक्तिमार्गमा अगाड़ि बढ्न पाउँदैन।

कृष्णलाई पहिले गहुँत र पछिबाट तातो पानीले नुहाइदिए। भगवान् आनन्दमा हुनुहुन्छ। ऋषिरूपा गोपिनीहरू कृष्णलाई घेरेर बसिरहेका थिए।

एउटी गोपीले भनी—'अहा ! हाम्रा कृष्णका आँखा कति राम्रा छन्।' अर्कीले थपी—'यिनको कपाल पनि बड़ो सुन्दर छ।' तेस्रीले भनी—'ए साथी ! यिनका चरण कमल हेर कति राम्रा।' सबै गोपिनीहरू बालकृष्णका एक-एक अङ्गका सौन्दर्यको पान गर्न थाले।

यो ऋषिरूपा गोपिनीहरू वेदशास्त्रसम्पन्न थिए। तिनीहरू स्तुति गर्न थाले।

कन्हैया, आज भगवान् तिम्रा मङ्गलमय चरणहरूको, यज्ञपुरुष तिम्रा तिघ्राको, अच्युत भगवान् तिम्रा कम्मरको, भगवान हयग्रीव तिम्रा पेटको, भगवान् केशव तिम्रा हृदयको, ईश भगवान् तिम्रा छातीको, सूर्य तिम्रा घाँटीको, भगवान् विष्णु तिम्रा भुजाको, भगवान् वामन तिम्रा मुखारविन्दको र ईश्वर तिम्रो शिरको रक्षा गरून्।

मेरो कृष्ण जब खेलिरहेको हुन्छ, त्यसवेला गोविन्द, सुतेको वेलामा भगवान् माधव, हिँड़िरहेको वेलामा भगवान् बैकुण्ठ र बसेको वेलामा लक्ष्मीपतिले रक्षा गरून्।

छैटौं अध्यायको २२ देखि २९ श्लोकसम्म बालरक्षास्तोत्र छ।

गोपिनीहरूलाई थाहा थिएन जुन भगवान्को उनीहरू प्रार्थना गरिरहेछन् ती यिनै कृष्ण हुन्।

गोपिनीहरू अन्त्यमा भन्दछन्—भगवान् नारायणको नाउँले मेरा बालकृष्णलाई सदा रक्षा गरोस्।

गोपिनीहरू बालकृष्णलाई थपथपाउँदै प्रार्थना गरिरहेछन्। उनीहरू यशोदालाई भन्छन्, 'यसलाई दूध ख्वाउनोस् यदि यसले राम्ररी दूधखायो भने हामी मान्दछौं अब यो डराउने छैन।' बालकृष्ण स्तन पान गर्न लागेपछि गोपिनीहरू आनन्दित भए।

चतुर्दशीका दिन बेलुका नन्दबाबा गोकुलबाट फर्कनुभयो। यसै दिन पूतनाको अग्निसंस्कार पनि गरियो।

जब योगीलाई श्रीकृष्णको स्वरूपको कल्पना गर्दै प्राणत्याग गर्नाले मुक्ति पाइन्छ भने तब उहाँको साक्षात् दर्शन गर्नेलाई सद्गतिको प्राप्ति हुनु कुनै आश्चर्यको कुरा भएन।

श्रीकृष्ण बड़ो दयालु हुनुहुन्छ। विषदायिनी पूतनालाई पनि आफ्नी आमा सरह उहाँले सद्गति दिनुभयो। यस्तो दयालु अरू को हुन सक्छ ?

यो पूतना, कृष्णमिलनमा बाधा उपस्थित गरिरहन्छे। ईश्वर ६ गुणवाला हुनुहुन्छ। उहाँले षड्दोषवाली पूतनालाई छैटौं दिनमा मार्नुभयो। पूतनाका छ दोष हुन्—काम, क्रोध, लोभ, मोह, मद र मत्सर।

भगवान्का ६ सद्गुण छन्—ऐश्वर्य, वीर्य, यश, श्री, ज्ञान र वैराग्य। भगवान्का प्रत्येक सद्गुणलाई आफ्नो हृदयमा राख्न सक्ने व्यक्ति दोषरहित हुन जान्छ।

भगवान्को नाउँ त चिन्मय-धाम हो। चिन्मय-धाममा प्रवेश गर्नु छ। यस चिन्मय-धाममा प्रवेश कसरी गर्न सकिन्छ ?

जब वासनाको नाश हुन्छ तब चिन्मय धाममा प्रवेश हुन्छ। इन्द्रियहरूलाई श्रीकृष्णको लीलामा नुहाइदेऊ। इन्द्रियहरूलाई परमात्माको सम्मुख गर।

गोपिनीहरूले इन्द्रियहरूद्वारा मलाई हेर्न सकून्, सुन्न सकून्, मनमा राख्न सकून् भन्ने हेतुबाट यो गोकुल-लीला रचेको हो।

भागवतमा यस पूतना चरित्रको सिवाय अरू कुनै बाललीलाको फलश्रुति बताइएको छैन। यसको अर्थ यो हो एकमात्र यस अज्ञान-कामवासनालाई चिन्न सकिएमा पनि केही कम भएन। अज्ञान दूर भएपछि श्रीगोविन्दसँग प्रीति हुन्छ।

**गोविन्दे लभते रतिम्।**

यो पूतना मोक्ष भगवान्‌को अद्‌भुत लीला हो। यसको श्रद्धापूर्वक श्रवण-मनन गर्नेलाई श्रीकृष्णका प्रति प्रेम उत्पन्न हुन्छ। यस चरित्रको चिन्तन गर्नाले बहुतै लाभदायक छ।

यशोदा बुद्धि हुन् र नन्द जीव।

बुद्धि र जीव दुवै यदि कृष्णका साथ रहे भने कुनै विपत्ति आउँदैन।

बाललीलाको एक रहस्यमय कुरा यो छ नन्द र यशोदा ( जीव र बुद्धि ) जब-जब गोकुलबाट टाढ़ा हुन्थे तब कोही न कोही संकट परिजान्थ्यो। यसको अर्थ यही भयो जहिले पनि जीव ईश्वरबाट टाढ़ा हुन्छ दुःखी हुन्छ।

यशोदा अर्थात् बुद्धि जब कृष्णबाट टाढ़ा पर्छिन् र नन्द अर्थात् जीव जब श्रीकृष्णलाई बिर्सिन्छ, राक्षस एक्कासि आइपुग्छ।

शरीर इन्द्रियहरूलाई व्यावहारिक कार्य गर्नै पर्छ तर बुद्धि ( यशोदा ) श्रीकृष्णबाट टाढ़ा हुनु हुन्न।

यो पूतना को थिई ?

राजा बलि र रानी विन्ध्यावतीको पुत्रीको नाउँ रत्नमाला थियो। जब वामन भगवान् बलिराजाको यज्ञमा भिक्षा माग्न आएका थिए तब उनको शरीरलाई देखेर रत्नमालाको हृदयमा स्नेह जागेर आएको थियो। उसको मनमा लागेको थियो कति असल हुने थियो यदि यो बालकलाई मैले पुत्ररूप गराउन सके। म त्यसलाई दूध ख्वाएर लालन-पालन गरेर धन्य हुने थिएँ।

वामनको तेजस्वी स्वरूपलाई देखेर रत्नमालाको हृदयमा पुत्रस्नेह उम्लेर आयो तर उसले उसको पिताको जो दुर्दशा गरिदिए त्यसलाई देखेर शत्रुभाव पनि जागेर आयो र उसका मनमा वामनलाई मार्ने पनि इच्छा भयो।

अब यो वात्सल्य भाव र शत्रुभाव दुवैलाई लिएर रत्नमाला पुनर्जन्ममा पूतना भएर आई।

श्रीकृष्णको लीला निरोधलीला हो। जसको मनको निरोध हुन्छ त्यसले मुक्ति पाउँछ, जबसम्म मनमा वासना र विरोध हुन्छ तबसम्म निरोध हुन पाउँदैन। कुनै वस्तुमा सूक्ष्म वासना पनि रह्यो भने मनको निरोध हुँदैन र फलतः मुक्ति पनि पाईंदैन।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन्, श्रीकृष्णले जब शकटासुरको वध गरेका थिए तब उनको आयु एकसय आठ दिनको थियो।

कृष्णको दर्शन नगरीकन गोपिनीहरूलाई आनन्द आउँदैन थियो। तिनीहरू प्रातःकालमै कृष्णको दर्शन गर्न आउँथे।

गोपिनीहरू यशोदाजीकहाँ एक दम सबेरै आएका हुनाले उनले भनिन्—'ए बहुलाही हो ! के मेरो कृष्णलाई नहेरिकन तिमीहरूलाई चित्त बुझ्दैन ? ऊ सुतिरहेछ। यति छिटो तिमीहरू किन आएका ? उसलाई हेर्नुछ हेर। तर धेरै ठूलो स्वर नगर नत्र त्यो ब्यूँझन्छ।'

गोपिनीहरू कृष्णलाई देखेर आनन्दविभोर भए। एउटीले भनी—'सुतिरहेको कृष्ण कति राम्रो देखिएको ?' अर्कीले भनी—'कृष्णको कपाल कति बाक्लो र कालो छ।' दोस्रीले भनी—'उसका औंलाहरू कति कमला छन्।' एउटी गोपीले भनी—'कृष्णको चरण यति कमलो छ पखाल्न मन लाग्छ।' एउटी गोपिनीले कृष्णको आँखाको कुरा गर्न थाली तब अर्कीले ओठका लालीको बयान गरी।

यी कुराहरू गोपिनीहरूले गरेको होइन, भक्तिले गरिरहेका थिए। गोपिनीहरू भक्तिमार्गका आचार्य हुन्। भक्ति कसरी गर्ने, त्यो गोपिनीहरूले देखाएका छन्। यदि तिमीलाई भक्ति गर्नु छ भने परमात्माको अङ्ग-अङ्गको चिन्तन गर।

कृष्णका सबै अङ्गहरूमा दृष्टिलाई स्थिर गर्नु पनि भक्ति हो। स्वरूपाशक्ति भक्ति फलवती हुँदैन। भगवान्‌को स्वरूप चित्र हृदयमा ल्याऊ। भगवान्‌को आकार मनमा जम्यो भने तब दर्शनमा बड़ो आनन्द आउँछ।

जबसम्म भगवान्‌को स्वरूपसँग आसक्ति हुँदैन तबसम्म संसारको आसक्तिबाट छुट्कारा पाईंदैन।

श्रीकृष्णले आफ्नो सौन्दर्य-तेजबाट गोपिनीहरूको दृष्टिलाई र बाँसुरीको मधुरवादनबाट कानलाई आकर्षित गरेको थियो। गोपिनीहरू कृष्णकै कुरा गर्थे र कथा सुन्दथे।

कृष्णलीलामा, कृष्णकथामा जगत्‌को विस्मृति हुनजान्छ। भगवान् भन्नुहुन्छ 'जो व्यक्ति मेरो भजन र सेवा गर्छ उसका प्रति मेरो ठूलो स्नेह हुन्छ।'

जब यादवहरूको विनाश भएको थियो तब कृष्णका आँखाबाट आँसुको एउटा थोपो पनि झरेको थिएन।

कृष्णले कोल्टो फेरेपछि अङ्ग-परिवर्तन नाउँको उत्सव मनाइयोस्।

परमात्मालाई घरमा स्थापित गरेपछि सदा उत्सव गरिरहेमा उहाँ सदा तिम्रो घरमा बस्नु हुनेछ। भगवान् श्रीकृष्णको उत्सवका दिन मन, शक्ति र वाणीको सदुपयोग गर। भगवान्‌को स्मरण पनि

दिनभरि गर्नु, उत्सवका दिन प्रभुसेवामा देहभानसम्म बिर्सिदिनुपर्छ। यस दिन आफ्नो आँखाबाट प्रभुप्रेमको व्याकुलतामा यदि दुईथोपा आँसुसम्म खसेन भने तब उत्सव मनाउनु व्यर्थै हुनेछ।

उत्सवका दिन विद्वान, वेदज्ञाता, सच्चरित्र ब्राह्मणको सम्मान गर। केवल नाता-गोतालाई मात्र होइन, गरीबलाई पनि भोजन देऊ। गरीबलाई सन्तुष्ट गर्नाले प्रभु प्रसन्न हुनुहुन्छ। सच्चा साधु-संन्यासीलाई पनि भोजन गराऊ।

स्वयं पनि भोगोपभोग गर्दै रहनुको साटो आवश्यकता सम्झने मानिसहरूलाई पनि केही न केही दिएर पुण्य प्राप्त गर।

'उत्' को अर्थ हो ईश्वर र 'सव' को अर्थ हो प्राकट्य। उत्सवको अर्थ भयो ईश्वरको प्राकट्य। जब ईश्वर हाम्रो हृदयमा प्राकट्य हुनुहुन्छ, तब उत्सव जस्तै भयो।

जिब्रो प्यार गर्नलाई मात्र नभएर परमात्माका साथ एक हुने उत्सवको लागि हो। उत्सव प्रभुका साथ तल्लीन हुनका निमित्त मनाउनु छ लाडप्यारका लागि मात्र होइन।

यशोदाले अङ्ग-परिवर्तन-उत्सव मनाउन चाहिन्। उनले विचार गरिन्—'यो ठीक हो म प्रत्येक दिन ब्राह्मणहरूको पूजा गर्दछु तर जुन गोप-गोपिनीहरूको आशीर्वादले पुत्र पाइयो, उनैको आज म पूजा गर्ने छु।'

यशोदा यस्तो भन्दिनन् गरीबलाई दान दिनु छ। प्रत्येक जीव ईश्वरको अंश हो, ईश्वरकै पुत्र हो। कुनै जीवलाई गरीब भन्नाले ईश्वरले नराम्रो मान्नु हुन्न र?

नम्रतापूर्वक, दीनतापूर्वक आँखा निहुराएर दान गरियोस्। लिनेवाला पनि एक जीव हो, उसको हृदयमा पनि परमात्माको वास छ, यस्तो संझेर दान गर। यसै कारणले यशोदा दान दिने नभनेर पूजा गर्ने, सम्मान गर्ने कुरा गर्दछिन्।

सहायता गर्नु एउटा कुरा हो र पूजा गर्नु अर्कै कुरो। दुवैमा भावात्मक अन्तर छ।

कृष्णको प्राकट्यका दिन यशोदाजी गोपिनीहरूलाई उपहार दिन गएकी थिइन्। त्यस दिन गोपिनीहरूले भनेका थिए—'आज चाहिँ हामी केही लिँदैनौं, कृष्णलाई दिनुपर्छ।' त्यस दिन उनीहरूले केही लिएका थिएनन्।

जहाँ लिने इच्छा हुन्छ त्यहाँ मोह हुन्छ र जहाँ दिने इच्छा हुन्छ त्यहाँ प्रेम।

यशोदा भन्दछिन्, 'आज मलाई सबै ब्रजवासीहरूको पूजा गर्नु छ।' उनले सारा गाउँलाई निम्ता पठाइन्। नन्दजीले पनि भने, 'विना सङ्कोच देऊ।' जबदेखि कृष्ण घरमा आएको छ, खबरसम्म छैन घरमा कसले लक्ष्मी छोड़ेर जान्छ।

लक्ष्मीजी त्यसबेला गइहाल्छिन् जब मनुष्य उनको दुरुपयोग गर्न थाल्छ।

जीवनमा एउटा यस्तो अवसर आउँछ जब भाग्य अनुकूल हुन्छ, भाग्योदय हुन्छ। यस्ता वेलामा बड़ो प्रेमसँग दान गर। निःसङ्कोच दिँदै जाऊ। जे दिनेछौ त्यो दुगुना भएर फर्किनेछ र जब

भाग्य प्रतिकूल हुनेछ, तब सम्पत्तिलाई जोगाएर राख्न लाख प्रयत्न गरे पनि सबैथोक सिद्धिएर जान्छ।

भाग्य प्रतिकूल भएकाले धर्मराज युधिष्ठिर पनि दरिद्र भएका थिए र उनलाई वन-वन भौंतारिनुपरेको थियो। साधारण मानिसको तब चर्चै किन गर्ने ? नल राजालाई पनि कुनै वेला सर्वस्व गुमाउनुपरेको थियो।

जे पनि पाइयोस् सत्कर्महरूमा खर्च गर्दै जाऊ। सुपात्रलाई दान दिँदै जाऊ।

आज भाग्य अनुकूल थियो र यशोदाजी मन फुकाएर दान गर्न थालिन्। पीताम्बर, सारी र आभूषणको थुप्रो लुटाइदिइन्।

यशोदाले सोचिन्—कृष्ण सुतेपछि म राम्ररी दान दिन सकूँ। ऊ बिउँझिरह्यो भने उसलाई मैले काखमा लिइरहनुपर्ने भएकाले बसिरहनु पर्नेभो। सेवकले सम्मान गर्दै रहने भए। सबै दानभन्दा मान दान श्रेष्ठ हो। उनी सोचिरहेकी थिइन् 'यदि कृष्ण ब्यूँझिरहेको रहेछ भने सबैको आदर कसरी गर्न पाउँला ?'

जब गरीबहरू र पवित्र ब्राह्मणहरूको सम्मान गरिन्छ तब परमात्मालाई बड़ो आनन्द आउँछ। ईश्वर जब कसैलाई पनि सम्पत्ति दिनुहुन्छ तब यस्तो पनि आशा गर्नुहुन्छ उसले अरूहरूको पनि पालन-पोषण गरोस्।

कृष्णले आँखा बन्द गरे पनि भित्रभित्रै ब्यूँझै हुनुहुन्थ्यो। 'मैले सुतिदिनाले मातालाई आनन्द हुन्छ भने म सुतिदिन्छु।' भगवान्‌लाई नाटक गर्ने धेरै बानी छ। यसै कारणले उहाँको एक नाउँ नटवर पनि हो। आमालाई देखाइरहनु भएको छ सुतिरहेको छु भनेर।

कृष्णको ब्यूँझने र सुत्ने विषयमा 'शङ्कर भाष्य'मा भनेको छ—'यसो तर ईश्वर निष्क्रिय हो तर जीव मायाका कारणले क्रियाको आरोप गर्दछ। ईश्वर क्रिया गर्न चाहिँ गर्दैन तर मायाका कारणले क्रियाको आरोप गरिन्छ।'

जब हामी रेलमा बसेर कहीं जान्छौं तब भन्दछौं फलानो शहर आयो तर हामीले सोच्यौं भने यो कुरा बुझिन्छ न कोही शहर आउँछ र न कोही शहर जान्छ। रेलले हामीलाई एक स्थानबाट अर्को स्थानमा लगिरहेछ।

यसै प्रकार ईश्वर कुनै क्रिया स्वयं गर्दैनन् उनी तर लीला मात्र गर्छन्। लीला निःस्वार्थ भएका कारणले आनन्दरूप हुन्छ।

क्रिया र लीलामा अन्तर छ। जसका साथ कर्तृत्वको अभिमान र सुखी हुने इच्छा हुन्छ त्यो क्रिया हो, जसका साथ कर्तृत्वको अभिमान छैन तथा अन्यलाई सुखी तुल्याउने इच्छा छ त्यो हो लीला। जीव जे-जति गर्छ त्यो क्रिया हो र ईश्वर जे-जति गर्नुहुन्छ त्यो सबै लीला हो।

यशोदाजीले सोच्नुभयो—'मकहाँ आज सारा गाउँ उर्लिएर आउने छ त्यसकारण कृष्णको झोलुङ्गो यदि बाहिर गाड़ामन्तिर राखें भने घरमा ठाउँ बढ्ला।' सबै गोपिनीहरू आउने भएका

थिए। त्यसकारण स्थानाभावको कारण यशोदाजीले कृष्णलाई पलना ( झोलुङ्गो ) गाड़ाका तल राखिदिइन्। त्यस गाड़ामा दही-दूध आदि पनि थियो।

यशोदाले एक-एक गरेर सबै गोपिनीहरूको आदर गर्न लागिन्। गोपालबालकलाई पनि सुन्दर कण्ठमाला दिएको थियो। जसले सबै माताहरू प्रसन्न हुँदै जान्थे। गोपिनीहरू कृष्णलाई हार्दिकतापूर्ण आशीर्वाद दिँदै गइरहेका थिए।

'बालकृष्णाको जय' भन्ने वाणी सुनिन्थ्यो।

सबै आएका ब्रजवासीहरूको आदर सम्मान गर्दै यशोदाजी आनन्दमा लीन भइन्।

यता बालकृष्णको निद्रा खुल्यो। 'कहाँ छन् मेरी आमा?' उनी उत्सव मैरै मनाइरहेकी होलिन्, मलाई यहाँ आँगनमा गाड़ामुनि छोड़िराखेको छ।

उत्सवका दिनमा भगवान्‌लाई बिर्सिदिनु ठीक भएन। यशोदाजीले उत्सवको दिनमा श्रीकृष्णलाई बिर्सिदिनाले विपत्ति आयो।

व्यवहारबाट छुट्कारा पाइने होइन यसलाई बेहोर्नै पर्छ। जबसम्म केही न केही अपेक्षा छ, व्यवहार पनि चल्दै रहनेछ। व्यवहार छोड्ने होइन र व्यवहार-पालन कोही अपराध पनि होइन। तर व्यवहार मात्रै चलाइरहने, व्यवहारमय बन्न जाने, व्यवहारमा भगवान्‌लाई बिर्सने काम अपराध मात्र हो। धन्धा-व्यापार अपराध होइन तर उसैमा लीन भएर भगवान्‌लाई बिर्सिदिनु अपराध हो।

व्यापारी पसलमा भगवान्‌को फोटो पूजा गर्छ तर ग्राहकका साथ कुरा गर्दा भगवान्‌लाई बिर्सिदिन्छ। उसले ग्राहकलाई ईश्वरको उपस्थितिमै ठगिदिन्छ। उसले ग्राहकलाई पाँच रुपियाँको वस्तु पच्चीस रुपियाँमा बेच्दछ र फेरि भन्दछ—'तिमी मेरा चिने जानेका मानिस हौ म विनानाफा बेचिरहेछु।' लिनेले विचार गर्छ—'यो पसले चिनेको हो। परेको मोलमा माल दिइरहेछ।' ग्राहक विचरालाई के थाहा असली भाउको अर्थ बेपारीले अर्कै के लगायो? पसलेको मतलब—*'तुँ पड़वानो अने हुँ तरवानो'* अर्थात् तिमी गाड़िने छौ म तर्नेछु।

हामी सबैको लक्ष्य हो कृष्णमिलन। यस लक्ष्यलाई सदा ध्यानमा राखेर मात्र सारा व्यवहार चलाउँदै गर।

ज्ञानी महात्मा पनि व्यवहार गर्दछन् तर ईश्वरलाई कहिल्यै बिर्सँदैनन्।

गोपिनीहरूको सम्मान गर्दा यशोदाजीले श्रीकृष्णलाई बिर्सिन्।

धेरै मानिसहरू यस्ता छन् जो उत्सवका समय ठाकुरजीलाई बिर्सिदिन्छन्। 'ए! ठाकुरजीका निमित्त मात्र उत्सव हो भने उहाँलाई किन बिर्सिन्छौ। व्यवहारको कारोबार गर्दा-गर्दै पनि भगवान्‌लाई हेरिरहनुपर्छ। घर व्यवहार गर्दा पनि दृष्टि भगवान्‌मै लागिरहनुपर्छ।'

जब कुनै पाहुना हाम्रा घरमा आउँछन् तब उनलाई प्रसन्न गर्नका निमित्त उनीसँग बराबर कुरा गर्दछौं। जसप्रकार अरू कामकाज गर्दा पनि हाम्रो ध्यान पाहुनापट्टि लागिरहन्छ, उसै प्रकार भगवान्प्रति हाम्रो मन र ध्यान सदैव लागिरहनुपर्छ।

प्रभुसेवाको कुनै अन्त छैन। देहविलय भएपछि मात्र सेवाको समाप्ति हुन्छ। सत्कर्म गर्न चाहिँ सदा असन्तुष्ट रहू। बाँचुञ्जेल सेवालाई समाप्ति गर्नेवाला व्यक्ति साँचो ( पक्का ) वैष्णव होइन।

गोपिनीहरूको सम्मान गर्दा यशोदाजीले कृष्णलाई बिर्सिदिइन् र उनलाई नराम्रो लाग्यो। कृष्णले ठट्टा गर्ने विचार गर्नुभो र रुन थाल्नुभो। तर आमाले सुन्न सकिनन्। उहाँ हातगोड़ा हल्लाएर रुन लाग्नुभो। रुँदा-रुँदै उहाँले देख्नुभो गाड़ामाथि पूतनाको दाजु शकटासुर बसेको छ।

शकटासुर आफ्नी बहिनी पूतनाको मृत्युको बदला लिन भनी आएको थियो। कृष्णले सोच्नुभो 'यो शकटासुर पनि कंसकै कठपुतली हो।'

कृष्णले जोडसित गाड़ीलाई एक लात हानिदिँदा गाड़ा पल्टियो, दूध-दही सबै भूइँमा छताछुल्ल भयो र शकटासुर पनि गाड़ातल्तिर थिचिएर मऱ्यो।

वहाँ यस्तो भानिज हुनुहुन्छ जो कंस मामाका सबै खेलौनालाई भताभुङ्ग पारिदिनुहुन्छ।

गाड़ी पल्टिएपछि ठूलो आवाज आयो। सबै दौड़िँदै आए। बालकहरूले भने कृष्णको एकलातले यो गाड़ालाई पल्टाइदिएको छ।

यस प्रसङ्गमा पनि एक रहस्य छ। यदि तिमी पनि प्रभुलाई आफ्नो संसार गाड़ामुनि राख्छौ भने तिम्रो गाड़ा पनि उहाँले पल्टाइदिनुहुनेछ। मुख्य वस्तुलाई गाड़ामथि राख र गौण वस्तुलाई गाड़ाको तल्तिर।

जसको जीवनमा प्रभुको स्थान गौण छ त्यसको संसार-गाड़ा पल्टिन्छ।

गृहस्थाश्रम पनि एउटा गाड़ी हो र पति-पत्नी त्यसका पाङ्ग्रा। यस गाड़ामा श्रीकृष्णलाई राज गराओ। जीवनरथका सारथी हुनुहुन्छ श्रीकृष्ण। यस जीवनरथका अश्व हुन् हाम्रा इन्द्रियहरू।

प्रभुसँग प्रार्थना गर—नाथ !, म तपाईंको शरणमा आएको छु। जुन प्रकार हजूरले अर्जुनको रथको सञ्चालन गर्नुभएको थियो सोही प्रकार मेरो जीवनरथको सारथी बनिदिनुहोस् र सन्मार्गमा लगिदिनुहोस्।

जसको शरीररथको सञ्चालन प्रभुको हातमा छैन, उसको सञ्चालन मन गर्दछ र मन एक यस्तो सारथी हो जो जीवन रथलाई पतनको खाड़लमा खसालिदिन्छ। यदि तिम्रो गाड़ा परमात्माको हातमा छैन भने इन्द्रियरूपी घोड़ाले त्यसलाई पतनको खाड़लमा खसालिदिन्छ।

अर्जुनको जीत यसै कारणले भएको थियो जो उनले परमात्मालाई सारथी पद दिएका थिए, मनलाई होइन।

केही मानिसहरू मान्दछन् 'आज छुट्टी छ, सारा दिन मीठो-मीठो खानापिना गर्ने, सुतिरहने', तर यो चाहिँ कुम्भकर्णको जस्तो कुरा भयो। यस्तो कहिल्यै नगर्नू। रविवार वीर हुने वार हो। रविवारका दिन तेल, खोर्सानी, अचार आदि खानुको साटो दूध र भात खानु। सारा सप्ताह धेरै

कुरा खाइएको छ। त्यसकारण छुट्टीका दिन सात्त्विक आहार गर्नु र दिनभरि जपमाला फिराउनू। रविवारका दिन ब्रह्मचर्यको पालन गर्नू।

रविवारका दिन एक गृहस्थ कथा सुन्न भनेर हिँड्यो तर उनको छोरो रुन थाल्यो। दुलहीले भनी त्यो बच्चा जब रोइरहेछ तब तपाईंले कथामा जानु ठीक छैन। उसलाई रुवाउँदै छोड़ी कथामा गएर कुन चाहिँ पुण्य कमाउने होला? अनि त्यो गृहस्थले सोच्यो, 'मैले सुनेको छु कसैको मनलाई दुखाइदिनु, असल होइन। म यदि कथामा गएँ भने मेरी पत्नीलाई दुःख हुनेछ।' उसले यस्तो सोचेर कथामा जाने कुरा छोड़िदियो।

असल हुँदो हो यदि उनीहरू सबै घरमा बसेर विष्णुसहस्रनामको पाठ गर्थे। तर उसलाई संझना भयो 'अमुक चलचित्रको यो अन्तिम सप्ताह हो। कथा दिनदिनै हुँदै गर्छ तर यो सिनेमा गइहाल्छ।' तिनीहरू सबै कथामा जानुसाटो चलचित्रमा गएर बसे।

पति-पत्नीको सम्बन्ध केवल विलासिताको निमित्त होइन, प्रभु-भजनका निमित्त हो। गृहस्थको जीवनमा काम-सुख होइन, भगवतसेवा मुख्य हो। मनुष्यको जीवनमा भोगको होइन, भगवान्‌को प्रधानता हुनुपर्छ। गाड़ा कुनै टेढ़ो बाङ्गो बाटामा पुग्नासाथ पल्टिन्छ। भगवान्‌लाई गाड़ामुनि होइन माथ्तिर बसाऊ।

यशोदाजीले भगवान्‌लाई गाड़ामुनि राखिदिइन् र दूध-दही-मक्खन आदि सांसारिक भोग-पदार्थ गाड़ामाथि। उनले भगवान्‌लाई गौण स्थान दिइन् र सांसारिक भौतिक पदार्थलाई मुख्य। त्यसकारण सारा गाड़ा पल्टियो।

तिम्रो जीवनमा कामसुख प्रधान बन्नेछ र भगवान् गौण। अनि तिम्रो जीवनरथ पल्टिने पक्का भयो।

भगवान्‌लाई गाड़ामुनि राख्यौ भने शकटासुर गाड़ामाथि चढ्ने छ।

दूध, दही, नौनी आदि भोगपदार्थका प्रतीक हुन्। जसको जीवनमा भौतिक पदार्थहरूको प्रधानता छ उसको जीवनगाड़ामा शकटासुर सवार हुन्छ।

दाम्पत्य-जीवनमा धर्मको प्राधान्य हुनुपर्ने हो। पत्नीलाई काम-पत्नी होइन धर्म-पत्नी भनेको छ। प्राथमिकता धन र काम सुखलाई होइन, धर्मलाई दिइयोस्।

जबदेखि हामीले धनलाई मात्र सबै कुरा मानिआएका छौं तबदेखि जीवनमध्येबाट शान्ति हराएर गइरहेछ। धनलाई प्रमुखता दिनाले सदाचार गएको छ। धनको अपेक्षा संयम र सदाचार ज्यादा सुखदायी छ। धन यदि मर्यादाबाट सीमित भयो भने शान्ति आउनेछ।

जीवनमा चार पुरुषार्थ बताइएका छन्—धर्म, अर्थ, काम र मोक्ष। यिनका क्रममा पनि एक विशिष्ट तारतम्य छ। धर्म र मोक्षका बीच छ अर्थ र काम। अर्थ र कामको प्राप्ति धर्म र मोक्षको मर्यादामा रहेरै गर्नुपर्ने हो। अर्थ र काम गौण छन्, धर्म र मोक्ष प्रधान। यदि धर्म र मोक्ष गौण भयो भने जीवन-रथ अधोगति भएर खाड़लमा जाकिने हुन्छ।

जीवनमा लौकिक सुखको प्राधान्यता हुन जाने छ तब शकटासुर सवार भइहाल्नेछ।

एक सन्तको मतानुसार, शकटासुरको वधलीलाको समय श्रीकृष्णको उमेर एक सय आठ
नको थियो। जब तिम्रो शिरमा शकटासुर सवार होला तब एक सय आठ मोतीको माला लिएर
ावान्‌को नामको जप गर।

लौकिक व्यवहारलाई प्रधानता तथा श्रीकृष्णलाई गौणता दिनासाथ काम, क्रोध, लोभ,
ह आदि शकटासुर धम्म आइपुग्छन्। जीवनमा श्रीकृष्णलाई प्रधानता दिनाले शकटासुरको
र निर्मूल हुनेछ।

केही मानिसहरू भन्छन् 'कथा श्रवणका विनै यौवन गुमाइ दियौं' अब यो शकटासुर तल
र्झने नावैं लिँदैन।

श्रीकृष्ण शकटासुरको वध अवश्य गर्नुहुन्छ। यसका निमित्त तिम्रा हृदयमा काम, क्रोध,
भ, मोहरूपी शकटासुर सवार होला अनि माला लिएर नारायण नामको जप गर्न थाल्नू।

मालाका साथ मैत्री भएपछि शकटासुरलाई निरूपद्रवी हनुपुर्ने छ। मालाका साथ सम्बन्ध
ग्न भने तब शकटासुर सवार भइहाल्ने छ। काम, क्रोध आदिको सामना गर्नुपर्ने हुनाले परमात्माको
श्रय लिनुपर्नेछ।

अब आउँछ तृणावर्त बधको प्रसङ्ग—

कुनै एक दिन यशोदाजी श्रीकृष्णलाई आफ्ना काखमा बसाएर प्यारो गरिरहेकी थिइन्।
स समयमा तृणावर्तलाई मार्न भनी भगवान्‌ले आफ्नो भार बढाउनु भयो। यशोदाजीले भार
ग्न नसकी कृष्णलाई भूईंमा राखी दिइन् र घरको काममा लागिन्। तृणावर्त हुरीको रूप लिएर
यो र श्रीकृष्णलाई हरण गरेर आकाशमा उड़ाएर लाग्यो। भगवान्‌ले आफ्नो भार बढ़ाइदिनुभयो
ृणावर्तलाई समात्नु भयो। तृणावर्तको प्राण-पखेरू उड़िगयो।

## तृणावत् जीवं आवर्त स तृणावर्तः।

रजोगुणको चक्कर नै तृणावर्त हो। काम र क्रोध हुन् रजोगुणका पुत्र। रजोगुण भनमा
उनासाथ मन चञ्चल हुन्छ। तृणावर्तरूपी आँधी मनमा आउनासाथ त्यो चञ्चल भइहाल्छ। बुद्धि
र ईश्वरबाट विमुख हुन्छ तब तृणावर्त-रजोगुण मनमा छिरिहाल्छ र उसलाई चञ्चल बनाइदिन्छ।

यशोदाजीको आँखाभित्र धूलो पस्यो।

जब सांसारिक सौन्दर्यलाई हेर्दामा सुख पाउन थालिन्छ अनि ठान आँखाहरूमा तृणावर्त
एर बसेको छ र फेरि भगवान् दर्शन दिनुहुन्न।

कृष्ण विस्तार-विस्तार ठूलो हुँदै गए। घुँड़ाको सहाराले उनी गौशालामा पनि पुगिहाल्थे।
ै गाईहरू पनि उनलाई चिन्थे।

कति महान् ऋषिहरू पनि गोकुलमा गाईको अवतार लिएर आई बसेका थिए। एउटा सानो बाच्छो थियो। त्यो पनि सानो थियो र कृष्ण पनि सानै थिए। कृष्ण उसलाई आफ्नो साथी मान्दथे। त्यो बाच्छो 'हम्मा हम्मा' गर्थ्यो तब कृष्ण पनि 'अम्मा अम्मा भन्थे।'

कृष्ण त्यो बाच्छादेखि छुट्टिँदै-छुट्टिँदैनथे। गाई पनि आनन्दावेशमा बाच्छालाई बिर्सिएर कृष्णलाई चाट्न लाग्थे।

यशोदालाई विश्वास हुन थाल्यो गाईको सेवा गरेकीले यसको फलस्वरूप उनका आशीर्वादले मलाई पुत्ररत्न प्राप्त भएको छ। जो गाईको सेवा गर्छ उसले पुत्र पाउँछ। कृष्ण तर ती गाईहरू र बाच्छाहरूका साथमा खेलिरहन्थे। उनी गाईहरूको पुच्छर समातेर उभिने कोशिश गर्न थाले।

आमा भन्थिन् 'ए कृष्ण, तँ बड़ो बदमास छस्। यी गाईहरूले तँलाई हान्नेछन्।' कृष्णाको एउटा अरू नाम कायम भयो— *'वत्सपुच्छावलंवनम्।'*

एकपटक यशोदाजी कृष्णलाई दूध ख्वाइरहेकी थिइन्। उनको राम्रो मुहार हेरिरहेकी थिइन्। आमाको प्रेमलाई देखेर कृष्ण बेसरी दूध चुस्न लागे। बालकले धेरै दूध खान लागेपछि आमालाई चिन्ता हुन थाल्छ कहीं प्यारो बालक बिरामी नहोस्।

जबसम्म वैष्णवको हृदयमा प्रेम उम्लिएर आउँदैन तबसम्म प्रभु भोका हुँदैनन्। उनको प्रार्थना गर—नाथ म तपाईंलाई के भोजन गराऊँ ? तपाईं सारा जगत्‌को अन्नदाता हुनुहुन्छ। तैपनि मैले जे थोर बहुत सामग्री तयार गरेको छु, स्वीकार होस्।

कृष्णले धेरै दूध खाइदिँदा यशोदा चिन्ता गर्न थालिन्। कृष्णले भने—माता तपाईंको दूध म एक्लैले खाएको छैन। मेरा मुखभित्र अटाएका सारा विश्व, तपाईंकै दूधपान गरिरहेछन्।

कृष्णले—'हाई' गर्न मुख खोले र यशोदाजीलाई समग्र ब्रह्माण्डको दर्शन गराए। कृष्णले आमालाई भने—तपाईंले मलाई मात्र दूध ख्वाएको होइन अनन्त जीवहरूलाई दूध ख्वाउनु भएको छ। समग्र ब्रह्माण्डलाई तपाईंले दुग्धपान गराउनु भएको छ।

भगवान्‌ले सुदामालाई अपार सम्पत्ति दिएकोमा यमराजलाई चिन्ता भयो। उनले भगवान्‌लाई भने—सुदामाको भाग्यमा दारिद्र्यको योग छ। उनको भाग्यमा सम्पत्तिको क्षय लेखेको छ। तपाईंले यति धेरै ऐश्वर्य दिएर ठीक गर्नु भएन। कर्ममर्यादा भङ्ग हुने छ। कर्मानुसारले सुख-दुःख दिइन्छ।

प्रभुले यमराजलाई भन्नुभयो, 'म वेदोक्त कर्ममर्यादा नाघ्न चाहन्नँ। जसले मलाई भोजन गराउँछ, उसले समस्त ब्रह्माण्डलाई पनि भोजन गराउँछ। एक मुट्ठीभर कनिका मलाई ख्वाएर सुदामाले सारा विश्वलाई भोजन गराएका छन्।'

जसले श्रीकृष्णलाई भोजन गराउँछ उसले सारा विश्वलाई अन्न दान गर्दछ र उसको नाममा पुण्य जम्मा हुन्छ। भगवान् मर्यादालाई कहिले भङ्ग गर्नुहुन्न।

कृष्णले यशोदाजीलाई भने—माता, तपाईंले केवल मलाई मात्र होइन समस्त ब्रह्माण्डलाई तृप्त गराइरहनु भएको छ।

गर्गाचार्य नामकरण विधि, नामकरण संस्कार सम्पन्न गर्नका निमित्त आए।

संस्कारबाट मन शुद्ध हुन्छ। संस्कारबाट दोष नष्ट हुन्छ।

शास्त्रले सोह्र संस्कारहरूको आयोजना गरेको छ। आजकाल तर प्रायः सबै संस्कार लोप भइसकेका छन्। हो, दुइ संस्कार बाँकी छन्—विवाह र अग्नि संस्कार।

बालकको जन्म हुनासाथ जातकर्म संस्कार गरिन्छ तर आजकल बालकको जन्म प्रसूतिगृहमा हुन्छ। त्यसकारण जातकर्म विधि कसरी होला र? त्यहाँ मधुप्राशनविधि पनि कसरी होला? के थाहा पाउनु डाक्टरले के पियाउँदा हुन्। यसै कारण संस्कारहरूको लोप भइरहेछ। फलतः देश दुःखी भइरहेछ।

अन्नप्राशन, नामकरण, यज्ञोपवीत आदि सोह्र संस्कार उल्लेख भएका छन्। जीवको शुद्धिलाई संस्कार आवश्यक छ। आजकल सबै धार्मिक विधिहरूलाई गौण मानिएका छन्। केवल लौकिक आचारलाई मात्र महत्त्व दिन थालिएको छ। ब्राह्मणलाई भन्दछन्—'महाराज, पूजा अलि छिटो गराइदिनुहोला। किनभने जन्तीलाई घुमाउनु पर्ने छ।'

गर्गाचार्यले भने, 'यदि नामकरण संस्कार राम्ररी गर्नु छ भने आधा दिन लाग्छ। नन्द बाबा, तिमी सारा गाउँलाई बोलाई लाऊ। उनीहरू सबै यहाँ आएर मलाई छिटो गर भन्लान्। तब विधि ठीक ढङ्गबाट हुन सक्दैन।'

नन्दजी—'धार्मिक विधि तर ठीकसँग हुनैपर्छ। तपाईंले भन्नुहुन्छ भने म कसैलाई पनि बोलाउँदिनँ।'

एकान्तमा नाम-जप हुन सक्छ। 'एकान्त'-को भावार्थ हो एक मात्र ईश्वरमा सबै प्रवृत्तिहरूको लय हुनु। मनलाई पूर्णतः एकाग्र गरेर मात्र नामजप गर।

गर्गाचार्यको ज्योतिष-विद्याको जाँच गर्ने कुरा चल्यो।

श्रीकृष्णलाई रोहिणीको काखमा बसाए र बलरामलाई यशोदाजीको काखमा।

गर्गाचार्यले भने—नन्दजी, रोहिणीको काखमा बसेको पुत्र तपाईंको हो। उसले सँधैं रङ्ग (वर्ण) फेर्दै आइरहेछ। यसपटक यसले श्यामवर्ण धारण गरेको छ। उसले सबैको मनलाई आकर्षित गर्ने छ र सबैलाई आनन्द दिनेछ। उसको नाउँ कृष्ण राखियोस्। यो बालक महाज्ञानी हुनेछ। यसको जन्माक्षर बड़ो राम्रो छ। यसका पाँच ग्रह उज्ज्वल क्षेत्रमा छन्। आठ ग्रह राम्रा छन्। एउटा राहू मात्र खराब स्थानमा छ।

नन्दबाबा आत्तिए। राहू खराब स्थानमा छ। 'के होला मेरो छोरालाई?'

गर्गाचार्य—त्यसो तर डराउने केही कुरा छैन। जसको सप्तम स्थानमा, नीच क्षेत्रमा राहू छ, त्यो पुरुष कैयौं स्त्रीहरूको पति हुन्छ।

नन्दजी—'तपाईंको कुरा ठीक हुन सक्छ। एउटा ब्राह्मणले मलाई आशीर्वाद दिएका थिए तिम्रो पुत्र सोह्र हजार रानीहरूको पति हुनेछ।'

गर्गाचार्य—'बाबा, अरू कुरा म के भनूँ? यो बालक, नारायण जस्तै छ। नारायण मेरा इष्टदेव हुन्। प्रेमका कारण पक्षपात हुन जाला भन्ने डर लाग्छ।'

कुनै समय चार व्यक्ति भोजन गरिरहेका थिए। कुनै स्त्रीले आएर सोधिन्—'यीमध्ये कुनचाहिँ ज्वाईं होला?' एउटाले भन्यो—'जो चाहिँ धेरै लाज मान्ने हुन्छ उही ज्वाईं हुनसक्छ।' अर्कोले भन्यो—'त्यो जो अकड़िएर बसेको छ उही ज्वाईं हो।' तेस्रोले भन्यो—'जब सासू पस्कन आउलिन् अनि थाहा पाइहालिन्छ।' सासूजी जब घिउ दिन आइन् तब ती चार व्यक्तिहरूमध्येबाट एउटालाई धेरै घिउ दिइन्। उही ज्वाईं थियो।

सनातन गोस्वामी भन्नुहुन्छ—नारायणको समान श्रीकृष्ण हुनुहुन्छ, यसो भन्नाले नारायण श्रेष्ठ मानिने हुनुभो। बरु यसो भन्नुपर्‍यो नारायणको समान श्रीकृष्ण हुनुहुन्न, श्रीकृष्णको समान नारायण हुनुहुन्छ। वृन्दावनका साधु भन्दछन् नारायण समान होइन, तर नारायण श्रीकृष्णजस्तो हुनुहुन्छ।

नारायणको समान कृष्ण हुनुहुन्छ। यसको अर्थ हुने भयो नारायण वरिष्ठ हुनुहुन्छ। श्रीकृष्णका समान नारायण हुनुहुन्छ। यसो भन्नाले नारायण होइन, श्रीकृष्ण वरिष्ठ हुनेछन्।

त्यसो तर श्रीकृष्ण र नारायणमा कुनै अन्तर छैन। यी सबै कुराहरू मधुर आग्रह मात्र हो। नारायणमा साठी र मुरलीमनोहर श्रीकृष्णमा चौंसट्ठी गुण बताएका छन् अर्थात् नारायणको अपेक्षा श्रीकृष्णमा चार गुण ज्यादा छन्। ती गुण यसप्रकार छन्—(१) रूप माधुरी, (२) लीला माधुरी, (३) वेणु माधुरी र (४) प्रिया माधुरी। श्रीकृष्णका यी चार गुण नारायणमा छैनन्।

नारायणको चार हात हुनाको कारण उनी केही कुरूप जस्ता लाग्छन्, त्यसकारण दुइ हातवाला श्रीकृष्ण श्रेष्ठ छन्।

बैकुण्ठवासी नारायण राजा जस्तो भएर अकड़िएर उभिन्छन् जसले गर्दा उनी केही अभिमानी जस्ता लाग्छन्। उनी हामीसँग बोल्दा पनि बोल्दैनन्। कृष्णमा कुनै अकड़ छैन। उनी हामी सबैसँग बोल्दछन्, खेल्दछन् र घुम्दछन्। त्यसकारण हाम्रा कृष्ण श्रेष्ठ छन्।

अतिशय आतुरता भएमा परमात्मा दौड़िँदै आउनुहुन्छ।

गोकुलमा एउटी नववधू आएकी थिइन् जो कृष्णको दर्शन पाउन बड़ो आतुर थिइन्, तर उनकी सासू उनलाई त्यहाँ जानै दिन्नथिन्। आज जब जल चढ़ाउन भनी गइन् तब बाटामा

श्रीकृष्णकै चिन्तन गरिरहेकी थिइन्। बाँके जुल्फिवाला मनमोहन, शिरमा मयूरको प्वाँख, ओठमा बाँसुरी, कानमा मकराकृति कुण्डल र कम्मरमा पीताम्बर धारण गरेका थिए। उनी छुमुक-छुमुक गर्दै गोपीका पछि लागे। बालकृष्णले पछिबाट गोपीको आँचल समाते। गोपीले देखिन्—कृष्ण उनको आँचल समातेर उभिरहेछन्। तीन वर्षको कृष्णलाई गोपीले प्यारसहित आफ्नो छातीमा लगाइन्।

कृष्णले पनि ती गोपीलाई आफ्नो सानो पाखुराले अँगालो मारेर भन्न थाल्नुभो—'तिमी कति राम्री छौ। मलाई लाग्छ मै तिम्रो दुलहा हुँ। रातीका समयमा रासमा आउनू।'

कृष्ण बोल्नमा बड़ो बाठा छन्।

कुनै सामान्य पुरुषले कहिल्यै बाटामा हिँड़िरहेकी कुनै स्त्रीलाई यस्तो भन्छन् हामी एक-अर्काका हौं ?

कृष्ण तर सबैका पिता हुन्, पति हुन् र सन्तान पनि हुन्।

अलिकति विचार गर। यस्तो कोही अरू देव होला जसले बाटामा हिँड़िरहेकी कुनै नारीको गलामा अँगालो मारेको ? परस्त्रीसँग सबै देव डराउँछन् तर बैकुण्ठका नारायण मर्यादा पुरुषोत्तम हुन् र कृष्ण पुष्टि पुरुषोत्तम हुन्।

कृष्णको जस्तो लीला मनुष्य मात्र के कोही अन्य देवले गर्नै सक्तैन। श्रीकृष्ण देवाधिदेव हुन्।

एउटी सखी दूध, दही र नौनी बेच्न भनी निस्केकी छ। कृष्ण-प्रेममा उसको सुद्धि-बुद्धि हरायो। उ भन्न चाहन्थी—'दही लेऊ, नौनी लेऊ' तर उसको अन्तरमा माधव लुकेका छन् त्यसैले ऊ भन्न थाली—'माधव लेऊ, कसैले माधव।'

सोझी गोपी हरिलाई बेच्न हिँड़ी। चौध भुवनको नाथलाई कतारामा लिएर हिँड़ेकी छ। कृष्ण-प्रेममा यति तन्मय भएकी थिई जो उसलाई भानसम्म थिएन ऊ के बोलिरहेकी थिई।

कृष्णले सुन्नुभो—'माधव लेऊ। कसैले माधव लेऊ।' तब उहाँले विचार गर्नुभो, 'अरे, ऊ त मलाई पो बेच्न हिँड़ेकी रहिछ।'

बाटामा श्रीकृष्ण प्रकट भए र सखीसँग भन्न थाल्नुभो—'ए दूधवाली, म गोकुलको राजा हुँ, अलिकति नौनी दिएर जा।'

प्रेमको बाहुल्य भएपछि सताउनमा बड़ो मजा आउँछ। गोपीको हृदयमा प्रेम छ। ऊ कृष्णलाई जिस्क्याउन लागी—'अरे तिमी कसरी कहिलेदेखि गोकुलका राजा भयौ ? गोकुलका राजा चाहिँ हुन् बलराम भैया। म तिमीलाई नौनी दिन्नँ, उनीलाई मात्र दिन्छु। मलाई थाहा छैन नन्दबाबाले यस कालो-कृष्णलाई कहाँबाट उठाएर ल्याएका हुन्। नन्दबाबा गोरा छन् र तिमी काला। उनले तिमीलाई कहाँबाट ल्याए ?' कृष्णले गोपीको धोतीको सप्को समातिहाल्नुभो। गोपी भन्न लागी—'कृष्ण, छोड़िदेऊ मेरो साड़ी। मेरो दूध-दही-नौनी माटो हुने भो र मेरो सासूले मेरो छाला काढ्ने भइन्।'

गोपीले बलपूर्वक आफ्नो सप्को फुस्काई र अगाड़ि बढ्न थाली। पछिल्तिर फर्केर हेर्दा त कृष्ण हुप्प परेर बसेका। गोपीले फर्केर आएर फुल्याउन थाली, 'कृष्ण, नौनी लेऊ, मखन लेऊ, मिश्री पनि लेऊ, जे चाहन्छौ दिन्छु। मेरो ठूलो भूल भयो। अब मान पनि त।'

तर अब कृष्णले किन मान्ने ? उहाँले भन्नुभो—'मलाई केहि पनि चाहिँदैन।' कृष्णले नमानेपछि गोपी अगाड़ि बढ्न थाली। यसपछि पछिल्तिरबाट कृष्णले ढुङ्गा उठाएर यस्तो निशाना लगाएर हान्नुभो जसले गोपीको भुँडुल्को चकनाचुर भयो। यस्तो लीला श्रीकृष्णका सिवाय अन्य कुनै पनि देवले गर्न सक्दैन।

श्रीकृष्ण सबैका पति हुनुहुन्छ। यता श्रीकृष्ण अब घर आएर चुपचाप आमाको काखमा लुक्नुभो। उहाँ यस्तो शान्त, सोझो भएर बस्नुभएको थियो मानौं केही पनि भएकै छैन। त्यो गोपीले आएर यशोदालाई कृष्णको सबै बदमाशीको कुरा लगाई, 'माताजी, तपाईंले कृष्णलाई फुर्क्याइरहनु हुन्छ, तर ऊ बड़ो बदमास भएर गइरहेछ। यसले मेरो ग्राग्रो फोरिदियो, मेरो लुगा बर्बाद गरिदियो।'

कृष्णले भन्न लाग्नुभो 'आमा, मलाई योदेखि बड़ो डर लाग्छ। यो गएपछि म सबै कुरा भन्नेछु।'

कृष्णले आमालाई भन्न लाग्नुभो—'यो गोपी बड़ो कञ्जूस छे। ऊ तीन चार दिनको बासी दही बेचिराखेकी थिई। मैले विचार गरें बिग्रेको दूध-दही बेच्नु हुन्न। यदि कोही गरीब यसलाई खाएर बिरामी पऱ्यो भने ? यस्तो सोचेर मैले उसको भुँडुल्को फोरिदिएँ। म आरोग्य प्रचारक मण्डलको प्रधान पनि हुँ।'

यशोदाले गोपीलाई गाली गर्नुभो—'ए गोपी, बिग्रेको दही-दूध किन बेच्दछेस् हँ तँ ?' कृष्ण हाँस्न लाग्नुभो र गोपी पनि। कृष्ण बोल्नमा बड़ो चतुर हुनुहुन्छ।

कृष्ण भुँडुल्को फोर्नुहुन्छ र पनि प्यारो लाग्छ। उहाँले बाटामा हिँड्ने कुनै पनि गोपीको भुँडुल्को फोर्न सक्नुहुन्छ। यस्तो कोही देव छ जो बाटामा हिँड़िरहेकी कुनै नारीलाई छेड़खानी गर्न सकोस् ? अरू सबै डराउँछन् यदि कुनै नारीको हात पनि छोइयो भने थप्पड़ खानुपर्ला। हाम्रो पूजा कसैले गर्ने छैन।

श्रीकृष्णको लाली—माधुरी दिव्य छ। उहाँको अनुकरण कुनै देवले गर्न सक्दैनन्। श्रीकृष्णको जस्तो आचरण कोही गर्नै सक्दैनन्।

भगवान् नारायण हातमा शङ्ख राख्नु हुन्छ। शङ्ख फुक्ने देव श्रेष्ठ हो वा बाँसुरी बजाउने वाला ?

अन्य देवले हातमा शस्त्रास्त्र लिएका छन्। कसैको हातमा सुदर्शन र कसैको हातमा धनुष-बाण। कसैको हातमा त्रिशूल छ। मानौं यी सबैलाई संसारको डर छ। कृष्ण हातमा शस्त्र लिनुहुन्न।

कृष्णाको एउटा हातमा बाँसुरी र दोस्रोमा मिश्री। शस्त्रधारीरूप श्रेष्ठ हुन् या कृष्ण? हामी कृष्णजीलाईनै श्रेष्ठ भन्दछौं।

कृष्ण सँधैं बाँसुरी बजाउनुहुन्छ। कृष्णाको बाँसुरीलाई जसले सुनेको छ ऊ संसारका प्रति उदास भइहाल्छ। बाँसुरीको धुनलाई सुन्नासाथ राधेकृष्ण-राधेकृष्ण गर्न थाल्छन्। श्रीकृष्णाको वेणुमाधुरी दिव्य छ।

गोपी भन्दछिन्—

मुरली बजाके मेरो मन हर लीन्हो।

एउटी गोपिनीले प्रेम-भरिएको दोष दिन्छिन्—

मुरहर! रन्धनसमये मा कुरु मुरलीरवं मधुरम्।

हे मुरारे खाना पकाउने वेलामा कृपा गरेर बाँसुरीको तान नछोड्दिदेऊ। तिम्रो मुरलीको धुन सुनेर चुल्हामा हालेको सुकेको दाउरा रसमयी भएर रस बगाउन थाल्छ र आगो निभ्दछ। आगो निभेपछि मैले खाना कसरी बनाउन सकूँला।

कृष्णाको बंशीको धून जसका कानमा पर्छ ऊ उसको सेवक भइहाल्छ। त्यसकारण मैले मानिलिएको छु कृष्ण मात्र सर्वश्रेष्ठ हुनुहुन्छ।

कृष्णाको रूपमाधुरीले पनि अनेकौंलाई आकर्षित गरेको छ, निर्गुण ब्रह्मका उपासक स्वामी मधुसूदन पनि श्रीकृष्णाको मनोहर रूपमाधुरीका पछि पागल भएका थिए। उहाँले भनेको छ—

अद्वैतवीथीपथिकैरुपास्याः स्वराज्य सिंहासन लब्धदीक्षाः।
शठेनकेनापि वयं हठेन दासीकृता गोपबधू विटेन॥

अद्वैतमार्गका अनुयायीद्वारा पूजनीय तथा स्वराज्यरूपी सिंहासनमा प्रतिष्ठित हुने अधिकारले युक्त हामीलाई, गोपीहरूका पछि-पछि लाग्ने कुनै हरि नामको शठ छ जसले इच्छा नभएता पनि आफ्नो दास बनाएको छ।

श्रीकृष्णको रूप-माधुरीका पछि कवि रसखान पनि पागल भएका थिए। उनले भनेका छन्—

या लकुटी अरु कामरिया पर, राज तिहूँपुरक तजिडारौं।
आठहुँ सिद्धि नवो निधिको सुख, नन्दकी गाय चराई बिसारौं॥

श्रीकृष्णको रूपमाधुरी दिव्य छ। उनी बैकुण्ठ निवासी नारायणभन्दा पनि श्रेष्ठ हुनुहुन्छ।

यशोदा गर्गाचार्यलाई भन्छिन्—महाराज, भोजनको समय भइसकेको छ, पहिले तपाई भोजन गर्नुहोस्, फेरि अरू कुरा हुँदै गर्छ।

गर्गाचार्य—'म अर्काले बनाएको खाना खान सक्दिनँ। आफ्नो भोजन म आफ्नै हातले बनाउँछु। पहिले म यमुनाबाट जल ल्याऊँ।'

गर्गाचार्यले यमुनामा स्नान गरी जल ल्याए। उनका इष्टदेव थिए चतुर्भुज द्वारिकानाथ। गर्गाचार्यले आफ्नो भगवान् निमित्त खिर बनाउने इच्छा गरे। भगवान्लाई खिर भोग लाउँछु अनि पछि प्रसाद ग्रहण गर्नेछु।

आफूलाई मात्र भनेर बनाई खानाले अन्न होइन पाप खान्छ। त्यसकारण भोजन बनाउनु छ भने भगवान्का निमित्त बनाओ।

जब सेवामा उपयोग होला तब सम्पत्ति सार्थक हुनेछ। आफ्नो शरीरको भन्दा पनि बढ़ी प्रेम प्रभुसँग गर।

यशोदाले सोच्नुभयो 'यी गर्गाचार्य भगवान्लाई खिर नचढ़ाईकन खाँदैनन्। त्यसकारण खिर सेलाउनलाई उनले गर्गाचार्यलाई सुनको थाली दिइन्। खिर सेलाएपछि गर्गाचार्यले तुलसीदल छरेर भगवान्को स्तुति आरम्भ गरे—'

**सशङ्खचक्रं सकिरीटकुण्डलं सपीत वस्त्रं सरसीरुहे क्षणम्।**
**सहारवक्षःस्थल कौस्तुभश्रियं नमामि विष्णुं शिरसा चतुर्भुजम्॥**

हे नारायण ! हे लक्ष्मीपति ! हे बैकुण्ठपति ! खिर ज्युनार होस्।

कृष्णले सोचे—म नै लक्ष्मीपति, वैकुण्ठनाथ हूँ। गुरुजी शायद मैलाई बोलाइरहनुभएको छ। त्यसकारण खानलाई मैले जानैपर्‍यो भनी उनी भाग्दै खिर खाने ठाउँमा आइपुगेर खिर खान थाले।

बाह्र पटक माला जप्ता जति समय लाग्छ त्यतिञ्जेलसम्म भगवान्का सामुन्ने थाली राखियोस्। कृष्णले पनि यो चाहिँ मान्नैपर्‍यो।

गर्गाचार्य बोलिरहेछन्—'ॐ नमो नारायणाय।'

कृष्ण भन्दै थिए—'महाराज, आँखा चिम्लिरहनोस्।'

गर्गाचार्यले बाह्रपटक माला जपेर आँखा खोले तब कृष्णलाई खिर खानमा मग्न देखे। अरे ! अरे यस वैश्य पुत्रले मेरो खिर छोइदियो। 'ए यशोदा हेर, तिम्रो छोरो मेरो खिर खाइरहेछ।'

दगुर्दै यशोदा आइन्। देख्छिन् तब कृष्णले आधी खिर उड़ाइसकेछन् र उनको मुख खिरले लतपत भएको छ। यशोदाले कृष्णलाई हप्काउँछिन्। 'घरमा तैंले खान पाउँदैनस् ? महाराजको खिर तैंले किन खाइस् ?'

कृष्ण—'तपाईं मलाई हप्काइरहनुहुन्छ, म के गरूँ महाराजले पो मलाई खिर खान बोलाउनुभएको थियो।'

गर्गाचार्य—'होइन, होइन मैले वैकुण्ठवासी नारायणलाई बोलाएको थिएँ।'

कृष्ण—'मै हुँ त्यो वैकुण्ठनिवासी नारायण।'

यशोदाजी—'सानों मानिस भएर बूढाको जस्तो कुरा किन गर्छस्। तँ कहाँको नारायण भइस्? वैकुण्ठवासी नारायणका चार हात छन्। छन् तेरा चार हात?'

कृष्ण—'आमा। तपाईं भन्नुहुन्छ भने म चतुर्भुज भइदिऊँ?' यशोदाले विचार गरिन् यदि चतुर्भुज नारायणको रूप यसले धारण गरिदियो भने मानिसहरूले यसलाई यशोदाको छोरो होइन, कुनै जादूगरको छोरो भन्छन्। उनले भनिन्—होइन, होइन, चारै हात नारायणको अपेक्षा मेरो दुइ हातवाला छोरो मुरलीधर राम्रो छ, श्रेष्ठ छ। तिमी जे छौ त्यही भएर बस।

फेरि यशोदाले गर्गाचार्यलाई भनिन्—'यो चकचके बालक छ। यसको कुरा नसुन्नुहोस्। कृपा गरेर फेरि तपाईं खिर बनाउनुहोस्।'

गर्गाचार्य फेरि स्नान गर्न यमुनातर्फ गए।

कृष्ण यशोदाको काखमा बसेर भन्न लागे—'आमा म कोइलीको बोली बोल्न सक्छु।' अनि 'कुहु, कुहु' गर्न थाले। सबैलाई बड़ो आनन्द आयो।

कृष्ण, जब आँगनमा खेल्दछन् तब उनलाई देखेर मयूर पनि आनन्दले नाच्न थाल्छ। कृष्ण आमासँग भन्छन्, म पनि मयूरजस्तै नाच्न सक्छु। उनी ठुमुक-ठुमुक गरेर नाच्न थाले।

यशोदा—'बाबु, तैंले यो नाच कोसँग सिकेको?'

कृष्ण—'आमा, मैले तपाईंको पेटभित्रै सिकेर आएको हुँ। आमा, त्यस मयूरका पछि जो छ त्यो हो को?'

माता—'त्यो मयूरनी हो। तँ जान्दछस् मयूरनी केलाई भन्छन्? मयूरनी मयूरकी दुलही हो।'

कृष्ण—'आमा, मेरी दुलही कहाँ छे?'

कृष्ण आफू अद्‌भुत बाल लीलाले सबैलाई आनन्द दिइरहेछन्।

गर्गाचार्यले फेरि खिर बनाए। कृष्णले ठट्टा गर्ने विचार गरे। उनी आमाको काखमा सुते। यशोदाले सोचिन्—'लौ ठिकै भयो। कृष्ण सुतेको छ, त्यसकारण महाराज शान्तिपूर्वक भोजन गर्न सक्नुहुनेछ।'

गर्गाचार्यले खिरमा तुलसीदल छरिदिए र प्रार्थना गर्नथाले—

त्वदीयं वस्तु गोविन्द .........।

नाथ, म तपाईंको सेवक हुँ। हे नारायण, लक्ष्मीपति! तपाईं छिटै आउनुहोस् र मेरो खिरको प्राशन गर्नुहोस्।

कृष्णले यो सुने तब वहाँ जानलाई छट्पटाए। उनले योगमायालाई यशोदाका आँखामा गएर बस भने र यशोदाका निद्राले घेरेको पनि थिएन कृष्ण दौड़िंदै गर्गाचार्यनजिक आएर खिर खान थाले। गर्गाचार्यले देखे, 'अरे, यो वैश्यबालकले मेरो खिर यस पटक पनि जूठो गरिदियो।'

कृष्णले सोचे 'बिचरा यी ब्राह्मणलाई कहिलेसम्म अल्मल्याइ राखूँ' भनेर आफ्नो चतुर्भुज स्वरूप प्रकट गरिदिए। 'महाराज, तपाईं जुन नारायणको आराधना गरिरहनुभएको छ, त्यो मै हुँ र गोकुलमा कृष्णको रूप लिएर अवतरित भएको छु।' तपश्चर्या सफल भयो।

गर्गाचार्यले सानन्द दर्शन गरे र स्तब्धजस्ता भए। प्रभु मेरो काखमा आएर बसिदिए कति राम्रो हुने थियो भनी उनी सोच्न लागे।

कृष्ण गर्गाचार्यको काखमा बसेर भन्न लागे—'महाराज, अब तपाईं भोजन गर्नुहोस्।'

गर्गाचार्य—'जब मेरा इष्टदेवले मेरो मुखमा गाँस हालिदिनु होला, तब म खानेछु।'

कृष्णले गर्गाचार्यको मुखमा एक गाँस हालिदिए। गर्गाचार्यले ठाने उनको जीवन सफल भयो।

यता यशोदाको निद्रा खुल्यो। उनले कृष्णलाई काखमा देखिनन्। 'अरे कहाँ गयो त्यो?' उनले देखिन् कृष्ण गर्गाचार्यको काखमा बसेको छ?

गर्गाचार्य—'यशोदा तिमीले बड़ो पुण्य गरेकी रहिछौ। मेरा नारायण तिम्रो घरमा पुत्र-रूप भएर आउनुभएको छ।'

कृष्णले विचार गरे—गर्गाचार्यले भण्डाफोर गर्दिए। यशोदाको भाव तर वात्सल्य-भाव हो। वात्सल्य भाव ऐश्वर्य विरोधी हो। कृष्णले सोच्नुभो गर्गाचार्यको कुरा यदि यशोदाका मनमा जम्यो भने मलाई लाड़प्यार गर्ने छैनन्।

म प्रेमदान गर्न र प्रेमरसको पान गर्नका निमित्त मात्र गोकुल आएको छु। उहाँले मायालाई आज्ञा दिनुभो 'मातालाई मेरो वास्तविक स्वरूपको ज्ञान हुन नपाओस्।' यशोदालाई भुल्याउनका निमित्त कृष्णले मायाको आवरण ओढ्नुभयो।

आदिमाया राधिकाजीकै स्वरूप हो। उसले कृष्णको मोह उत्पन्न गराउँछे। वैष्णव मतानुसार मायाका तीन स्वरूप छन्—(१) स्वमोहिका, (२) स्वजनमोहिका (ऐश्वर्यको ज्ञान हुन नदिनलाई) र (३) विमुखजन मोहिका (जो हामी सबलाई फँसाउँदछ, जसले ईश्वरको स्वरूपलाई भुलाउँछ, त्यही विमुख जनमोहिका माया हो)।

अब माखन चोरी लीलाको वर्णन गरौं—

बालकृष्ण दिन-दिनै बढ्दै गइरहेका थिए। गाउँका अन्य गोपबालकहरू पनि खेल्न आइरन्थे। तिनमध्ये केही दुब्ला थिए। कृष्णले त्यस्तै एउटा दुब्लो केटालाई भने—'मधुमङ्गल, तिमी बहुतै दुबला-पतला छौ। खाई पिईकन मजस्तै मोटोघाटो बन।'

मधुमङ्गल—'कृष्ण, हामी बहुतै गरीब छौं। हामी दूध, नौनी कसरी खान सक्छौं?'

कंसको आज्ञा थियो सारा नौनी करको रूपमा उसैलाई बुझाउनुपर्ने। व्रजवासी विचरा सोझा थिए। उनीहरूले आफ्ना बालकहरूलाई नौनी खुवाउनु साटो कंसकहाँ दिनुपर्थ्यो। कंसले सबै नौनी आफ्ना पहलवानहरूलाई ख्वाइदिन्थ्यो।

कृष्णले आफ्ना बाल मित्रहरूसँग भने—'व्रजवासी जो सारा नौनी कंसकहाँ पठाउँथे त्यो अब म हुन दिने छैन। गाउँको नौनी गाउँलेलाई मात्र हुनुपर्छ। हामी नौनीलाई मथुरा पठाउन दिने छैनौं। मधुमङ्गल, तिमी नरोऊ। म स्वयं तिमीलाई नौनी ख्वाउँछु।'

ईश्वरको सदा यही इच्छा हुन्छ जीव आफूसमानै होस्। जीवले ईश्वरसँग प्रेम गऱ्यो भने ईश्वरले पनि उसलाई आफू जस्तै तुल्याउने चेष्टा गर्छ।

मित्र—'मलाई सँधैं नौनी दियौ भने तिम्री आमाले तिमीलाई पिट्ने छिन्।'

कृष्ण—'होइन, होइन म आफ्नो घरको होइन, बाहिरबाट कमाएर तिमीहरू सबैलाई नौनी खुवाउनेछु'।

मित्र—'के तिमी नौनीको चोरी गर्छौ ?'

'अँ, चोरी गर्नुपर्ला। हामी एक मण्डली बनाउनेछौं। उसको नाम हुने छ बालगोपाल चौर्यविद्या प्रचारक मण्डल।'

मित्र—'यदि चोरी गर्दा हामी समातियौं भने ?'

कृष्ण—'मेरा गुरुले मलाई एउटा मंत्र सिकाउनु भएको छ। त्यसको पाठ गर्नाले हामीलाई देख्न पाउँदैनन् र केही गरी समातिएछन् भने पनि छोड्निेछन्।'

मित्र—कृष्ण-कृष्ण, कुन चाहिँ हो त्यो मन्त्र।

कृष्ण—चोरी गर्दा खेरि 'कफल्लम्-कफल्लम्' बोल्दै रहनु। कफल ऋषिले चोर विद्याको प्रचार गरेका थिए। यो मन्त्र उनै ऋषिको हो।

संझिराख त्यो मन्त्र कृष्णले आफ्ना मित्रहरूलाई दिएको थियो, हामीलाई होइन। हामीले कहीं चोरी गर्नुपर्ने हुँदैन। चोरी गर्नु पाप हो।

अहिल्यै देखि भगवान्को सेवा-पूजा, भजन-कीर्तन र उनीसँग प्रार्थना गर—'जब तपाईंले आउने द्वापरयुगमा जन्म लिनुहोला तब मलाई गोप बालक बनाइदिनु।'

यस प्रकार गोप बालकको जन्म भएपछि कृष्णका साथ खेल्नु र कृष्णको आदेश पाएपछि चोरी गर्नु अनि पाप हुनेछैन।

आफ्नै शरीरद्वारा खेलिरहनेले पाप कर्म गरिरहेछ। आत्माका साथ खेल्नेवालाले पाप गर्न सक्दैन। जो ईश्वरसँग प्रेम गर्छ, ऊ ईश्वरका साथ मात्र खेल्दछ। उसको हातबाट पाप हुन सक्दैन।

ईश्वरको उपस्थितिमा मनुष्यले पाप गर्न सक्दैन र यदि पाप भइहालेछ भने पनि त्यसको उत्तरदायित्व ईश्वरमा हुनेछ।

शङ्कराचार्यले शाङ्कर-भाष्यमा भन्नुभएको छ—परमात्माको साक्षात्कार पाउने ज्ञानीका हातहरूबाट पाप हुन सक्दैन। यदि भएछ भने पनि दोष उसको मानिँदैन। जसलाई प्रभुको साक्षात्कार

भएको छैन उसलाई मात्र शास्त्र हो। शास्त्रको आज्ञा र मर्यादा अज्ञानी जीवका निमित्त हो, शास्त्रले चोरीलाई निषिद्ध भनेको छ।

परमात्मा जसलाई अपनाउनु हुन्छ उसका निमित्त सारा जगत् आफ्नो हो। ऊ चोरी गर्नै सक्दैन। अपरोक्षानुभूतिपछि शास्त्रको अस्तित्व रहँदैन।

ब्रह्म साक्षात्कारपछि के शास्त्र र के विधि। सबै कुरा निरर्थक छ।

तात्त्विक दृष्टिले हेऱ्यो भने ईश्वरनै सर्वस्वका स्वामी हुन्। त्यसकारण उनीहरू चोरी गर्न सक्दैनन्। यो त दिव्य लीला हो। गोपिनीहरूलाई परमानन्दको दान दिनलाई यस लीलाको प्रभुले आयोजन गरेको थियो।

शुकदेवजी वर्णन गरिरहनु भएको छ—

आज मण्डलको स्थापना भयो। अब म यस मण्डलको अध्यक्ष बन्नेछु। तिमीहरू सबैले यतिमात्र विचार गर्नु पर्ने छ यी जो गोपिनीहरू दूध-दही-नौनी लिएर घरबाट कहिले बाहिर जान्छन्, कुन बाटोबाट जान्छन् र कतिवेला फर्कन्छन्। बाँकी सबै काम म सम्हाली लिनेछु।

गोपिनीहरू चाहन्छन् कृष्ण उनका घरमा सधैंभरि आऊन्। कृष्णको झलक पाउनका निमित्त गोपिनीहरू कुनै न कुनै बहानाले प्रातःकालमै यशोदाको घर पुग्थे।

गोपिनीहरू यशोदालाई कुरा लाउँथे—'यशोदा, गाईहरूलाई दुहुने समय अघिबाटै तपाईंका कृष्णले बाछाहरूलाई खोलिदिन्छन्, दही-दूध-नौनी चोरेर आफ्ना मित्रहरू र बाँदरहरूमा बाँड़ी दिन्छन्। यदि हाम्रो घरमा उनले केही नभेट्टाए रिसाएर हाम्रा बालकहरू रूवाइदिन्छन्। हामीले दूध-दही-नौनी चाहे जहाँ राखौं, सिकामाथि राखौं तर पनि उनी चोर्छन्। नौनी अंधकारमा लुकाउन चाहे पनि अँधेराले उनलाई छेक्दैन।'

कृष्ण जहाँ-जहाँ जानुहुन्छ वहाँ प्रकाश फैलिदिन्छ।

हामी यदि कृष्णलाई चोर भनिदिन्छौं तब उनी हामीलाई भन्छन्—तँ चोर ! तेरो बाबु चोर! तेरी आमा चोर हुन्। यस घरको स्वामी मै हुँ।

गोपिनीहरूको पोल र यशोदाको उत्तर यस गुजराती गीतहरूमा बड़ो सरल ढङ्गबाट वर्णन गरेको छ। नरसिंह मेहताको हो यो गीत—

यशोदा तारा कान कुँवरने साद करीने वार रे;
आवड़ी धूम मचावे ब्रजमां, नहीं कोई पूछणहार रे ......... जशोदा
शीकुँ तोद्युं, गोरस ढोलयुं, उघाडोने बार रे;
माखन खाँधुँ, ढोली नाख्यूँ, जानकीधुँ आवार रे ......... जशोदा

खाँखाँ खोला करतो हींडे, वीहे नहीं लगार रे;
यही मथवानी गोली फोड़ी, आशां कहिए लाड़ रे ……… जशोदा
मारो कानजी घर हुतो, क्यारे दीठो बहार रे;
दही दूधना माट भर्या छे, बीजे चाखे न लगार रे ……… जशोदा
शाने काजे मलीने आवी, टोली बली दशबार रे;
नरसैंयानो स्वामी स्वामी साँचो, झूठी व्रजनी नार रे ……… जशोदा
वत्सान् मुञ्चन् क्वचिदसमये।
क्वचिद् असमये वत्सान् जीवान् मुञ्चन॥

(भा० १०-८-२८)

आमा के भनूँ तपाईंलाई? गाईहरूलाई दुहुने समयभन्दा अगावै कृष्ण बाच्छाहरूलाई फुकाइदिन्छन्।

समयमा बाच्छाहरूलाई फुकाउने सामान्य गोपाल हो यहाँ तर श्रीकृष्ण हुनुहुन्छ। श्रीकृष्ण समयको पहिल्यै बाच्छालाई अर्थात् जीवलाई मुक्त गर्नमा समर्थ हुनुहुन्छ।

बाछाहरूको अर्थ हो विषयासक्त जीव। वत्स अर्थात् विषयासक्त जीव 'वत्सान् मुञ्चन् क्वचिद समये।'

शास्त्रले मुक्तिका दुइ प्रकार बताएका छन्—क्रममुक्ति र सद्यःमुक्ति।

समय भएपछि जीवलाई जसले मुक्त गर्दछ ती हुन् मर्यादा पुरुषोत्तम राम तर कृष्ण हुन् पुष्टि पुरुषोत्तम। कृष्ण क्रमशः मुक्ति दिनाको अपेक्षा, जीव यदि पात्र छ भने, समयभन्दा पहिले पनि मुक्ति दिनुहुन्छ। जुन जीवमाथि कृष्णाको अनुग्रह छ उसलाई मुक्ति पाउनको निमित्त क्रमको प्रतीक्षा गरिरहनु पर्दैन। यो चाहिँ पुष्टिमार्ग-कृपामार्ग हो।

क्रम-मुक्ति यसप्रकार हुन्छ—जीव शूद्रवर्णमा जन्मेको छ। अब यदि यस जन्ममा यसले चोरी, व्यभिचार आदि नगरी उच्च वर्णहरूले जस्तै राम्री सेवा गर्‍यो भने पछिल्लो जन्ममा उसलाई वैश्य जातिमा जन्म हुन्छ। वैश्यले यदि नीतिपूर्वक जीवन बितायो भने पछिल्लो जन्ममा क्षत्रिय हुने छ। यदि क्षत्रिय जन्ममा उसले क्षत्रिय धर्मको पूरा-पूरा पालन गर्दछ भने अर्को जन्ममा ब्राह्मण हुनेछ।

अब ब्राह्मण सदाचारी भयो भने त्यो अघिल्लो जन्ममा अग्निहोत्री ब्राह्मण हुनेछ। फेरि अघिल्लो जन्ममा हुनेछ ब्रह्मनिष्ठ योगी। यस्ता योगीले सदवर्त्तन, योगाभ्यास र ब्रह्मचिन्तन उत्तरोत्तर बढ़ाउँदै गयो भयो भने पनि उसलाई दुइ-तीन जन्म अरू लिनुपर्छ र यसप्रकार उसको क्रियमाण,

सञ्चित तथा प्रारब्धकर्म निःशेष भएपछि जीव शुद्ध हुनेछ र शुद्ध भएपछि मात्र जीवलाई मुक्ति प्राप्त हुनेछ। यस्तैलाई क्रम-मुक्ति मार्ग भन्छन्।

अब सद्यःमुक्तिको कुरा गरौं। यस प्रकारको मुक्तिमा जन्महरूको कुनै क्रम हुँदैन। भगवान् जुन कुनै जीवमा विशिष्ट अनुग्रह गर्नु हुन्छ, त्यसको मुक्ति हुन्छ, फेरि त्यो जुनसुकै वर्णको पनि किन नहोस्। यदि कोही वैश्य हार्दिकताले भगवद् भक्ति गर्छ भने कृष्ण प्रसन्न भएर उसलाई गोलोक धाममा लैजानु हुन्छ।

श्रीकृष्ण दुहुने समयभन्दा अघिपनि बाछाहरूलाई फुकाइदिनुहुन्छ अर्थात् उहाँले निश्चित समयपूर्व पनि जीवलाई मुक्त गर्न सक्नु हुन्छ। श्रीकृष्ण अनुग्रह अर्थात् पुष्टि-पुरुषोत्तम हुनुहुन्छ। जुनसुकै जीवमा उहाँले अनुग्रह गर्नुहुन्छ, त्यो तत्काल मुक्त भइहाल्छ। जस्ता प्रकारबाट कुनै राजाले जहिले चाह्यो तहिले कुनै व्यक्तिलाई राजा बनाउन सक्छन्। सोही प्रकार श्रीकृष्ण जहिले चाह्यो, कुनै पनि सुपात्र जीवलाई बन्धन मुक्त गर्न सक्नुहुन्छ। परमात्मा प्रेमबलद्वारा कुनै पनि वैष्णवलाई तत्काल मुक्त गर्न सक्नुहुन्छ। श्रीकृष्ण सद्यः मुक्तिका दाता हुनुहुन्छ।

श्रीकृष्ण पुष्टि पुरुषोत्तम हुनुहुन्छ, त्यसकारण उहाँले सद्यःमुक्ति दिनुहुन्छ।

अन्यथा वैश्य, क्षत्रिय, ब्राह्मण, अग्निहोत्री, ब्रह्मनिष्ठ योगी आदि उत्तरोत्तर क्रमिक वर्णहरूबाट नछिरीकन मुक्ति पाईंदैन। यदि कृष्ण कुनै जीवका प्रति दयालु हुनुहुन्छ र कृपा गर्नुहुन्छ भने त्यो जीव सधैँ बैकुण्ठ जान सक्छ।

त्यसो तर भगवान्को साधारण कृपा सबै जीवहरूमा छँदै छ तर कुनै जीवमा उहाँ विशिष्ट कृपा पनि गर्नुहुन्छ। जब कुनै जीव परमात्माको प्रार्थना, धारणा, चिन्तन साधना गर्दा-गर्दा थकित भएर रुन्छ, दीन हुन्छ, तब त्यस जीवमा प्रभुको विशिष्ट कृपादृष्टि पर्छ र त्यस जीवलाई त्यसै जन्ममा मुक्ति हुन्छ। कृष्ण ब्रह्माण्डका स्वामी हुनुहुन्छ। उहाँले चाहनुभयो भने त्यसो गर्न सक्नुहुन्छ।

जीव जब अतिशय साधना गर्दै नम्र बन्दछ, ऊ प्रभुको प्रियपात्र बनेर कृपा पाउँछ। निस्साधन भएर जो साधन गर्छ त्यो श्रेष्ठ हो। निस्साधनको अर्थ हो—सबै कुरा साधन गर्दै पनि मानौं केही पनि गरेको छैन। निरभिमानी बन। कैयौंपटक यस्तो हुन्छ साधना गर्दागर्दा जीव अभिमानी हुन थाल्छ। यस्तो भयो भने उसको पतन हुन्छ।

यशोदाले गोपिनीहरूलाई भनिन्—'यदि मेरो कृष्णले तिम्रो घरमा आएर केही पनि बदमासी गऱ्यो भने उसलाई हप्काउनू।'

गोपी—'आमा, हामीले उनलाई के हप्काउने, उनै हामीलाई हप्काउँछन्। हिजो उनी मेरा घर आएका थिए। म उनलाई समात्न भनी गएकी उनी यसरी भागे उनका पछि-पछि दगुर्दै थाकें र जब मैले उनलाई समात्न सकिनँ तब टाढ़ाबाट बूढ़ी औंला देखाएर मलाई जिस्क्याउन लागे।'

एउटी अर्की सखी—'माता, तपाईंका कृष्ण नौनी चोरी गर्दछन्।'

यशोदाले उसको कानजिकै गएर भनिन्—'ए अलि बिस्तारो बोल। यो कुरा फैलियो भने कृष्णलाई कन्या कसले देला?'

गोपी—'कृष्णले जे मागे पनि दिने थियौं, तर उनी चोरी किन गर्छन्?'

यशोदाले कृष्णलाई हप्काउन खोजिन् तर फेरि सोचिन्, यदि उसलाई हप्काएँ भने डराउला।

गोपिनीहरूका सबै इन्द्रियहरू आफ्नोतर्फ खिँचेर परमानन्दमा सराबोर पारी उनीहरूलाई वैकुण्ठमोक्षको दान गर्नका निमित्त श्रीकृष्णको यो लीला हो।

यशोदा आमाले कृष्णलाई संझाउन लागिन् जो उसले आफ्नै घरको नौनी खानुपर्छ।

कृष्ण—'मलाई घरको नौनी मन पर्दैन, घरको नौनी खाएँ भने थोरै भइहाल्छ। त्यसकारण म बाहिर कमाएर खान्छु। गोपीको नौनी बड़ो मीठो हुन्छ।'

सखीहरूले भने—'आमा, यस नौनी चोरलाई धेरै प्यारो नगर।'

शुकदेवजी बड़ो विवेकसाथ कथा भन्नुहुन्छ—श्रीकृष्ण चोर हुनहुन्छ—भनेको होइन। तर "इति होचुः" यसप्रकार व्रजका गोपिनीहरूले यशोदासँग नौनी चोरी लीला भन्दथे। यस्तो भनिएको छ।

आमाले सोधिन्—कृष्णको आगमन र नौनी चोरीको तिमीलाई खबर दिइन्छ क्या?

गोपिनीहरू—'अँ, कहिले-कहिले उनी आउने समाचार सपनामा पनि आइहाल्छ। जब हामी सुत्न जान्छौं तब वहाँ पनि कृष्ण देखिन्छ। ऊ सपनामा पनि आइरहन्छन्।'

वैष्णव जब सुत्छन् तब कृष्णलाई पनि आफ्नासाथ राखेर सुत्छन्। ठाकुरजीलाई साथमा राख्नाको अर्थ हो जबसम्म निद्रा आउँदैन तबसम्म 'हरे कृष्ण, हरे कृष्ण' को जप गर्नू।

ओछ्यानमा गएपछि यदि कुनै वस्तु संझियो भने मानिलेऊ तिम्रो मन त्यही वस्तुमा फँसेको छ? कति तर ओछ्यानमा सुत्दा पनि अघिल्लो दिनको कारोबार, लेनदेन, हिसाब-किताब आदिका बारेमा सोचिरहन्छन्। लोभीको मन द्रव्यमा, कामीको मन नारीमा, दुष्ट व्यक्तिको मन लड़ाइँ-झगड़ामा फँसिरहन्छ। ओछ्यानमा तर उसले सबै कुरा बिर्सिएर 'हरेकृष्ण, हरेकृष्ण' को जप गर्नुपर्छ।

एउटी गोपीले भनी—ओछ्यानमा पनि मलाई कृष्णकै संझना भइरहन्छ। ऊ घरमा नभए पनि उसको तसबीर आँखाबाट टाढा हुँदैन।

लालाको नाउँ अमृतभन्दा पनि ज्यादा मीठो छ।

मलाई तर 'कृष्ण-कृष्ण' भन्ने बानी जस्तै भइरहेछ।

यो चाहिँ मानिसहरूको स्वभाव हुन्छ दिनचर्याबाट निवृत्त भएपछि ओछ्यानमा पल्टिएमा प्रिय विषय-वस्तुको संझना उसलाई आइरहेछ।

मलाई अरू तर कोही संझनै हुँदैन। कृष्ण, कृष्ण भन्दै उसैको दर्शन गर्दै निदाएपछि सपनामा पनि उही आइरहने भयो। सपनामा मैले कृष्णलाई आफ्ना मित्रहरूका साथ मेरो घरमा आएको, उसले नौनी चोरेको र मित्रहरूका बीच बाँडेको देखें।

जुन कुनै वस्तुमा मन फँसेको हुन्छ सपनामा त्यो संझना हुन्छ। मनको परीक्षा सपनामै हुन्छ।

सच्चा वैष्णवको मन कृष्णसँगै बाँधिएको हुन्छ। त्यसैले सपनामा पनि उही आउँछ। सपनामा कृष्ण देखा परे भने अनि संझ तिमी सच्चा वैष्णव भयौ। अधिकारीलाई प्रभुको पहिलो झाँकी सपनामै हुन्छ।

गोपीको मन श्रीकृष्णमा गएर फँसेको छ। 'आमा, मलाई लाग्यो कृष्ण मेरो घर अवश्य आउनेछन्। बिहानैदेखि म पागल जस्ती भएकी थिएँ। आनन्दमा म यति बौलाही जस्ती भएकी थिएँ र चुल्होमा दाउराका साथ वेलना पनि सल्काइदिएछु।'

एक अर्की गोपिनी वर्णन गर्छिन् :

घरमा कृष्ण सबैको चाहना भएको छ, आफ्ना जेठाजुलाई खाना दिइरहेकी थिएँ। मन कृष्णको मीठो संझनामा हराएको थियो। जेठाजुले मसँग मुरब्बा माग्नुभयो। ताखाबाट मुरब्बाको हाँड़ी झिकेर पस्कन लागें, मुरब्बा बड़ो रसिलो थियो र फेरि मीठो वस्तु जेसुकै भए पनि मलाई कृष्णलाई दिन मन लाग्छ। कृष्णलाई मुरब्बा कत्तिको मन पर्ने हो। यस समयमा यदि कृष्ण आइदिए जेठाजुकासाथ उसलाई पनि खान बसाल्ने थिएँ। म उसलाई मुरब्बा दिने थिएँ।

माता, कृष्ण आए। यस इच्छामा म यसरी बगेर गएँ जो बौलाही जस्ती भएर मुरब्बाको हाँड़ीलाई तावामा चढ़ाउनुको साटो आफ्नै बच्चा माथिनै राखिदिएँ।

मेरा पति पनि कृष्णको प्रेममा यस्तो पागल हुनुभयो जो सारा कामकाज छोड़ेर उसैको रटना गर्न थाल्नुभएको छ।

ईश्वरका साथ यदि प्रेम गऱ्यौ भने उसलाई कहिल्यै बिर्सिन सकिँदैन।

एउटी अन्य सखीले भनी, आमा, कृष्णले तर आज मेरो इज्जत राखिदिए।

यशोदा—के कुरा भएको थियो र सखी ?

सखी—'मेरो स्वभाव यस्तो हुन गयो जो खाना बनाउँदा पनि म 'हरे कृष्ण, हरे कृष्ण' जपिरहन्छु। आज मेरा घरमा पाहुना आएका थिए। मेरा ससुरा बड़ो क्रोधी स्वभावको हुनुहुन्छ। उहाँले मलाई भन्नुभयो, आज पाहुनाले भोजन गर्नेछन्, त्यस कारण सावधानीपूर्वक भोजन गराउनू। हामी बगैंचातिर गइरहेछौं। दुइ बजे फर्केर भोजन गर्नेछौं। कृष्ण जपमा कहीं खाना नबिगार्नू। म भोजन बनाउँदै सोचिरहेकी थिएँ भोक्ता परमात्मा हो। भोजन त्यस रसरूप प्रभुका निमित्त बनाइने हो र म 'हरे कृष्ण' को जप गर्दै खाना बनाउन थालें।'